॥ श्री हरि ॥

# सन्त श्री डोंगरेजी महाराजको कथाको प्रारम्भमा हुने दैनिक प्रार्थना

करारविन्देन पदारविन्दं मुखारविन्दे विनिवेशयन्तम्।
वटस्य पत्रस्य पुटे शयानं बालं मुकुन्दं मनसा स्मरामि॥ १॥

## गोविन्द दामोदर स्तोत्रम्

श्रीकृष्ण गोविन्द हरे मुरारे हे नाथ नारायण वासुदेव।
जिह्वे पिवष्वामृतमेतदेव गोविन्द दामोदर माधवेति॥ २॥

विक्रेतुकामा खिल गोपकन्या मुरारिपादार्पितचित्तवृत्तिः।
दध्याधिकं मोहवशादवोचद् गोविन्द दामोदर माधवेति॥ ३॥

गृहे गृहे गोपवधूकदम्बाः सर्वे मिलित्वा समवाय योगे।
पुणनि नामानि पठन्ति नित्यं गोविन्द दामोदर माधवेति॥ ४॥

सुखं शयाना निलये निजेऽपि नामानि विष्णोः प्रवदन्ति मर्त्याः।
ते निश्चितं तन्मयतां व्रजन्ति गोविन्द दामोदर माधवेति॥ ५॥

जिह्वे सदैवं भज सुन्दराणि नामानि कृष्णस्य मनोहराणि।
समस्त-भक्तार्ति-विनाशनानि गोविन्द दामोदर माधवेति॥ ६॥

सुखावसाने त्विदमेव सारं दुःखावसाने त्विदमेव ज्ञेयम्।
देहावसाने त्विदमेव जाप्यं गोविन्द दामोदर माधवेति॥ ७॥

श्रीकृष्ण राधावर गोकुलेश गोपाल गोवर्धननाथ विष्णो।
जिह्वे पिवस्वामृतमेतदेव गोविन्द दामोदर माधवेति॥ ८॥

जिह्वे रसज्ञे मधुर-प्रिया त्वं सत्यं हितं त्वां परमं वदामि।
आवर्णयेथा मधुराक्षराणि गोविन्द दामोदर माधवेति॥ ९॥

त्वामेव याचे मम देहि जिह्वे समागते दण्डधरे कृतान्ते।
वक्तव्यमेवं मधुरं सुभक्त्या गोविन्द दामोदर माधवेति॥ १०॥

पूज्यपाद श्रीरामचन्द्र केशव डोंगरेजी महाराज

## यसबारे केही कुरा

'म व्यास हूँ र वासुदेव हुँ' भने भगवान्ले। व्यासले वासुदेवको चरित्र चित्रण गरे भागवतमा। दर्शन लेख्ता हेतु दिन्छन् ब्रह्मको अस्तित्वबोधलाई जन्माद्यस्य यतः भनेर सूत्रमा, उनै व्यास भागवतमा जन्माद्यस्य यतः कै भाष्यबाटै शुरू गरेर रच्दछन्। भगवान् आफूलाई आफैं चिनाउँछन् भागवतमा। व्यास र वासुदेवको रूपमा। त्यसैले व्यासलाई परितृप्ति भयो भागवत लेखेर। भागवतमा विद्वान्को पनि परीक्षा हुन्छ, यो महाकाव्यात्मक विधामा रचिएको छ। उहाँ प्रेमा भक्तिको सर्वाधिक सौन्दर्य परिलक्षित हुन्छ। भागवत हाम्रो परत्र सपार्न र वरत्र बनाउन दुवै मार्गका लागि अति उपयुक्त छ। भक्ति यस्तो तत्व हो जहाँ ऊँचनीच, जातिपाति र तलमाथिको भेदभाव रहन्न। त्यसैले यसलाई सार्वभौम धर्म भन्न सकिन्छ। पराभक्तिमा केन्द्रित गरी भागवत रससागर बनेको छ; यसको रहस्य स्वसंवेद्य हुन्छ। रसमाधुरीमा डुबेको रसनाले मात्र त्यसको रस जान्दछ जो अनिर्वचनीय हुन्छ। शब्द त्यसको सामीप्यसम्म पुग्छ, सरस्वती पनि मधुको माधुर्य भन्न सक्तिनन् भने मह र मिस्त्रीको भेद शब्दले व्यक्त गर्न सक्दैन। भगवान्को नाम लिएर प्राप्त हुने भक्तको आनन्द शब्दगम्य हुन्न।

यस्तो महत्त्वपूर्ण ग्रन्थरत्नलाई भक्तशिरोमणि सन्तसमाजका परमप्रेमास्पद श्री १०८ रामचन्द्र केशव डोंगरेबाबाले भागवतको रहस्य हृदयंगम गरी सरल सरस रूपमा श्रीकृष्ण चरित्रामृतलाई सर्वसाधारणको लागि लुटाइदिनुभो। करुणामूर्ति बाबाले संस्कृत नजान्नेलाई पनि राम र कृष्णको चरित्र यत्रतत्र प्रचार गरी जीवन यही कार्यमा समर्पित गर्नुभयो। मानवमा कर्तव्यपरायणता र चरित्र विकास गराउन स्वयं उदाहरण बनी अद्‌भुत व्यक्तित्वले समाजलाई सुमार्ग देखाइदिनुभयो। साधुको हृदय नौनीभन्दा पनि कमलो हुन्छ। जीवजगत्‌को पीरमै पग्लिदिन्छ। उहाँका प्रवचनले पापीको पाषाण हृदयलाई पनि पगाल्छ। रसप्रवाह अभिषिक्त हुँदा संसार वृक्षको बीज वज्रहृदयमा पनि उम्रन्छ। उहाँका मुखारविन्दबाट झरेका रसका केही बुँद कर्ण कुहरमा परेर भाग्यशाली हुनपुगेको छु म पनि।

बाबाका श्रोतावर्गबाट एक नेपाली सन्तका हृदयमा अर्को करुणाको मूल फुट्यो ती व्यक्ति हुनुहुन्छ पूज्यपाद् श्री ढुण्ढिराज कोइराला। बाबाका प्रवचन र सप्ताह सुनी भावुक हृदयमा उहाँको ग्रन्थरत्न देख्नासाथ यसलाई नेपालीमा अनुवाद गरी धर्मपरायण समाजको उपकारका लागि उहाँ त्यस कार्यमा तत्पर हुनुभयो। हुनत यसका अनुवादक श्री ढुण्ढिराज कोइराला स्वयं गृहस्थ हुनुहुन्छ तर उहाँलाई म एक गृहस्थ साधु संझन्छु। १९९३ सालदेखि म उहाँसँग सम्बन्धित छु। बिवाह पनि शिवपुरीबाबाको आज्ञा शिरोपर गरेरै गर्नुभयो। उहाँको भगवान्ले धेरै परीक्षा लिए, दुःखका कति थप्पड़ परे तर धैर्य्यमा अडिग रहेको देखेको छु। श्री बी० पी० कोइरालाले आफ्नो जीवनीमा नाम लिनुभएका व्यक्ति उहाँ स्वयं हुनुहुन्छ जो नदीमा फाल हान्नु भएन। उहाँ त्यही वेलादेखि आफूले

नठम्याई काम नगर्ने व्यक्तित्व बोकेर उभिनुभएको छ। राग-द्वेषविमुक्त र जो-जति मिलेको छ त्यसमा सन्तुष्ट हुने स्वभावले उहाँलाई महान् बनाएको छ। श्रीमद्भागवत डोंगरेबाबाले आफ्नो व्याख्यानमा जे-जति उद्गार गर्नुभयो त्यो संस्कृतज्ञलाई पनि अनुवाद गर्न मुश्किल पर्ने कुरा जस्तो लाग्छ; तर, अंग्रेजी भाषामा स्नातक कोइरालाजीले यति मीठो, सरल र सरस अनुवाद गर्नु भएर भविष्यमा आफ्नो इतिहास बनाउनु भएको छ। भावविभोर नभई, भक्तिमा तल्लीन नभई यस्तो गहन धार्मिक काममा खटिन सकिन्न। समाजको चरित्र-निर्माण र लोक-कल्याणको लागि उहाँको पवित्र ध्येय भगवान्द्वारा पूरा भयो। यो प्रशंसनीय कार्यको मूल्यांकन त्यही समाज र लोकले गर्नेछ।

आफ्नो कर्तव्य पूरा गरी सामर्थ्यहीन भएकोले प्रकाशनको लागि उहाँ प्रतीक्षारत हुनुहुन्थ्यो र भगवान्को इच्छा भए पस्केको भोजन गर्न कोही आउला भन्ने उहाँको दृढ़ विश्वासलाई साकार पारेर खटाइनु भएका सेठ चिरञ्जीलाल थैलो बोकेर यो प्रकाशन गर भन्न जुट्नुभयो। धनको सद्गति हो दान, त्यो सत्पात्रमा भएको यो सात्त्विक दानले समाजको कल्याण हुनेछ भन्ने कुरामा म पूर्ण विश्वस्त छु। म लेखक, अनुवादक र प्रकाशक तीनै महापुरुषप्रति श्रद्धावनत भई आभार व्यक्त गर्दछु। सबै विद्वान्, विदुषी, साधारण साक्षर व्यक्ति, निरक्षर भक्त, श्रोता र समाज यसबाट लाभान्वित होउन् भनी परमेश्वरसँग प्रार्थना गर्दछु।

भगवान् पशुपक्षीको, कीटपतङ्गको आवाज पनि बुझ्दछन्। यो चाहिँ मान्छेको बोलीमा छ। कोही मर्दा पर्दा पण्डित फेला परेनन् भनेर चुप लाग्नु परेन। नेपाली भाषाको भागवत सुनाए पनि हुन्छ। लीलामय पुरुषोत्तमको चरित्रामृत पान गर्न यसले अति ठूलो सहयोग गरेको छ भन्ने मलाई लाग्दछ। यो ठूलो गुण लगाएर हामीलाई उहाँले चिरऋणी पार्नुभएको छ। कोटिकोटि नमस्कार छ, हिजो, आज र भोलि समेत मानवको कल्याणका लागि निःस्वार्थ समर्पित हुने ती महापुरुषमा।

—चूड़ानाथ भट्टराय

२०४८-११-१

●

# भूमिका

द्वापरयुग सकियो, कलियुगको प्रादुर्भाव भयो। यसका साथसाथै शुद्ध मानव-समाजलाई बिथोल्न उसले धार्मिक कुरीति, नैतिक अवनति, रीस, राग, द्वेषजस्ता अवगुणहरू समेतलाई पछि लगाएर ल्यायो। यता जीवहरूको स्थितिमा पनि कुनै सुधार नभएको देखेर महर्षि व्यास बहुतै चिन्तित हुनुभयो। यही अवस्थामा नारदजी उहाँको आश्रममा घुम्दै-फिर्दै आइपुग्नु भएका बखत व्यासजीलाई उहाँको चिन्ताको कारण पत्ता लगाइदिएर भन्नुभयो— 'हे मुनिश्रेष्ठ ! तपाईंले धर्म, अर्थ, काम, मोक्षका बारेमा जति राम्ररी वर्णन गर्नु भएको छ त्यस किसिमले कृष्ण भगवान्‌को वर्णन गर्नुभएको छैन। त्यसकारण भगवान्‌को प्रख्यात सुयशको वर्णन गर्नुहोस्। यसैबाट शान्ति पाउन सकिन्छ र तपाईंको चिन्ता पनि हट्ने छ।' यस किसिमबाट आश्वासन पाएपछि व्यासजीले ज्यादै सोच-विचार गरी उपर्युक्त दुर्गुणहरूका निवारणार्थ, मानव मात्रको कल्याणका निमित्त सबै शास्त्रहरूको निचोड़ भगवान्‌हरूको गुणगान सहितको श्रीमद्भागवतमहापुराणको रचना गर्नुभयो।

यो महत् ग्रन्थको उपयोगिताको क्रममा अद्यावधि पनि विद्वत् समाजले कथा पुराण भनेर चलाएका छन्। तर सर्वसाधारणमा भने जति प्रचार-प्रसार हुनुपर्छ त्यति हुनसकेको छैन। यसको मुख्य कारण संस्कृतमा लेखिएकोले हो, जो सर्वसाधारणलाई बुझ्न कठिन छ। त्यसकारण आजको समाजलाई लोकभाषा नेपालीमा उक्त ग्रन्थको महत्त्व, रहस्य र साथ-साथै पुराणमा उल्लेख गरिएका मुख्य कथाहरू पनि समावेश गरेर पुस्तकाकारमा प्रकाशित गर्न पाएमा बहुतै लाभदायक हुने संझी म त्यस किसिमको प्रवचन गर्ने कुनै संत महात्माको खोजीमा थिएँ।

भाग्यवशात् मेरो उपर्युक्त विचारसँग मिल्दो-जुल्दो किसिमले यस ग्रन्थको प्रचार-प्रसार पूज्यपाद श्रीरामचन्द्र केशव डोंगरेजी महाराजले भारतको कुना-कुनामा घुमेर भागवत कथाको रसपान लाखौं मानिसलाई गराउनु भयो। यसै क्रममा उहाँको सो प्रवचन २०४४ साल फागुनमा काठमाण्डुको वनकाली वेद विद्याश्रमको प्रांगणमा पनि भएको थियो। सो सुअवसरमा मैले पनि उहाँको सप्ताहव्यापी प्रवचन सुन्ने मौका पाएको थिएँ।

उहाँको भनाइको शैलीमा श्रोतावर्गलाई आकर्षण गर्ने शक्ति थियो। श्रीमद्भागवत्‌को वास्तविक रहस्य र महत्त्वलाई श्री डोंगरेजीले आफ्नो स्पष्ट, सुमधुर, सरल र सबैलाई मुग्ध पार्ने भाषामा प्रवचन गरेर उद्घाटित गर्नुभएको छ। उहाँको प्रवचन उपदेशात्मक, घतलाग्दो र श्रीमद्भागवतको आधारमा मात्र भएको छ। मूल भागवत् ग्रन्थ संस्कृतमा भएकोले पढ़ेर पार लाउन नसकिने, कठिन र बुझ्न पनि संस्कृत नजान्नेलाई गाह्रो छ। त्यसकारण पाठक र श्रोतावर्गलाई राम्ररी बोध हुन जावोस् भन्ने ध्येयले परिआएको जटिल विषयलाई पटक-पटक उल्लेख गरी सबैलाई बुझिने उदाहरण, चरित्र-चित्रण र सान्दर्भिक घटनाको उल्लेख गरेर संझाउने चेष्टा साधारण बोलीचालीका भाषामा उहाँले गर्नु भएको छ।

यही प्रवचन सुनेर र उहाँको प्रवचनको गुजरातीबाट भएको हिन्दी अनुवादको पुस्तक पढ़ेर नेपाली भाषामा प्रचार-प्रसार गर्न पाए श्रीमद्‌भागवतको गूढ़ रहस्य सबैमा बोध भई जनमानसमा भागवतप्रति श्रद्धा बढ्न गएमा कल्याणकारी हुँदो हो भन्ने लाग्यो। सोही पुस्तकको आधारमा नेपाली भाषामा अनुवाद गर्ने प्रेरणा श्रीकृष्णप्रभुबाट पाएँ र करीब एक वर्षभित्रैमा अनुवाद समाप्त पनि गरें।

प्रवचन हिन्दी भाषामा भएको हुनाले नेपाली भाषामा अनुवाद गर्दा केही फरक र त्रुटि हुनु स्वाभाविक हो तापनि सकेसम्म उहाँको भाव र विचारको तादात्म्यतामा फरक नहुनदिन प्रयास गरेको छु। प्रवचनबाहेक पुस्तकमा उद्धरण भई आएका श्लोक, भजनहरू यथावत् यथास्थानमै रहेका छन्। यस अनुवाद क्रममा पाठक वर्गहरूबाट कुनै त्रुटि सूचित गरिन्छ भने आगामी संस्करणमा सुधार गर्नेछु, सो विचार हुन्थ्यैछ।

यसो तर कतिपय महान् विद्वान् र महान् मनीषिहरूबाट श्रीमद्‌भागवतका टीका-टिप्पणीहरू आफ्ना-आफ्ना समयमा संस्कृत वाङ्मयमा भइआएका छन्, तर दीर्घकालदेखि संस्कृत लोकभाषा नहुनाको कारण ती अब सुलभ पनि छैनन् र पाइहालियो भने पनि सबैले बुझ्ने छैनन्। तसर्थ श्रीमद्‌भागवतको रहस्य र महत्त्व बुझ्न यो अनुवादित पुस्तक एउटा आधार हुन गएर मूल संस्कृतको दैनिक पाठपट्टि रस बसाई चित्त निर्मल गराउन बाटो बनाइदिनेछ भन्ने मलाई पूर्ण विश्वास छ। मूल संस्कृतको अर्थ बुझ्नका निमित्त हाम्रै नेपाली भाषामा श्रद्धेय पं० वासुदेव भट्टराईज्यूबाट अनुवादित भएको सम्पूर्ण श्रीमद्‌भागवतको अध्ययन भएमा वास्तविक आनन्द र रसास्वादन झन् बढ़ता लिन पाइनेछ। यस सम्बन्धमा सो पुस्तक बहुतै सरल र पढ्न योग्य छ।

*श्रीमद्‌भागवतको महत्व र महिमा :*—श्रीमद्‌भागवत त्यो महापुराण हो जसको अध्ययन मनन गर्नाले हृदयमा अद्‌भुत भाव उदय भएर आउँछ। मन क्रमैसँग निर्मल भएर जान्छ। यसको सेवन हुँदादेखिनै भक्तिका प्रभावले ईश्वरलाई आफ्नो हृदयमा अविचल रूपबाट स्थापित गरिलिन मन लाग्छ। यसलाई पढ़ेर र सुनेर मानिसलाई ईश्वरको वास्तविक ज्ञान प्राप्त भएर यो दृढ़ निश्चय हुन जान्छ त्यो के हो भने यस संसारलाई रच्ने र पालन गर्ने कुनै सर्वव्यापक एक शक्ति छ जसलाई मानिसले ईश्वर, ब्रह्म, परमात्मा आदि अनेक नाउँहरूबाट संबोधन गर्छन्। यसको बखान गरिनसक्नु छ। छोट्करीमा स्वयं व्यासजीले प्रारम्भिक ३ श्लोकहरूमा उद्‌घोष गर्नु भएर भन्नुहुन्छ—जसबाट यस संसारको सृष्टि, पालन र संहार हुन्छ, जो त्रिकाल सत्य छ र जो आफ्नो प्रकाशद्वारा अन्धकारलाई सदा टाढ़ा राख्छ त्यस्ता परम सत्यको हामीले ध्यान गरौं। श्री मद्‌भागवत पुराणलाई स्वरूपमा ईश्वरावतार मानिएको छ, यसमा शुद्ध अन्तःकरण भएको कसैको डाह नगर्ने सत्पुरुषहरूले जान्नुपर्ने परमात्माको त्यस वास्तविक वस्तुको निरुपण भएको छ जो सदा कल्याणकारी छ। यसमा आधिदैविक, आधिभौतिक र आध्यात्मिक—यी तीनै प्रकारका ताप मेटाइदिने शक्ति छ। ईश्वरको ज्ञान र उहाँको भक्तिको परम-साधन—यी दुइ पदार्थलाई जसले प्राप्त गर्न सक्यो त्यसलाई अरू वस्तुहरू पाउन केही कठिन हुँदैन। यी

दुवै पदार्थ श्रीमद्‌भागवतको अध्ययन र मननद्वारा पूर्णरूपले पाइन्छ। त्यसकारण यो पवित्र ग्रन्थ मनुष्य मात्रको निम्ति उपकारी हो। जबसम्म मानिसले भागवतको अध्ययन गर्दैन, उसको यसमा श्रद्धा हुन जाँदैन, त्यतिञ्जेलसम्म ऊ ज्ञान, भक्ति र वैराग्यको यस विशाल समुद्रको वास्तविक गहिराइमा पुग्न सक्दैन। एउटै परमात्माको वास प्राणी-प्राणीमा छ भन्ने स्पष्ट ज्ञान भागवतको मननबाट हुन आउँछ। उसलाई अधर्म गर्न मन लाग्दैन, अरूलाई दुःख दिनु आफूले दुःख पाए सरह भन्ठान्दछ, स्वभावैबाट दया-धर्मको पालन गर्न थाल्छ, सत्य धर्ममा स्थिर हुन्छ र कुनै अहिंसक प्राणीमाथि जाइलाग्ने इच्छा गर्दैन। मानिसहरूमा परस्पर प्रेम र प्राणीमात्रका प्रति दयाको भाव स्थापित गर्न चाहन्छ। अन्त्यमा यस महापुराणको महिमा र गरिमाको वर्णन गर्दै व्यासले भन्नुभएको छ—हे भक्तजन ! यो श्रीमद्‌भागवत वेद रूप कल्पवृक्षको पाकिसकेको फल हो। श्री शुकदेवरूपी सुगाद्वारा पारित भई चाखिएको हुनाले यो परमानन्दमयी अमृतले परिपूर्ण छ। यस फलबाट फ्याँकिने वस्तु जस्तो बोक्रा, कोया आदि अलिकति पनि केही छैन, जसलाई मूर्तिमान रसमात्र भन्ठान। शरीरमा चेतना रहेसम्म यस दिव्य भागवत रसको निरन्तर बारम्बार पान गर्दै जाऊ। यस्तो फल पृथ्वीमा मात्र सुलभ छ, अन्यत्र पाउन गाह्रो छ।

उपर्युक्त कल्याणकरी कुराबाहेक यो श्रीमद्‌भागवत आशीर्वादप्रद ग्रन्थ मानिएको छ। यसको पारायणबाट लौकिक, पारलौकिक सबै किसिमका सिद्धिहरू पनि पाउन सकिन्छ। उदाहरणार्थ—नारायण कवचबाट ( स्कन्ध ६ अध्याय ८ ) सारा विघ्नहरूको नाश तथा विजय, आरोग्य र ऐश्वर्यको प्राप्ति, पुँसवत-व्रतबाट ( स्कन्ध ६ अध्याय १९ ) समस्त कामनाहरूको पूर्ति; गजेन्द्र-स्तोत्रबाट ( स्कन्ध ८ अध्याय ३ ) ऋणमुक्ति; शत्रुबाट छुटकारा र दुर्भाग्यको नाश; पयोव्रतबाट ( स्कन्ध ८ अध्याय १६ ) मनोवांछित सन्तानको प्राप्ति; सप्ताह श्रवण पारायणबाट प्रेततत्त्वबाट मुक्ति; यी सबै साधनहरूलाई भगवत्प्राप्तिका निम्ति निष्काम भावले प्रयोग गरेका खण्डमा भगवत् प्रेम सहजै पाउन सकिन्छ।

*मेरो विनम्र अनुरोध*—वर्तमान युग भौतिक वातावरणले जेलिएको छ। वाह्यसुख-सम्पत्ति प्राप्त गर्न मानिस-मानिसमा होड़ मच्चिएको छ। यसले गर्दा आध्यात्मिक ज्ञान उपार्जनमा हामी समय पाउन्न भन्छौं। तर शारीरिक सुख-सन्तोषले मात्र अन्तरात्माले शान्ति नपाउने हुँदा शान्तिका निमित्त मानसिक तथा नैतिक उत्थान हुनु अति आवश्यक छ। यसका निमित्त श्रीमद्‌भागवत, श्री बाल्मीकि रामायण, श्रीमद्‌भागवत गीता, तुलसीकृत रामायण जस्ता धार्मिक ग्रन्थहरूको अवलोकन, अध्ययन, चिन्तन, मनन हुनु अति आवश्यक छ। त्यसकारण २४ घण्टामध्येबाट केही समय झिकेर भगवत भजन र कीर्तनपट्टि लागौं। यस अनुवादित ग्रन्थले पनि शहर, ग्राम, पाखा-पर्वतका अलिकता पनि साक्षर भएका नागरिक, बालक-बालिका, युवा-युवती, बूढ़ा-बूढ़ी सबैलाई बिहान-बेलुका कोठा, अँगेना, आँगनमा बसेको फुर्सदका समयमा दैनिक पठन-पाठन गरी धार्मिक चर्चा गर्ने, कथा सुन्ने-सुनाउने सुअवसर दिने छ भन्ने मेरो धारणा छ र केही अंशमा भागवत पुराणको रसास्वादन गराउने स्रोत पनि हुनेछ। यति चाहिँ अवश्य गरौं, साथमा जाने यिनै संस्कारहरू मात्रै हुन्।

प्रकाशन सम्बन्धमा पाएको सहयोगका निमित्त पनि सहभागीहरूलाई हार्दिक कृतज्ञता प्रकट गर्न चाहन्छु। श्रीमद्भागवत रहस्यको हिन्दी संस्करणका प्रकाशक प्रोप्राइटर श्रीमुकेशकुमार गर्गजीले नेपाली भाषामा अनुवाद गरेर प्रकाशन गर्न सहर्ष स्वीकृति दिनुभएकाले उहाँलाई सहर्ष धन्यवाद छ। २०४५ साल फागुन महीनामा तयार भइसकेको पाण्डुलिपिका निमित्त २०४८ साल फागुन ६ गतेका दिन मात्र श्रीकृष्णभक्त, धर्मानुरागी उद्योगपति श्री चिरंजीलाल अग्रवालजीबाट प्रकाशनका निमित्त आर्थिक सहायता पाएपछि प्रकाशन कार्य प्रारम्भ गर्न सकियो। यत्रो महत् कार्यका लागि उहाँको सहयोग प्रशंसनीय छ। म यस सहयोगप्रति हृदयदेखिनै आभार व्यक्त गर्दै उहाँको सुस्वास्थ्य, सुख शान्ति र चिरायुरारोग्यका निमित्त भोलेनाथ श्रीपशुपतिनाथ बाबासँग प्रार्थना गर्छु।

अनुवादको प्रारम्भिककालमा पाएको प्रोत्साहन, दिग्दर्शन र सरसल्लाहका निमित्त प्रा० चूड़ानाथ भट्टरायज्यू, पाण्डुलिपि आद्योपान्त पढ़िदिएर बीच-बीचमा पर्न आएका त्रुटिहरू सुधार्न राय दिने भागवत भक्तिमति बहिनी श्रीमती सुलोचनादेवी घिमिरे, वेलाबखतमा परिआएको विघ्नबाधा हटाई सहयोग गरेर निराश नपारेकोमा भाइ दीर्घराज कोइराला र मुद्रण क्रममा प्रूफ हेरिदिने कष्ट गरेकोमा भतिजा शंकर कोइरालालाई पनि हार्दिक धन्यवाद नदिइरहन सक्दिन।

अन्तमा पाठक-विद्वद्वर्गका सामु मेरो नम्रनिवेदन यही छ—

अभय भई अशुद्ध ग्रन्थ राखें अगाड़ि।
रसिक ! सुजन ! यौटा शुद्ध छ ब्रह्म तेही॥
ग्रहण गर गुणैको दोषको ख्याल छाड़ी।
त्रिगुणमय जगत्मा छैन निर्दोष केही॥

*—विद्वत् शिरोमणि कुलचन्द्र गौतम*

श्रीकृष्ण पादपङ्कज
*ढुण्ढिराज कोइराला*

मकर संक्रान्ति, २०४९

●

# अनुक्रमणिका

माग्नु। १६. राजा बलिलाई शुक्राचार्यको शिक्षा। १७. भगवान् वामनले विराट रूप धारण गरेर दुवै पाइलामा स्वर्ग र पृथ्वीलाई नापी लिएको। १८. बलिको आत्मसमर्पण र भगवान् उसदेखि प्रसन्न हुनु। १९. भगवान्को मत्स्यावतारको कथा।

सान्त्वना दिनु र महारास। ३१. सुदर्शन विद्याधर र शंखचूड़को उद्धार र युगल-गीत। ३२. कंसले श्री अक्रूरजीलाई पठाउनु र अक्रूरजीको ब्रजयात्रा। ३३. श्रीकृष्ण-बलरामको मथुरागमन र ब्रज गोपीहरूको विरह-दशा। ३४. मथुरामा रजकोद्धार, कुब्जामाथि कृपा, धनुष-भंग र कंस आत्तिनु। ३५. चाणूर, मुष्टिक पहलमानहरू र कंसको उद्धार। ३६. उग्रसेनलाई मथुराको राज्य अर्पण। ३७. श्रीकृष्ण-बलरामको संदीपन ऋषिको आश्रममा गुरुकुल-प्रवेश। ३८. उद्धवजीको ब्रजयात्रा। ३९. श्रीकृष्ण-विरहमा व्यथित ब्रजको दशा। ४०. उद्धवजी तथा गोपीहरूको कुराकानी र भ्रमर-गीत। ४१. कुब्जामाथि कृपा, अक्रूरजी हस्तिनापुर जानु।

दशम स्कन्ध ( उत्तरार्द्ध ) : ( ७६९-८०० )

१. जरासन्धसँग युद्ध हुनु र द्वारकापुरीको निर्माण। २. कालयवन तथा मुचकुन्दको कथा। ३. लक्ष्मी, महालक्ष्मी र अलक्ष्मी। ४. रुक्मिणी हरण र कृष्ण-रुक्मिणी विवाह। ५. प्रद्युम्नको जन्म एवं भीमासुरको वध। ६. भगवान् श्रीकृष्णका अन्यान्य विवाह। ७. उषा-अनिरुद्ध विवाह। ८. श्रीकृष्णको दिनचर्या। ९. जरासंध-वध, राजसूय यज्ञ र शिशुपालको उद्धार। १०. श्रीकृष्ण-सुदामा चरित्र। ११. कुरुक्षेत्रमा आएका माता-पिताले श्रीकृष्णसँग प्रश्न गर्नु, वसुदेवलाई ब्रह्मज्ञान दिनु र देवकीका ६ पुत्रहरू फर्काई दिनु। १२. अर्जुनद्वारा सुभद्रा-हरण। १३. वेद-स्तुति।

एकादश स्कन्ध : ( ८०१-८२० )

१. वैराग्यको महत्त्व। २. यदुवंशलाई ऋषिहरूको श्राप, नारदजी वसुदेवजीकहाँ आउनु र उनलाई नवयोगेश्वर र निमिराजाको संवाद सुनाउनु। ३. नव योगेश्वरद्वारा मायाबाट पार हुने उपाय, ब्रह्म र कर्मयोगको निरूपण। ४. दत्तात्रेयजीले मानेका २४ गुरुजीका कथा। ५. श्रीकृष्णले उद्धवजीलाई दिनुभएको उपदेश। ६. श्री उद्धवजीले भगवान्को चरणपादुका लिएर बदरीकाश्रम जानु, यदुकुलको संहार एवं भगवान्को स्वधामगमन।

द्वादश स्कन्ध : ( ८२१-८२४ )

१. कलियुगको राजवंश, कलियुगका धर्महरूको वर्णन। २. कलियुगका दोषहरूबाट बच्ने उपाय, नाम, संकीर्तन। ३. श्रीमद्भागवत श्रवणको फल, परीक्षित्द्वारा श्री शुकदेवजीको पूजा र परीक्षित्को परमगति। ४. भागवत-आरती।

●

श्री गणेशाय नमः

श्री गणेशाय नमः　　श्री सरस्वत्यै नमः　　श्री गुरुभ्यो नमः

ॐ नमो भगवते वासुदेवाय　　श्रीकृष्णः शरणं मम

# भागवतको उद्देश्य र त्यसको माहात्म्य

सच्चिदानन्दरूपाय　विश्वोत्पत्यादिहेतवे।
तापत्रयविनाशाय श्रीकृष्णाय वयं नुमः॥

(माहात्म्य अ० १ श्लोक १)

जो जगत्को उत्पत्ति, स्थिति र विनाशका हेतु हुनुहुन्छ तथा जो तीनै प्रकारका तापको नाश गर्ने हुनुहुन्छ त्यस्ता सच्चिदानन्दस्वरूप भगवान् श्रीकृष्णलाई हामीहरू वन्दना गर्दछौं।

परमात्माका तीन स्वरूप शास्त्रहरूमा भनिएका छन्—सत्, चित् तथा आनन्द। सत् प्रकट रूपबाट सर्वत्र छन्, चित् मौन, आनन्द अप्रकट छन्। जड़ वस्तुहरूमा सत् तथा चित् छन् तर आनन्द छैन; जीवमा सत् र चित् प्रकट गर्दछ, तर आनन्द अप्रकट रहन्छ, अर्थात् अप्रकट रूपबाट रहन्छ, अव्यक्त रूपबाट छ। त्यसो तर आनन्द यसको आफूभित्रै छ, तैपनि मानिस आनन्दलाई आफ्नो बाहिरै खोज्दछ। मानिस नारी-देह, धन-संपत्ति आदिमा आनन्द खोज्दछ।

आनन्द तिम्रो आफ्नै स्वरूप हो। आनन्द तर तिमीभित्रै छ। यस आनन्दलाई जीवनमा कुन किसिमबाट प्रकट गर्ने हो यही भागवतशास्त्रले सिकाउँछ।

दूधमा नौनी रहन्छ, तर पनि त्यो देखिँदैन। तर दूधबाट दही बनेर दही मथेपछि नौनी देखिन जान्छ। ठीक यस्तै प्रकारले मानवलाई मनोमन्थन गरेर आनन्दलाई प्रकट गर्नु छ। दूधमा जसरी नौनीको अनुभव हुँदैन, सोही प्रकार सर्वत्र भएका ईश्वरलाई हामीबाट त्यसको अनुभव हुँदैन।

जीवन हुन त ईश्वरकै रूप हो तापनि त्यस ईश्वरलाई चिन्ने यत्न गर्दैन। त्यसै कारणले जीवलाई आनन्द भेटिएको छैन। कोही पनि कस्तै जीव होस्, त्यसलाई ईश्वरसँग मिल्नु छ। नास्तिक पनि थाकेर, हारेर अन्त्यमा शान्ति नै खोज्दछ।

तैत्तरीय उपनिषद्मा आनन्दको अनेक प्रकारले उल्लेख भएको छ, तर यिनमध्ये दुइ आनन्द छन्—(१) साधनजन्य आनन्द र (२) स्वयंसिद्ध आनन्द।

साधनजन्य आनन्द अर्थात् विषयजन्य आनन्द, जो साधन या विषयको नाश भएपछि त्यो आनन्दको पनि नाश हुन्छ। योगीहरूका साथ केही पनि ( साधन या विषय ) हुँदैन तापनि तिनीहरूलाई आनन्द छ अर्थात् सदा आनन्दसाथ बस्दछन्। यसले सिद्ध हुन्छ आनन्द आफैंभित्र छ।

सत्, चित्, आनन्द ईश्वरमा परिपूर्ण छन्। परमात्मा परिपूर्ण सत्रूप, परिपूर्ण चित् रूप, परिपूर्ण आनन्द-स्वरूप हुनुहुन्छ।

परमात्मा श्रीकृष्ण परिपूर्ण आनन्द-स्वरूप हुनुहुन्छ, बिना ईश्वरको संसार अपूर्ण छ। ईश्वरको अंश जीवात्मा पनि अपूर्ण छ। जीवमा चित्-अंश छ तापनि परिपूर्ण छैन। मानिसमा ज्ञान आउँछ तर त्यो ज्ञान स्थायी हुँदैन। श्रीकृष्ण परिपूर्ण ज्ञानी हुनुहुन्छ। श्रीकृष्णलाई सोह्र हजार रानीहरूका साथ कुरा गर्दा पनि त्यै ज्ञान थियो र जुन समय सारा द्वारिका आदिको नाश भइरहेको थियो त्यस वेलामा पनि त्यै ज्ञान थियो। श्रीकृष्णको आनन्द रानीहरूमा या द्वारिकामा छँदै थिएन। सबैको विनाश भइरहेको थियो तापनि श्रीकृष्णको आनन्दको विनाश हुँदैन। कारण श्रीकृष्ण त स्वयं आनन्दरूप हुनुहुन्छ। सत् नित्य हो, चित् ज्ञान हो, चित् शक्ति अर्थात् ज्ञान-शक्ति। मानिस आफ्नू स्वरूपमा स्थित छैन, त्यसकारण यसले आनन्द पाउँदैन। मानिस जुन किसिमबाट बाहिर विवेक राख्दछ त्यस्तो घरमा राख्दैन। मानिस एकान्तमा स्वरूपमा स्थित रहँदैन, तर उत्पत्ति, स्थिति र संहारलीलामा श्रीभगवान्को स्वरूपमा कुनै परिवर्तन हुँदैन। भगवान्ले संहारलाई पनि आफ्नो लीला नै मान्नुभएको छ। उत्पत्ति, स्थिति र संहार भगवान्को लीला हो। परमात्मा तीनैमा आनन्द मान्नुहुन्छ र आफ्नो स्वरूपमा स्थिर रहनुहुन्छ।

जसको ज्ञान नित्य रहन्छ त्यसै नै आनन्द पाउँछ। त्यो नै आनन्दमय हुन्छ। जीवलाई यदि आनन्दरूप हुनुपर्ने हो भने त्यसले सच्चिदानन्दको आश्रय लिनुपर्ने हुन्छ। यो जीव त्यतिञ्जेलसम्म परिपूर्ण हुँदैन जबसम्म त्यसले शान्ति पाउँदैन, आनन्द पाउँदैन। संसारको प्रत्येक पदार्थ परिणाममा विनाशी हुने हुनाले परिपूर्ण छैन। परिणामस्वरूप यो त भगवान् श्री नारायण नै हुनुहुन्छ। जसले प्रभु नारायणलाई चिन्दछ र नारायणका साथ मनलाई तदाकार गर्छ त्यसको मन नारायणका साथ एक हुन जान्छ। केवल त्यही जीवात्मा नै श्री नारायणस्वरूप बन्दछ र त्यो नै परिपूर्ण हुन्छ, अनि जीवको जीवन सफल हुन्छ। जीव जबसम्म अपूर्ण छ त्यतिञ्जेलसम्म जीवलाई शान्ति हुँदैन। जीव जब ईश्वरसँग मिल्छ र त्यसको अपरोक्ष साक्षात्कार गर्छ अनि जीव परिपूर्ण हुन जान्छ। परमात्मा श्रीकृष्णको दर्शन पाउनलाई नै यो मनुष्यको जन्म भएको छ। मानवले नै श्री भगवान्को दर्शन गर्न सक्छ। पशुलाई त आफ्नू स्वरूपको पनि भान हुँदैन भने त्यो विचराले परमात्माको दर्शन गरोस् पनि कसरी ? परमात्माको दर्शनविना जीवन सफल हुँदैन। जसले परमात्माको दर्शन गर्दछ त्यसको जीवन सफल हुन्छ। यो जीव अनेक वर्षदेखि ( अनन्त जन्मदेखि ) भोग भोग्दै आइरहेछ र पनि यसले शान्ति पाएको छैन। यो शान्ति तर त्यतिञ्जेलमा मात्र पाइन्छ जब जीवलाई

परमात्माको दर्शन पाइने हुन्छ। श्रीकृष्ण परमात्माको दर्शनविना जीवले परिपूर्ण शान्ति पाउँदैन।

शास्त्रहरूमा दर्शनका तीन प्रकार बताइएका छन्—

( १ ) स्वप्नमा प्रभुको दर्शन पाउनु—यो हो साधारण दर्शन।

( २ ) मन्दिर-मूर्तिमा परमात्माको दर्शन भयो भने—यो हो मध्यम-दर्शन।

( ३ ) ईश्वरको अपरोक्ष दर्शन—यो हो उत्तम दर्शन।

परमात्माको प्रत्यक्ष साक्षात्कार भएपछि जीवन सफल बन्छ। वेदान्तमा साक्षात्कारको दुई प्रकार वर्णन भएको छ—( १ ) परोक्ष ज्ञान र ( २ ) अपरोक्ष ज्ञान।

जसले ईश्वर कुनै एक स्थानमा छ भन्छ त्यसलाई परोक्ष साक्षात्कार भन्नुपर्छ। ईश्वरबिना केही छैन, ईश्वर मात्र सबै कुरा हुन्, म पनि ईश्वरदेखि भिन्न छैन यो हो ईश्वरको अपरोक्ष साक्षात्कार।

जसलाई 'म स्वयं ब्रह्म हुँ' ( अहं ब्रह्मास्मि ) यस्तो ज्ञान हुन्छ त्यसलाई अपरोक्ष साक्षात्कार भएको भनिन्छ। हेर्नेवालाले ईश्वरलाई देख्नासाथ ईश्वरमय बनिहाल्छ अनि त्यसलाई ईश्वरको अपरोक्ष साक्षात्कार हुन्छ। ईश्वर सबैमा अनुभव गर्दागर्दै जो त्यसैमा एकरूप भइहाल्छ केवल त्यसले मात्र ईश्वरको परिपूर्ण स्वरूपलाई जान्न सक्छ, चिन्न सक्छ र वेदान्तमा यसैलाई अपरोक्ष साक्षात्कार भन्दछन्। ईश्वर जगत्‌मा कुनै एक स्थानमा हुनुहुन्छ भन्ने यो ज्ञान पनि अपूर्ण छ। ईश्वर सर्वव्यापी हुनुहुन्छ। उहाँ केवल एक मूर्तिमा या मन्दिरमा रहन सक्नुहुन्न, अट्न सक्नुहुन्न। मन्दिरमा प्रभुको दर्शन गरिसकेपछि ज्ञानी पुरुषको दृष्टि जता-जता जान्छ त्यतै-त्यतै भगवान रूपको दर्शन हुन्छ। मन्दिरमा प्रभुको दर्शन गरेर बाहिर आएपछि प्रत्येकमा परमात्माको दर्शन पाउनुपर्छ। यही ईश्वरको असाधारण दर्शन हो। जो परमात्मा ममा हुनुहुन्छ उहाँ सबैमा हुनुहुन्छ। यसप्रकार अखिल जगत् जसलाई ब्रह्मस्वरूप देखिन्छ त्यही ज्ञानी हो। सबमा परमात्माको अनुभव गर्दा गर्दा तिनलाई आफ्नो स्वरूपमा पनि परमात्माको अनुभव हुन्छ। परमात्माको परोक्ष दर्शनको कुनै विशेष लाभ हुँदैन। तर जीव जब परमात्माको अपरोक्ष दर्शन गर्दछ तब मात्र कृतार्थ हुन्छ। ज्ञानी पुरुषलाई तर आफ्नो स्वरूपमा पनि श्री भगवान् देखिनुहुन्छ। यही अद्वैत हो। श्रीकृष्ण लीलाहरू यस निमित्त हुन् जुन यी लीलाहरूको चिन्तन गर्ने गोपीहरू, आफ्नो स्वरूपमा पनि परमात्माको अनुभव गर्छन्। ''लीला देखने मैं गई, मैं भी हो गई लाल''। गोपीहरूलाई आफ्नो स्वरूपको विस्मरण भएको छ र भन्दछन्, ''मै श्रीकृष्ण हूँ'', आफ्ना प्यारा श्रीकृष्णको सबैमा अनुभव गर्दिछँदी गोपिनीहरू श्री कृष्णमय बन्न गएका छन्। जसलाई आफूभित्र परमात्माको दर्शन हुन्छ, त्यही जीव परमात्मामा मिल्न जान्छ। आफूभित्र जसलाई परमात्मा देखिनुहुन्छ त्यसपछि त्यो जीव ईश्वरबाट अलग्ग बस्नै सक्दैन, त्यो ईश्वरमा मिल्न जान्छ। यही श्रीभागवत्‌को फल हो।

ज्ञानी ज्ञानद्वारा परमात्मा ( ब्रह्म )-को अपरोक्ष साक्षात्कार गर्दछन्, उता वैष्णव भक्त प्रेमद्वारा परमात्माको अपरोक्ष साक्षात्कार गर्दछन्।

ईश्वरले जीवलाई आफ्नो बनाएर जब आफ्नो स्वरूपको दान गर्नुहुन्छ, तब जीव पूर्ण हुन जान्छ, विना ईश्वर सारा संसार अपूर्ण छ। जीव अपूर्ण छ। त्यसकारण यसलाई शान्ति छैन— नारायणनै पूर्ण हुनुहुन्छ। सच्चा शान्ति नारायणमा छ। नर-नारायणको अंश हो, त्यस कारण नर-नारायणमै मिसिन जान चाहन्छ। श्रीनारायणलाई चिन्हाउने र श्रीनारायणमा लीन हुने साधन यो श्रीमद्भागवत शास्त्र हो।

जीव नारायणको अंश हो। यसले तर उसमा मिसिन जानु छ। यसका निमित्त शास्त्रहरूले अनेक उपाय बताएका छन्—( १ ) कर्ममार्ग, ( २ ) ज्ञानमार्ग र ( ३ ) भक्तिमार्ग।

उपनिषद्द्वारा ( उपनिषद्हरूका ज्ञानबाट ) ईश्वरको अपरोक्ष साक्षात्कार हुन्छ। तर श्री व्यासजीले विचार गर्नुभयो उपनिषद्हरूको भाषा नबुझिने छ, साधारण मानिसले यसलाई बुझ्न सकेका छैनन्। उपनिषद्हरूको ज्ञान दिव्य छ। तर हामीजस्ता विलासी मानिसहरूले त्यस्तो दिव्य ज्ञानको अनुभव गर्नै सक्दैनौं, किनभने मानिसहरूको जीवन अति विलासी छ। त्यसकारण ज्ञानमार्गद्वारा जीव ईश्वरनजिक जान सकोस् भन्ने कुरा असंभव छ। अति वैराग्य विना ज्ञानमार्गमा सफलता पाईंदैन। ज्ञानको जग हो वैराग्य। यस किसिमको अति वैराग्य पाउन कठिन छ। श्री शुकदेवजी महाराजलाई यस्तो अति वैराग्य प्राप्त भएको थियो। जन्मनासाथ उहाँ वनतर्फ लाग्नुभएको थियो र पिताजीलाई भन्नु भएको थियो—''हजूर, पिताजी होइन र म पुत्र होइन।'' वेदले त्यागको उपदेश गर्दछ। शास्त्रले सबै कुरा छोड़ भन्छ, शास्त्र के भन्छ भने, ''काम छोड़, क्रोध छोड़, तर मानिस केही छोड्न सक्दैन।'' जो साधारण पान-सुपारी छोड्न सक्दैन भने तिनीहरूले काम, क्रोध, लोभ कुन प्रकारले छोड्न सक्लान् ? तिनीहरूले घरको त्याग कसरी गर्लान् ? तर वेदान्त शास्त्रले भन्दछ सबै छोड़ेर, सर्वस्व त्यागेर ईश्वरका पछि लाग्यौ भने तिमीले ईश्वर चिन्न सकौला, उनीसँग मिल्न सकौला। सबैको त्याग, सर्वस्वको त्याग त साधारण मानिसका निमित्त सजिलो छैन।

वेदका चार भाग छन्—( १ ) संहिता, ( २ ) ब्राह्मण, ( ३ ) आरण्यक, ( ४ ) भाष्य। वेदहरूको समाप्ति उपनिषद्हरूद्वारा हुन्छ त्यसकारण उसलाई वेदान्त भन्दछन्। आरण्यकमा उपनिषद्को भागमा पर्छ। जुन ग्रन्थहरूको चिंतन ऋषिले गर्दछन् तिनलाई आरण्यक भनिन्छ। घरबार, भोग-विलासहरूमा बस्नेहरूलाई उपनिषद्हरूमाथि ( उपनिषद्हरूका अध्ययनमा ) अधिकार छैन। हामीहरू जस्ता संसारमा जेलिएको जीवले उपनिषद्हरूको ज्ञानलाई पचाउन सक्दैनौं। यिनै कुराहरूलाई विचार गरेर भगवान् व्यासजीले श्रीमद्भागवत शास्त्रको रचना गर्नुभएको हो। उपनिषद्हरूले देखाएको बाटो हामी जस्तालाई सजिलो छैन। उपनिषद्हरूको तात्पर्य त्यागमा छ।

जो पान-सुपारी, चिया छोड्न सक्दैनन् र जो दुइ-चार घण्टा कथा सुन्न बसेपनि साथमा नस-डब्बा छोड्न सक्दैनन् भने काम-क्रोधादि विकारहरूलाई तिनले कसरी छोड्न सक्लान् ?

जो काम-सुखको उपभोग गर्दछन् तिनले योगाभ्यास गर्न सक्ने छैनन्। भोगी यदि योगी हुने हो भने त्यो रोगी हुनजाला। ज्ञानमार्गमा जसको पतन हुन्छ त्यो नास्तिक बन्दछ। योगमार्गमा जसको पतन हुन्छ त्यो रोगी बन्दछ। भक्तिमार्गमा जसको पतन हुन्छ त्यो आशक्त बन्दछ। कलियुगी

मानिस योगाभ्यास गर्न सक्दैन। यो भागवत-शास्त्रको रचना कलियुगका जीवहरूको उद्धार गर्नका निमित्त भएको हो।

श्रीमद्भागवतमा एक नयाँ बाटो देखाइएको छ—''हामी घरबार र कामधंधा छोड्न सक्दैनौं'' भन्नेहरूलाई भागवत-शास्त्र भन्दछ, ''निराश नहुनु, सबैकुरा छोड़ेर जंगलमा जाने आवश्यकता छैन। केवल जंगलमा जानाले मात्र आनन्द पाइन्छ भन्ने कुरा होइन।'' जीव जब सबै प्रकारका प्रवृत्ति छोड़ेर निवृत्तिमा बस्छ त्यस वेलामा पनि मनमा प्रवृत्तिको विचार आउँदछ।

श्रीमद्भागवतशास्त्रको आदर्श दिव्य छ। गोपीहरूले घर छोड़ेनन्। गोपीहरू घरको काम गरिरहन्थे। तिनीहरूले स्वधर्मको त्याग गरेनन्। तिनीहरू वनमा गएनन् र पनि तिनले श्री भगवान्लाई प्राप्त गर्न सकेका थिए। श्रीमद्भागवत शास्त्रले यस्तो बाटो देखाउँछ। योगीहरूले जुन आनन्द समाधिमा पाउँछन्, त्यै आनन्द तपाईं घरमा बसीबसी पाउन सक्नुहुन्छ। तर तपाईंको प्रत्येक व्यवहार भक्तिमय भएको हुनुपर्छ। गोपीहरूको प्रत्येक व्यवहार भक्तिमय बन्न गएको थियो।

घरमा बसेर पनि श्री भगवान्को दर्शन हुन सक्छ। गोपीहरूका घरमा मात्र परमात्माको दर्शन भएको छ। गोपिनीहरू यही संझिन्थे र भन्थे जहाँ हामी जान्छौं, हाम्रा श्रीकृष्ण हाम्रा साथ हुनुहुन्छ। ब्रजमा यस्ता गोपीहरूको दर्शन गरेर उद्धवजीको ज्ञान गर्व घट्न गएको थियो। गोपीहरूको सत्संगपछि उद्धवजी भन्न थाल्नुभयो—

बन्दे नन्दव्रजस्त्रीणां पादरेणुमभीक्ष्णशः।
तासां हरिकथोद्गीतं पुनाति भुवनत्रयम्॥

नन्द बाबाको ब्रजमा बस्ने यी गोपिनीहरूको चरणलाई बारम्बार प्रणाम गर्छु र यसलाई शिरमा चढ़ाउँछु। अरे ! यी गोपिनीहरूले भगवान् श्रीकृष्णका लीला कथाहरूका सम्बन्धमा जो गुणगान गरेका छन् तिनले त तीनै लोकलाई पवित्र गरिरहेछन् र सदा पवित्र गरिरहनेछन्।

गोपिनीहरूले सबैमा श्री भगवान्लाई देखिरहेछन्। उनीहरू भन्छन्—यो वृक्षमा लतामा, फूलमा, फलमा, मलाई मेरा प्रभु देखा पर्नुहुन्छ। मेरा कृष्ण तर मलाई छोड़ेर जानु हुन्न। गोपिनीहरूलाई घरमै श्रीपरमात्माको साक्षात्कार भएको छ। श्रीमद्भागवतमा भनेको छ—घैरमा बसी आफ्नू व्यवहार गरे तापनि परमात्मालाई प्राप्त गर्न सक्नेछौ। घरमा बसेमा पाप लाग्दैन, तर घरलाई मनमा राख्नु पाप हो। सबैलाई साधु हुने आवश्यकता छैन। यदि तपाईंहरू सबैले संन्यास लिनुभयो भने साधु संन्यासीहरूको स्वागत कसले गर्ला ? उनको सम्मान कसले गर्ला ?

गोपिनीहरूको प्रेम लक्षणा भक्ति यति दिव्य छ उनलाई घरमा बस्दा पनि प्रभुको प्राप्ति भएको छ। श्रीकृष्णरूप बनेका छन्। यसप्रकार श्रीकृष्णमा जसको मन मिसिन जाला त्यो श्रीकृष्ण रूप भइहाल्नेछ। यस्तो अलौकिक भक्ति मार्गको भगवान् व्यास नारायणले यस भागवतशास्त्रमा वर्णन गर्नुभएको छ र यसै भक्तिद्वारा परमात्माको साक्षात्कार हुनेछ।

श्रीमद्‌भागवतले तपाईंको प्रत्येक व्यवहारलाई पनि भक्तिमय बनाइदिनेछ। भागवतले व्यवहार र परमार्थको समन्वय गरिदिनेछ। तपाईंलाई यसले घरमा त्यही आनन्द दिनेछ जो आनन्द योगीले वनमा बसेर भोग्दछन्। योगीहरूले समाधिमा जस्तो आनन्द पाउँछन् त्यस्तै आनन्द गृहस्थलाई पनि प्राप्त हुन सकोस् भन्नालाई भागवतशास्त्र रचना गरिएको हो। संसारको विषयसुखहरूप्रति वैराग्य होस् र प्रभुमा प्रेम जागोस्—यही श्रीमद्‌भागवतको कथालीलाहरूको उद्देश्य हो।

भागवत अर्थात् भगवान्‌लाई भेट्ने-मिलाइदिने साधन हो। संतहरूको आश्रय लिने सन्त बन्दछ, भागवतको आश्रय लिने भगवान् हुन्छ।

भक्ति केवल मन्दिरहरूमा मात्र हुने होइन, तर जहाँ पनि बस्नुहोस् त्यहाँ पनि हुन सक्दछ। यस भक्तिका निमित्त कुनै देश ( स्थान ) या काल ( समय )-को आवश्यकता पर्दैन। भक्ति चौबीसै घण्टा गर्नु छ। भक्तिको काल ( समय ) र भोगको काल ( समय ) भनी यस्तो भेद जसले गर्छ त्यसले भक्ति गर्न सक्तैन। भक्ति अटूट गरिरहू, निरन्तर गरिरहू। चौबीसै घण्टा सम्बन्ध बनाइराख। सधैं ध्यान राख, सदा सावधान होऊ मायाका साथ सम्बन्ध हुन नजाओस्।

जब बसुदेवजीले श्रीकृष्णलाई शिरमा राख्नुभयो तब उहाँको ब्रह्मसम्बन्ध भयो, जसले गर्दा हात-गोड़ाका नेलहरू छिनिए। तर योगमायालाई लिएर जब फर्कनु भएको थियो फेरि बन्धनमा पर्नुभो। वसुदेवजीको ब्रह्मसम्बन्ध भयो तर उहाँले यसलाई दिगो गराउन सक्नुभएन। ब्रह्मसम्बन्धलाई टिकाएर राख्नुपर्छ। ईश्वरको स्मरण छोड्नुहुन्न। वैष्णव ( भक्त ) भगवानको साथ खेल्दछन्। जीव जो कामहरू सब ईश्वरका निमित्त गर्दछ तब त्यसको प्रत्येक क्रिया भक्ति बन्न जान्छ। भक्तिको विशेष सम्बन्ध मनका साथ छ र जसबाट भक्ति मनद्वारा हुँदैन त्यस्ताले तनबाट सेवा गर्नुपर्ने आवश्यकता छ। मानसिक सेवा श्रेष्ठ हो। साधु-सन्त मानसिक सेवामा तन्मय रहन्छन्। यस्तो सेवा तन्मयता भएका खण्डमा जीव कृतार्थ हुन जान्छ। भक्तिमार्गका गुरु गोपिनीहरू मात्र हुन्। उनको आदर्शलाई मन र आँखाका सामुन्ने राख। ज्ञानमार्ग र योगमार्गबाट जुन ईश्वरको आनन्दको अनुभव हुन्छ, त्यही आनन्दको अनुभव यस भक्तिबाट सहजै प्राप्त हुन्छ। ज्ञानी योगीहरूलाई जो ब्रह्मानन्द प्राप्त हुन जान्छ त्यही यस साधारण जीवात्मालाई पनि प्राप्त होस् भन्ने उद्देश्यले श्रीमद्‌भागवतको रचना भएको हो। यसमा भगवानको स्वरूप बताइएको छ। भगवान् कस्ता हुनुहुन्छ भने—

**तापत्रयविनाशाय श्रीकृष्णाय वयं नुमः।**

परमात्माको स्वरूप वर्णन गर्दै भनिएको छ—तापत्रय विनाशायः। दुःख मनको धर्म हो, आत्माको होइन। मानिस दुःखमा ईश्वरको स्मरण गर्दछ, जसबाट उसको परमात्मासित गहिरो जाँच हुन जान्छ र उसले आनन्द पाउँछ। जीवको स्वभाव राम्रो छैन। परमात्माको शरीर हुन सक्छ कहिले नराम्रो पनि। कूर्मावतार, बराह अवतारको शरीर सुन्दर थिएन। तर श्री परमात्माको स्वभाव

सुन्दर, अतिशय सुन्दर छ। अंर्काको दुःख दूर गर्ने स्वभाव परमात्माको छ। यसैले श्रीभगवान् वन्दनीय हुनुहुन्छ।

आध्यात्मिक, आधिदैविक तथा अधिभौतिक—तीनै प्रकारका तापलाई नाश गरिदिनु हुने भगवान् श्रीकृष्णको हामी वन्दना गर्छौं। धैरै मानिसहरू सोध्छन् वन्दना गर्नाले के लाभ छ। वन्दना गर्नाले पापताप डढ्छन्। श्री राधाकृष्णको वन्दनाले तिम्रा सारा ताप नष्ट हुनेछन्। तर वन्दना गर्दा एक्लै शरीरद्वारा होइन, मनबाट पनि गर। अर्थात् श्रीराधाकृष्णको हृदयमा संझना गर, उनीहरूलाई प्रेमसाथ नमस्कार गर। नमस्कारले प्रभुलाई बन्धनमा पारिदिन्छ। दुःखमा जसले मद्दत गर्दछ त्यो ईश्वर हो र सुखमा जसले साथ दिन्छ त्यो जीव हो। ईश्वरले सदा दुःखमा मात्र साथ दिनुहुन्छ। त्यसैले ईश्वर वन्दनीय हुनुहुन्छ। ईश्वरले जस-जसलाई सहायता दिएको छ उसलाई दुःखमा सहायता दिएको छ। पाण्डव जबसम्म दुःखमा थिए, त्यति वेलासम्म श्रीकृष्णजीले उनको मद्दत गर्नुभयो। तर जब सिंहासनमा बसे तब श्रीकृष्ण पनि त्यहाँबाट हिँड़िदिनु भो। ईश्वर जसलाई पनि भेटिनु भो, उहाँ दुःखमा मात्र भेटिनु भएको छ। सुखको साथी जीव र दुःखको साथी ईश्वर हो, यस कुराको सदा मनन गर। मानिस धन पाउनका निमित्त जति प्रयत्न गर्छ र दुःख सहन गर्छ त्यसभन्दा पनि धैरै कम प्रयत्न यदि ईश्वरका निमित्त गर्छ भने त्यसलाई ईश्वर अवश्य भेटिनु हुनेछ। कन्हैया नबोलाइए पनि गोपिनीहरूका घरमा जानुहुन्थ्यो, तर उहाँ मेरो घरमा किन आउनु हुन्न यस्तो कहिल्यै विचार पनि तिमीले गरेको छ ? तिमी पनि निश्चय गर म पनि यस्तो सत्कर्म गर्ने छु जसबाट कृष्णजी पनि मेरा घरमा आउनु हुनेछ। श्रीभगवान्का सामुन्ने हात जोड्नु, शिर निहुराउनु यसको के अर्थ हो ? हात क्रिया शक्तिको प्रतीक हो। हात जोड्नुको अर्थ हो म यी हातहरूले सत्कर्म गर्नेछु। शिर नुहाउनुको अर्थ हो—म आफ्नू बुद्धि-शक्तिलाई हे नाथ ! तपाईंमा अर्पित गर्छु। वन्दना गर्नुको अर्थ हो—आफ्नो क्रियाशक्ति र बुद्धि-शक्ति श्री भगवान्लाई चढ़ाउनु हो। श्री भगवान्लाई वन्दना गर्नाले पाप-तापको नाश हुन्छ। निर्भय हुने हो भने प्रेमले श्रीकृष्णको वन्दना गर। मेरा भगवान् दयाका सागर होइबक्सिन्छ। केवल वाणी र शरीरद्वारा होइन हृदयद्वारा पनि वन्दना गर। हृदयबाट वन्दना गर्नाले श्री भगवान्का साथ ब्रह्म सम्बन्ध हुन जान्छ।

जहिल्यै पनि घरबाट बाहिर निस्कँदा श्रीभगवान्को वन्दना गरेर मात्र निस्क। ईश्वर प्रेम चाहनुहुन्छ र प्रेम दिनुहुन्छ। ईश्वर यही सम्झनुहुन्छ—यो मेरो हो र मसँग भिक्षा मागिरहेछ। वन्दना गर्नाले ईश्वरका साथ सम्बन्ध हुन जान्छ। यस जीवको स्वभाव यस्तो छ जो वन्दनासम्म गर्दैन। घरभित्र पस्नासाथ घरमा पत्नी छैन भने आफ्ना बालकसँग सोद्धछ तेरी आमा कहाँ गई ? तर यसको के आवश्यकता छ ? तिनी बाहिर गएकी भए पनि तिमी बसेर राम-राम भन, बाहिरबाट घर फर्किएपछि त्यस बखतमा पनि ईश्वरको वन्दना गर। बाटामा हिँड़िरहेका बखत पनि वन्दना गर। परमात्मा श्रीकृष्णलाई आरम्भमा वन्दना गरोस्। यो जीवले प्रेमसाथ परमात्मालाई प्रणाम

गऱ्यो भने उसमाथि श्रीपरमात्मा प्रसन्न हुनुहुन्छ। यस जीवले अरू केही नगरे पनि श्रीपरमात्मालाई बारंबार वन्दना गरोस्। वन्दना गऱ्यौ भने सद्भावनाले गर। प्रभुको ममाथि अनन्त उपकार छन्। श्रीपरमात्माले हामीमाथि कति उपकार गर्नुभएको छ। बोल्न र खानलाई जिब्रो दिनुभएको छ। हेर्नलाई आँखाहरू दिनुभएको छ। सुन्नलाई कान दिनुभएको छ। विचार गर्नका निमित्त मन दिनु भएको छ। बुद्धि र विचार-शक्ति पनि परमात्माले दिनुभएको छ। ईश्वरका उपकारहरूलाई सम्झना गर र भन—हे! भगवन् म हजूरको ऋणी छु। यस्ता उत्तम भावनाहरूका साथ वन्दना गर। भन—"मेरा प्रभू हजूरले ममाथि कृपा गर्नुभएको छ। हजूरका कृपाले म सुखी छु। मेरा पाप अनन्त छन्, तर हे नाथ ! हजूरका कृपाहरू पनि अनन्त छन्।"

श्री परमात्माको वन्दना उत्तम भावपूर्वक गऱ्यौ भने त्यो अवश्य सफल हुन जानेछ।

विचार गर प्रभुले मलाई जे दिनु भएको छ, के म त्यसको योग्य छु। नाथ, म योग्य छैन, म पापी छु तापनि परमात्माले मलाई सम्पत्ति र प्रतिष्ठा जगत्मा दिनुभएको छ। जीव योग्य छैन तापनि जीवलाई प्रभुले धेरै दिइराख्नुभएको छ। नाथ, हुजूरको उपकार अनन्त छ। वन्दना गर्नाले अभिमानको बोझ ( भार ) कम हुन जान्छ। परमात्माको बिल्कुलै वजन ( भार ) छैन। कारण उहाँमा कुनै अभिमान छैन। श्रीकृष्ण बोडाणाकी दुलहीको नाकको नत्थसँग तौलिइनुभयो। श्रीभागवतको आरम्भ पनि वन्दनाबाटै गरिएको छ र वन्दनाद्वारै समाप्ति पनि भएको छ।

## नमामि हरिं परम्।

एक्लै श्रीकृष्णको बन्दना गरिएको छैन बरु भनिएको छ। "श्रीकृष्णाय राधाकृष्णाय वयं नुमः।" श्रीजीको अर्थ हो राधाजी। श्रीराधाजीका साथ विराजमान श्रीकृष्णको म नमस्कार गर्छु। परमात्माको वन्दना गरिसकेपछि श्रीमद्भागवतका वक्ता श्रीशुकदेवजीको प्रणाम गरिएको छ। प्रणाम गरेर तिम्रो क्रियाशक्ति र बुद्धिशक्ति अर्पण गर्नुका साथ केही अघटित कार्य वा विचार नहोओस्।

पढ्नु र विचार्नुको अपेक्षा जीवनमा आचरण अधिक श्रेष्ठ छ। वेदहरूको अन्त्य छैन र पुराणहरू अपार छन्। मानिसको जीवन छोटो छ र शास्त्रको कुनै टुङ्गो छैन। तर उनी एकलाई अर्थात् ईश्वरलाई चिन्न सक्यौ भने सबै कुरा जानिहाल्नेछौ। कलियुगका मानिसले थोरै समयमा पनि श्रीभगवान्लाई प्राप्त गर्न सक्छन्। यही श्रीभागवतमा भनिएको छ।

सूतजी भन्नुहुन्छ—सातै दिनमा राजा परीक्षित्ले सद्गति पाएका थिए, जुन कुरा मैले आफ्नै आँखाले देखेको छु। परीक्षित्जीको उद्धार भयो। तैपनि हामी सबको उद्धार किन हुँदैन ? हामीलाई परीक्षित् जस्तो श्रोता हुनुपर्छ र वक्ता पनि श्रीशुकदेव जस्तो पायौं भने उद्धार भइहाल्छ। हामी सबै परीक्षित् हौं। यो जीव गर्भमा आयो र जसले मलाई रक्षा गऱ्यो त्यो चतुर्भुज स्वरूपवाला पुरुष कहाँ छ, कहाँ छ ? यस्तो भन्दा-भन्दै ईश्वरको खोजीमा निस्किएको त्यही जीव परीक्षित् हो।

अर्थात् परीक्षित् जस्तो जीव श्रीभगवान्को दर्शनका निमित्त आतुर भएको छ। परीक्षित्जी आतुर हुनाको एउटा कारण थियो। उहाँले थाहा पाइसक्नुभएको थियो सात दिन ( सातौं दिन ) मा मेरो मृत्यु हुनेछ। तक्षक नागले मलाई डस्ने छ। जीवमात्रलाई तक्षक नागले डस्ने छ, लान्छ। तक्षक कालको स्वरूप हो भन्ने कुरा भागवतको एकादश स्कन्धमा भनिएको छ। कालरूपी तक्षक कसैलाई छोड्दैन। त्यसले सातौं दिनमा डसि छोड्नेछ। सप्ताहमा जम्मा सात दिन हुन्छन्। यी सात दिनहरू ( वार )-मध्ये कुनै एकवारका दिनमै यस कालले डस्ने हो। यी सात वारहरूमध्ये कुनै एक वार हाम्रा निमित्त पनि निश्चित छँदै छ नि। त्यसकारण परीक्षित्जीले जस्तै तिमीले पनि काललाई नबिर्स। कुनै पनि जीव किन नहोस्, त्यसलाई कालको डर तर लाग्दछ। मृत्युको भय केवल मानिसलाई मात्र लाग्दछ भन्ने कुरा होइन। ब्रह्माजीलाई पनि कालको भय छ।

श्रीभागवतले मानिसलाई निर्भय बनाउँछ। भागवतमा लेखिएको छ—ध्रुवजीले मृत्युको शिरमाथि पाउ राखेर स्वर्ग जानुभएको थियो। परीक्षित् राजाले कथा समाप्त भएपछि भन्नुभएको छ मलाई अब कालको भय रहेन, मलाई कालको भय लाग्दैन। भागवत सुनेर परमात्माका साथ प्रेम गरेपछि त्यसलाई कालको भय लाग्दैन। जसले भागवतको आश्रय लिन्छन् ती निर्भय हुन्छन्।

मानिस मृत्युलाई अमङ्गल मान्दछ, तर यो मृत्यु अमङ्गल होइन। मृत्यु ( काल ) परमात्माको सेवक हो। अतः मङ्गल पनि छ। परमात्मालाई लाग्दछ—मेरो बालक अब योग्य बनेको छ भनेर उहाँ मृत्युलाई आज्ञा दिनुहुन्छ—त्यस जीवलाई समातेर ल्याओ। जसलाई पाप गर्ने विचार पनि आउँदैन, त्यसको मृत्यु मङ्गलमय हुन्छ। जीवनमा मनुष्यले मृत्युको साँच्चिकै भय राख्दैन, त्यसै कारणले त्यसको जीवन पनि बिग्रन जान्छ र मरण पनि, अन्त्यकालमा मानिस जसरी आत्तिन्छ त्यो कालको डरले भएको होइन, तर आफूले गरिसकेको पापको संझनाले भएको हो। पाप गर्ने समयमा मानिस डराउँदैन। डराउँछ त्यसवेला जब पापहरूको सजाय भोग्ने वेला आइपुग्छ। व्यवहारमा मानिस एक-अर्काको डर मान्दछ। कारिन्दाले मालिकको भय गर्छ, क्लर्कले अधिकारीको इत्यादि। मनुष्यले कुनै पनि छिन ईश्वरको भय नराखेको हुनाले त्यो दुःखी हुन्छ।

भागवतले मानिसलाई निडर बनाइदिन्छ। श्रीभागवतको आश्रय लिनाले निडर होइन्छ। म आफ्नो परमात्मा श्रीकृष्णको अंश हुँ, म भगवान्को हुँ। केही पैसा खल्तीमा भएका खण्डमा मानिसलाई साहस आउँछ भने तपाईंले जब परमात्मालाई सँधै साथमै राखेर डुलफिर गर्नुभयो भने आफू निर्भय भइहाल्नु हुन्छ, यसमा के आश्चर्य भयो? डर नभईकन प्रभुमा प्रीति हुँदै हुँदैन। कालको डर राख। कालको, मृत्युको डरले गर्दा प्रभुमा प्रीति हुन जान्छ। त्यसकारण कालको, पापको, धर्मको डर राख। मानिसले यदि सँधै कालको डर राख्छ भने उसबाट पाप हुने छैन। निडर हुनु छ भने पाप गर्न छोड़िदेऊ। श्रीभागवतशास्त्रले हामीलाई निर्भय बनाइदिन्छ। मानिसलाई अरू कसैको भय चाहिँ नलागोस् तर कालको भय यसलाई लागी रहनुपर्छ। कामको नाश गरेर

भक्ति र प्रेममय जीवन जसले बिताउँछ त्यसले कालमाथि पनि विजय प्राप्त गर्छ। काललाई जसले मार्दछ, त्यसले कालको मार खानु पर्दैन। कामको, कालको मारबाट छुटकारा पाउनु छ भने परमात्माका साथ अतिशय प्रेम गर्नुपर्छ। ईश्वरसँग प्रेम नगरिकन यी काम, क्रोध आदि विकार जाँदैनन्। परमात्माका साथ प्रेम गऱ्यौ भने कालको भय लाग्ने छैन, ध्रुवजी कालको शिरमाथि पाउ राखेर बैकुण्ठधाम जानुभएको थियो। काल भनेकै तक्षक नागको स्वरूप हो। काल-तक्षक कसैलाई पनि छोड्दैन। कसैमाथि पनि यस काललाई दया आउँदैन। त्यसकारम यसै जन्ममै यस कालमाथि विजय प्राप्त गर, जब जन्मिइन्छ, त्यसै वेला मृत्युकाल र मृत्युकारण निश्चित गरिन्छन्।

पाप गर्नमा मानिस जति सावधान ( होशियार ) रहन्छ त्यति पुण्य गर्दामा रहँदैन। पाप प्रकट भयो भने जगतमा बदनाम होला भन्ने सोचेर पापलाई एकाग्र चित्त गरेर गर्दछ। यसै कारणले अन्त्यकालमा उसलाई पापको सम्झना हुन्छ। यसैले अन्त्यकालमा मन आत्तिन्छ।

आफूले गरेको पाप प्रत्यक्ष देखिन्छ। त्यसले बुझ्दछ मैले मर्नका निमित्त कुनै तयारी गरेको छैन। मेरो के हुने होला ? मानिसले अरू सबै कामहरूका निमित्त तयारी गर्दछ, तर मर्नका निमित्त कुनै तयारी गर्दै गर्दैन। जुन प्रकारले विवाहको तयारी गर्छौ उसै प्रकार खुशीसाथ बिस्तार-बिस्तार मरणका निमित्त तयारी गर। मृत्युका निमित्त सदा सावधान होऊ। मृत्यु भनेको परमात्मालाई विगत जीवनको हिसाब बुझाउने पवित्र दिन हो। श्रीभगवान्ले सोध्नु होला—''मैले तिमीलाई आँखा दिएको थिएँ। तिनबाट तिमीले के गऱ्यौ ?'' यस हिसाबमा जब गड़बड़ी हुनेछ तब आत्तिनै पऱ्यो। साधारण कर अफिसरलाई हिसाब बुझाउनु पर्दा मानिस हड्बड़ाउँछ र भगवान्सँग प्रार्थना गर्छ हे प्रभु, मैले भिन्नाभिन्नै खाता बनाएको छु, प्रभु ! ध्यान राखिदिबक्सेला। एक वर्षको हिसाब बुझाउँदा यस्तो आत्तिनुपर्छ भने सारा जीवनको हिसाब बुझाउने समयमा के दशा होला ? प्रभुले हामीलाई जे बक्सिएको छ त्यसको हिसाब नबुझाई हुँदैन।

मृत्युलाई उज्ज्वल पार्नु छ भने प्रति क्षणलाई उज्यालो पार। आँखाको सदुपयोग गर, धनको सदुपयोग गर, वाणीको सदुपयोग गऱ्यौ भने मृत्यु उज्ज्वल हुने छ। प्रतिक्षण जो ईश्वरको स्मरण गर्दछ त्यसैको मृत्यु सुध्रिन्छ, श्रीभागवतले मृत्यु सुधार्दछ। सधैं श्मशानमा जाने आवश्यकता छैन, तर सधैं श्मशानलाई संझिनुपर्ने जरूरी छ। श्रीशंकर श्मशानमा राज गर्नुहुन्छ। उहाँ ज्ञानका देवता हुनुभएकाले श्मशानमा राज गर्नुभएको हो। श्मशान ज्ञानभूमि हो। जहाँ बराबरीको भाव जागेर आउँछ त्यसैको नाउँ श्मशान हो। समभाव ( बराबरीको भाव )-को अर्थ हो असमानताको अभाव। समभाव नै ईश्वरभाव हो। मानिसले सबैमा बराबरीको भाव राखेर व्यवहार गऱ्यो भने त्यसको मरण सुध्रिन्छ। सबैमा ( समभाव ) ईश्वरभाव जाग्यो भने जीवमा दैन्यभाव आउँछ। परमात्मालाई प्रसन्न गर्ने साधन पनि दैन्यभाव हो। मानिसलाई अमर हुनु छ। श्रीमद्भागवतको कथा अमर छ। अमर कथाको जसले आश्रय लिन्छ त्यो अमर भइहाल्छ। राजा परीक्षित् र श्री शुकदेवजी अमर

हुनुहुन्छ। श्रीभागवतको कथाले तपाईंलाई अमर बनाइदिन्छ र भक्तिरसको दान गर्दछ। भक्तिद्वारै मीराबाई द्वारिकाधीशमा र गौराङ्ग प्रभु जगदीशमा सदेह मिसिइन् र अमर छन्। श्रीभागवतको कथा सुन्यौ भने अनायासै समाधि लाग्न जान्छ। भोग र तपका विना श्रीभगवान्सँग भेट हुने कुनै साधन छ भने त्यो हो भागवतशास्त्र।

भागवतका भगवान् बड़ो सरल हुनुहुन्छ, उहाँ सबैका साथ बोल्न तयार हुनुहुन्छ। उहाँले तर कुनै अधिकारीका साथ बोल्नुपर्ने हो। भागवत-शास्त्रले मनुष्यलाई निःसन्देही बनाइदिन्छ। यस कथामा सबै कुरा पर्न आउँछ—बुद्धिको परिपाक, ज्ञानको परिपाक, जीवनको परिपाक आदि भइसकेपछि भगवान् व्यासजीले यस ग्रन्थको रचना गर्नुभएको हो। भगवान्को नाउँ जप्दै यस कथालाई सुन, तिमी निःसन्देही भइहाल्ने छौ। भागवत नारायणस्वरूप हो। परिपूर्ण छ। यसलाई सुन्नाले आस्तिकलाई मार्गदर्शन मिल्ने छ र नास्तिक भयो भने आस्तिक बन्ने जाला। शुकदेवजी जस्ता आत्माराम मुनिले सर्वस्व छोड़े, तर उनले पनि यस कथालाई छोड्न सकेनन्। आत्माराम कोटिका महात्मा पनि यस श्रीकृष्णकथामा मस्त भएका छन्, पागल बनेका छन्। सिद्ध, आस्तिक, नास्तिक, पामर प्रत्येकलाई यस कथाले जीवनदान दिएको छ। व्यवहारको ज्ञान पनि भागवतमा आउनेछ। भागवतमा ज्ञान योग, कर्मयोग, समाजधर्म, स्त्रीधर्म, आपद्धर्म, राजनीतिआदिको ज्ञान भरिभराउ छ। यो एक यस्तो शास्त्र छ जसलाई सुन्नाले र मनन गर्नाले केही जान्नुपर्ने जस्तो बाँकी बचेको देखिँदैन। साधकलाई साधनामार्गमा कस्ता-कस्ता संशय पर्न जान्छन् यिनै सबको विचार गरेर व्यास भगवान्जीले यो कथा रच्नु भएको छ। व्यासजी यसो भन्नुहुन्छ—जुन कुरा मेरो यस भागवतमा छैन, त्यो जगत्को अन्य कुनै ग्रन्थमा पनि छैन, केवल भागवतमा छ। 'यदिनास्ति तदन्यत्र मन्नेनास्ति न कुत्रचित्।' यो भागवत-शास्त्र परिपूर्ण नारायणको स्वरूप हो, अतिशय दिव्य छ।

व्यासजीको आश्रममा श्रीगणपतिजी महाराज प्रकट हुनुभो। भागवतको सृष्टि रच्दा व्यासजीले भन्नु भयो—''मलाई भागवतशास्त्रको रचना गर्नु छ, तर यसलाई लेखिदिने कसले?'' गणपतिजीले भन्नु भो—''बड़ो खुशीको कुरा हो, म लेखिदिन तयार छु। तर म एकक्षण पनि खाली बस्दिनँ।'' गणपतिजीको वाहन मूसो हो। (मूसालाई हिन्दीमा चूहा भन्दछन् र जसको अर्थ हो उद्योग) जो उद्योगमाथि बस्छ त्यसका ऋद्धि र सिद्धि नोकरनी बन्दछन्। निरन्तर उद्योग गरेका खण्डमा ऋद्धि र सिद्धि तिम्रा दासी हुनेछन्। एकक्षण पनि ईश्वरको चिन्तनविना नबस। प्रत्येक कार्यको आरम्भमा गणपतिको पूजा गरिन्छ। गणपतिजी विघ्नहर्ता हुनुहुन्छ। गणपतिको पूजा गर्नाको अर्थ हो जितेन्द्रिय हुनु। गणपति भन्नुहुन्छ—''म विनाकाम खाली बस्दिनँ।'' जो सधैं काममा लागिरहन्छ त्यसको अमंगल हुँदैन। श्रीगणपतिजी लेखक र व्यासजी वक्ता बन्नुभएको छ। श्रीगणपतिजीले भन्नुभो, ''म एक क्षण पनि खाली बस्ने छैन, तपाईंलाई चौबीसै घण्टा कथा भन्नुपर्ने छ।'' तब व्यासजीले भन्नुभयो, ''म जे भनूँ त्यो योग्य छ वा छैन त्यसको पहिले विचार गरेर मात्र विचारपूर्वक

लेख्नुहोला।'' सय श्लोक पुगेपछि व्यासजीले एउटा यस्तो कठिन श्लोक भनिदिनुहुन्थ्यो जसलाई विचार गर्नमा गणपतिलाई समय लाग्थ्यो र यति समयमा व्यासजीले आफ्नो अन्य काम पूरा गर्नुहुन्थ्यो।

देवताहरूलाई अपरोक्षता बहुतै प्रिय लाग्छ। लेखिएको छ राजा चित्रकेतुका एक करोड़ रानीहरू थिए। संसारका विषयहरूलाई जसले मनमा राख्छ, ऊही चित्रकेतु हो। संसारका सबै चित्र जसका मनमा बसेको छ त्यही चित्रकेतु हो। यस्तो मन जब विषयहरूमा तन्मय भइहाल्छ तब त्यो मन एक करोड़ रानीहरूका साथ रमण गर्छ। यस्तो यसको अर्थ हो ( चित्रकेतुका करोड़ौं रानी थिए ) श्रीभागवतमा अनेकौं पटक यस्ता प्रसंग आएका छन् जसलाई श्रोता र वक्ताले विचार गरून् र तिनको लक्ष्यार्थ के हो बुझुन्। यस कुरालाई हामीले पनि विचार गरौं। यस कुरालाई व्यासजीले अतिशयोक्ति पनि गर्नु भएको छ। जस्तै हिरण्याक्षको मुकुटको अग्रभागले स्वर्गलाई छुन्थ्यो र उसको शरीरले दिशाहरूलाई ढाकिदिन्थ्यो। लोभ दिन-प्रतिदिन बढ्दै जान्छ, यस तत्त्वलाई बताउनु उहाँको यस कथाको उद्देश्य थियो।

सत्कर्ममा विघ्न परिआउँछ, यसैले सात दिनको यस कथाको क्रम बताइएको हो। नत्र सूतजी र शौनकादिको कथा एक हजार दिनसम्म चल्ने थियो। विघ्न नपरोस् भनेरै व्यासजीले सर्वप्रथम 'श्रीगणेशाय नमः' भनेर गणपति महाराजको वन्दना गर्नुहुन्छ। त्यसपछि सरस्वतीजीको वन्दना गर्नुहुन्छ। सरस्वतीको कृपाले मानिसमा बुझ्ने बुद्धि आउँछ। फेरि सद्‌गुरुको वन्दना गर्नुहुन्छ र त्यसपछि श्रीभागवतका प्रधान देव श्रीकृष्णको वन्दना गर्नुहुन्छ। मैले श्रीभागवत शास्त्रको रचना त गरें तर यस ग्रन्थको प्रचार कसले गरिदेला ? व्यासजीले वृद्धावस्थामा यस ग्रन्थको रचना गर्नुभएको छ। त्यस कारण स्वयं उहाँले यस ग्रन्थको प्रचार गर्न पाउनु भएन। वृद्धावस्थामा यस ग्रन्थको रचना गरेपछि उहाँलाई चिन्ता भयो—यो शास्त्र अब म कसलाई दिऊँ ? श्रीभागवतशास्त्र मैले मानव समाजका कल्याणका निमित्त रचेको हुँ। श्रीभागवतको रचना गरेर मैले कलम बन्द गरें। अहिलेसम्ममा मैले धेरै बोलें, मैले थोर-बहुत लेखें, अब म ईश्वरका साथ आफ्नो सम्बन्ध जोड्न चाहन्छु। मेरो जीवन जो प्रभुसँग अलग्ग भएको थियो त्यो श्रीकृष्णका सम्मुख हवस् भन्ने हेतुले मैले भागवतशास्त्र बनाएको हुँ। भागवत यो प्रेमको शास्त्र हो। यस प्रेमशास्त्रको प्रचार त त्यसैले गर्न सक्ला जो अतिशय विरक्त छ। श्रीकृष्णलाई छोड़ेर अन्यका साथ प्रेम गर्ने मानिस यस कथाको अधिकारी हुन सक्दैन। यस्ता को भेटिएलान् ? संसार सुख भोगेपछि तर धेरैलाई वैराग्य आउँछ, तर जन्मदेखिनै जसले वैराग्य ग्रहण गरेको छ त्यस्तो को पाइएला ? कुनै योग्य पुत्रलाई यो ज्ञान दिनसकूँ, जसले जगत्‌को कल्याण गर्न सकोस्—यस्तो विचार गरेर वृद्धावस्थामा पनि व्यासजीलाई पुत्रको इच्छा जाग्यो। भगवान् शङ्कर वैराग्यको स्वरूप हुनुहुन्छ। शिवजीले ममाथि कृपा गर्नुभयो र मकहाँ पुत्ररूपमा पाल्नुभो भने मात्र यो काम हुन सक्छ। रुद्रको जन्म हुन्छ तर

महारुद्रको जन्म हुँदैन, भगवान् शिव परब्रह्म हुनुहुन्छ। उहाँको जन्म पनि छैन। अब शिवजी महाराजले जन्म-धारण गर्नुभयो भने यस भागवतको प्रचार गर्नुपर्ला। भागवतशास्त्रको प्रचार तर शिवजी मात्र गर्न सक्नुहुन्छ, कारण उहाँमा मात्र सम्पूर्ण वैराग्य छ, जन्मैदेखि जसलाई वैराग्य हुन्छ त्यसैले श्रीभागवतको प्रचार गर्न सक्छ। श्रीशुकदेवजीमा सम्पूर्ण वैराग्य छ। व्यासजीले श्री शंकरजीको आराधना गर्नुभो। शिवजी महाराज प्रसन्न हुनुभयो। व्यासजीले माग्नुभो, —"समाधिमा जो आनन्द हजुर भोग्नु हुन्छ, त्यही आनन्द जगत्‌लाई दिन निमित्त हजुर मेरो घरमा पुत्ररूप भएर पाल्नुहोस्।" भगवान् शंकरलाई त यस संसारमा आउन मन पर्दैन। संसारमा आएपछि मायाले अँगालो मारिहाल्छिन्। कोइला खानीमा गएपछि हात-गोड़ा कालो हुन्यै भयो। कालो लागिहाल्छ। व्यासजीले भन्नुभो, "महाराज हजूरलाई संसारमा आउने केही आवश्यकता छैन, तर अनन्त जीवहरूको कल्याण गर्नलाई हजूर कृपा गर्नोस् र आउनोस्। हजूरलाई मायाले कसरी प्रभावित गर्न सक्छे?" शिवजीले विचार गर्नुभो समाधिमा म आनन्दको अनुभव गर्छु, यदि यस्तो आनन्द जगत्‌लाई नदिऊँ भने म स्वार्थी कहलिनेछु। समाधिको आनन्दको दान मैले जगत्‌लाई दिनुपर्‍यो। यस्तो विचार गरेर शिवजी महाराज अवतार लिन तयार हुनुभो। श्री शुकदेवजी भगवान् शिवजीको अवतार हुनुहुन्थ्यो, त्यसकारण उहाँ जन्मैदेखि पूर्ण निर्विकार हुनुहुन्थ्यो। जो जन्मैदेखि विरक्त हुन्छ त्यही सोह्र आना वैरागी कहलाइन्छ।

ज्ञानी पुरुष मायाको संगत गर्दैनन्। ज्ञानी पुरुष मायादेखि सदा टाढ़ा बस्ने प्रयत्न गर्छन्। तर वैष्णव भक्त मायामा पनि ईश्वरको अनुभव गर्दछन्। श्रीशुकदेवजीका जन्मका कथाहरू अब पुराणमा पनि छन्।

श्रीशुकदेवजी सोह्र वर्षसम्म आमाको पेटभित्र बस्नुभएको थियो। आमाको पेटभित्र उहाँले सोह्र वर्षसम्म परमात्माको ध्यान गर्नुभयो। श्रीव्यासजीले सोध्नुभयो—"तिमी बाहिर किन आउँदैनौ?" श्रीशुकदेवजीले उत्तर दिनुभयो, "म संसारको भयले नआएको हुँ। मलाई मायाको डर लाग्छ।" यसो भएको हुँदा श्री द्वारिकानाथले आश्वासन दिनुभयो मेरी मायाले तिमीलाई छुन सक्ने छैनन्। तब शुकदेवजी आमाको गर्भबाट बाहिर आउनुभयो। श्रीशुकदेवजीको ब्रह्मनिष्ठा, वैराग्य, अलौकिक प्रेम लक्षणा भक्ति देखेर व्यासजी पनि श्रीशुकदेवजीको मान गर्नुहुन्छ। जन्मिनासाथ श्रीशुकदेवजी वनतर्फ जान लाग्नुभयो। अरणी देवी आमाले प्रार्थना गर्नुभयो मेरो छोरो निर्विकार ब्रह्मरूप छ। यो मबाट टाढ़ा नजावस्। यसलाई रोक। यसलाई रोक। व्यासजी उनलाई सम्झाउनुहुन्छ, "जो हामीलाई अति प्यारो लाग्छ त्यही परमात्मालाई अर्पण गर्नुपर्छ। उनी त जगत्‌को कल्याण गर्न गइरहेका छन्।" त्यसपछि व्यासजी पनि विह्वल हुनुभो र विचार गर्नुहुन्छ—अब यो जाने भो, फर्किएर आउने होइन। व्यासजी महाज्ञानी हुनुहुन्थ्यो र पनि छोराका पछिपछि दगुर्नुभएको छ। व्यास नारायण श्री शुकदेवजीलाई बोलाउनुहुन्छ, "हे पुत्र! हे पुत्र! फर्केर आऊ। मलाई छोड़ेर नजाऊ, म तिमीलाई विवाह गर्नका निमित्त कर गर्ने छैन।" श्रीकृष्णको

ध्यान गर्दागर्दा सबैलाई मान गर्नुपर्ने कुरा बिर्सिएर त्यस उन्मत्त अवस्थामा को कसको पिता ? को आमा ? लौकिक सम्बन्ध बिर्सिइन्छ, अनि ब्रह्म सम्बन्ध हुन जान्छ। जबसम्म भौतिक सम्बन्धको संझना हुन्छ तबसम्म ईश्वरमा आसक्ति ( भक्ति ) हुँदैन।

सर्वव्यापक भइसक्नुभएका श्रीशुकदेवजीले वृक्षहरूद्वारा उत्तर दिनुहुन्छ, "हे मुनिराज, हजूरलाई पुत्रको वियोगबाट दुःख भइरहेछ, तर हामीलाई जसले ढुङ्गा वर्षाउँछ, हामी त्यसलाई फल दिन्छौं। वृक्षहरूको पुत्र उनको फल हो। ढुङ्गा हान्नेलाई पनि फल दिने त्यही मात्र वैष्णव हो। तब तपाईं पुत्र वियोगबाट किन रुनुहुन्छ ? तपाईंको छोरा जगत्‌कल्याण गर्न भनी हिँड़ेका छन्।" व्यासजी अहिलेसम्म व्यग्र हुनुहुन्छ। यसपछि श्रीशुकदेवजीले भन्नुभो, "यो जीव अनेक पटक पुत्र बन्यो र अनेक पटक पिता बनेको छ। वासनाहरूद्वारा जेलिएको जीव अनेक पटक पिता-पुत्र-स्त्री बन्दछ। अनेकौं पटक पूर्वजन्मका शत्रु पनि घरमा आउँछन्। आफ्ना वासनाहरूको कारण बाजे पनि नाति बनेर आउँछ। वासना सदा पूर्वजन्मको कारण बन्दछ। पिताजी, मेरो र हजूरका अनेक जन्म भएका छन्। पूर्वजन्म संझना हुँदैन, यही राम्रो हो। पिताजी, न हजूर मेरो पिताजी हुनुहुन्छ, न म हजूरको छोरो। हजूरको र मेरो साँच्चिकै पिता तर श्री नारायण हुनुहुन्छ। वास्तवमा जीवको सच्चा सम्बन्ध ईश्वरका साथ मात्र छ। पिताजी, मेरा पछि नलाग्नु होस्, श्री भगवान्‌का पछि पर्नुहोस्। हजूरले आफ्नो जीवन परमात्माका निम्ति बनाउनुहोस्। मैले जो आनन्द पाइरहेको छु त्यो आनन्द म जगत्‌लाई दिन जान्छु।" त्यसपछि श्री शुकदेवजी त्यहाँबाट नर्मदा तटमा आउनुभयो। श्री शुकदेवजीले भन्नुभयो "नर्मदाको यस किनारामा म बस्छु र सामुन्नेको किनारामा तपाईं बस्नुहोस्। पिताजी, अब मेरो ध्यान छोड़िदिनुहोस्। मेरो ध्यान नगर्नुहोस्। टाढ़ाबाट हजूरले मलाई हेर्दै गर्नुभए पनि ध्यान तर परमात्मामै लाउनुहोला। जो परमात्माका पछि लाग्छन्, ती ज्ञानी हुन्। पैसाका पछि नपर्नुहोस्, तर परमात्माका पछि लाग्नुहोस्। भागवत्‌को कथा सुनेपछि तपाईं पनि परमात्माका पछि लाग्नुहोस्। अनि नै कथा सुनेको सार्थक होला। यो नर जो नारायणका पछि लाग्यो भने कृतार्थ हुन्छ।" व्यासजी आफ्नी पत्नीलाई संझाउनु हुन्छ यदि शुक ( श्री शुकदेव ) तिमीलाई अति प्रिय छ भने यसलाई अन्तर्यामीमा अर्पण गर। जो हामीलाई अति प्रिय लाग्छ त्यो प्रभुलाई टक्र्यायौं भने हामी पनि प्रभुको प्रिय बन्ने छौं। यस्ता सर्वभूतहृदयस्वरूप हाम्रा सद्‌गुरु श्री शुकदेवजीको चरणमा हामी बारंबार वन्दना गरौं।

सूतजीले श्री शुकदेवजीलाई प्रणाम गरेर यस कथाको आरम्भ गर्नुभएको छ।

एक पटक नैमिषारण्यको क्षेत्रमा शौनकजीले सूतजीलाई भन्नु भयो, "आजसम्म कथाहरू धेरै सुनेको छु। अब कथाको सारतत्त्व सुन्ने इच्छा छ। मलाई अब कथा सुन्नु छैन, सब कथाहरूको सारभूत के छ त्यो सुन्नु छ।" "कथासारं मम कर्णरसायनम्" यस्तो कथा सुनाउनुहोस् जसबाट मेरो भगवान् श्रीकृष्णमा भक्ति दृढ़ होस्। मलाई श्रीकृष्ण प्राप्ति होस्। जस्तै नौनी दूधको सार ( तत्त्व ) हो त्यस्तै सबैको सार ( तत्त्व ) श्रीकृष्ण भगवान् हुनुहुन्छ।

श्री ठाकुरजीलाई नौनी ज्यादै मन पर्छ। लालालाई नौनी मनपर्छ, केही अरू काम लाग्दैन रे। नौनी सबको सार हो र परमात्मा सारभोगी हुनुहुन्छ। आजसम्म धेरै ग्रन्थ पढ़ेका छौं। जसलाई परमात्मा प्राप्त गर्नु छ यस्ता साधकलाई आज्ञा भएको छ, ''त्यसैले धेरै ग्रन्थ नपढ़ोस्। अनेक ग्रन्थ पढ्नाले बुद्धिमा विक्षेप उभिन आउँछ। हाम्रा भगवान् श्रीबालकृष्ण सारभोगी हुनुहुन्छ। त्यसकारण वैष्णव भक्त सारभोगी हुन्। यसैले सब कथाहरूको सारतत्त्व सुन्ने इच्छा भएको छ। जीव प्रकृतिको भोगलाई छोड़ र श्रीकृष्णमा मन लगाऊ जीव पनि शिव भइहाल्छ।''

भागवत नौनी हो। अरू शास्त्र दूध-दही जस्ता हुन्। सारा शास्त्रहरूको साररूप यो श्रीकृष्ण कथा हो। शौनकजी भन्नुहुन्छ, ''ज्ञान र वैराग्यका साथ भक्ति बढ़ोस् यस्तो सारभूत कथा सुनाउनु जसले ज्ञान बढ़ोस्, भक्ति बढ़ोस्। यस्तो सारतत्त्व सुनाउनु जसबाट हामीलाई भगवान्‌को प्रत्यक्ष दर्शन मिलोस्। ज्ञानवैराग्यका साथ भक्ति बढ़ाउनलाई यो कथा हो। कथा रुनका निमित्त हुन्छ। महान् भक्तहरूको, महान् पुरुषहरूको चरित्र सुनेर हामीलाई ज्ञान हुन्छ अहो ! मैले आफ्नो आत्माको उद्धारार्थ केही गरेकै छैन।''

कथा सुनेपछि यदि आफ्ना पापहरूको निमित्त पश्चात्ताप भएर प्रभुका निमित्त आफ्ना हृदयमा प्रेम जाग्यो भने कथाश्रवण सार्थक हुन जान्छ। संसारका विषयहरूका प्रति वैराग्य भएन र प्रभुका प्रति प्रेम जागेन भने यस्तो कथा कथै होइन। ब्रह्माजीले नारदजीलाई आज्ञा गर्नु भएको छ, ''छोरा, कथा यस्तो गर जसबाट मानिसलाई मेरा प्रभुका प्रति भक्ति जागोस्।'' कथाले मनुष्यको जीवनलाई सुधार्छ। जीवनको परिवर्तन गर्छ। कथाले मानिसको जीवनमा क्रान्ति ल्याउँछ। कथा सुनेर पनि यदि जीवनमा केही परिवर्तन भएन भने ठान तिमीले कथै सुनेनछौ। शौनक मुनिले त्यसकारण प्रार्थना गर्नुभएको छ मेरो ज्ञान बढ़ोस्, मेरो भक्ति बढ़ोस्, यस्तो कथा भन्नुहोस्। केवल भक्ति बढ़ोस् यस्तो भनेको होइन। भक्ति, ज्ञान र वैराग्यका साथ- साथै बढ़ोस्।

लौकिक दृष्टिबाट हलुवामा गहुँको मूल्य केही धेरै होइन, तर पिठोविना हलुवा बन्न सक्दैन। तत्त्वका दृष्टिबाट विचार गऱ्यौं भने पीठोको मूल्य पनि घीउ जतिकै हुन्छ। हलुवा बनाउनमा घीउ, चिनी र पिठोको आवश्यकता एकनास छ। यस्तै प्रकारले ज्ञान, वैराग्य र भक्तिको आवश्यकता एकसमानै छ र जीवनमा यी तीनैको आवश्यकता छ। पच्चीस आना ज्ञान र वैराग्य आयो भने जीवनको जीवभाव जान्छ। जसमा ज्ञान, भक्ति र वैराग्य परिपूर्ण हुन्छ त्यही उत्तम वक्ता हो।

अनेक ऋषि-मुनि त्यहाँ गङ्गाका किनारामा बसेका थिए, तर कथा भन्नलाई कोही तयार भएनन्। तब भगवान्‌ले श्री शुकदेवजीलाई वहाँ जान प्रेरित गरिदिनुभो। श्री शुकदेवजीमा ज्ञान, भक्ति र वैराग्य परिपूर्ण छ।

भागवतशास्त्र प्रेमको शास्त्र हो। प्रेम पाँचौं पुरुषार्थ हो। श्रीकृष्णको प्रेममा देहै भूलियो भने प्रेम सिद्ध भो भनी ठान्नुपर्छ। परमात्माले प्रेमलाई आफ्नो स्वरूप भन्नुभएको छ।

ज्ञानमार्गमा प्राप्त गरेको कुरा मात्र प्राप्त भएको हुन्छ। ज्ञानमार्गमा जो प्राप्त गरेको छ त्यसैको अनुभव गर्नुपर्ने हो। भक्तिमार्गमा भक्तिद्वारा भेदको विनाश गर्नु छ। भक्तिमार्गमा भेदको विनाश छ। ज्ञानमार्गमा भेदको निषेध छ। ज्ञानमार्गमा ज्ञानद्वारा भेदको निषेध गरिएको छ। ज्ञान र भक्ति दुवै मार्गको लक्ष्य एउटै हो।

सूतजी भन्नुहुन्छ—"तपाईंहरू ज्ञानी हुनुहुन्छ। तर मानिसहरूको उपकार गर्न तपाईं प्रश्न गर्नुहुन्छ भने कृपया सावधान भएर कथा सुन्नुहोस्। पूर्वजन्महरूका पुण्यको उदय भएमा यस्तो पवित्र कथा सुन्ने साइत पर्छ।"

कलियुगका जीवहरूलाई कालरूपी सर्पको मुखबाट छुटाउनलाई श्री शुकदेवजीले श्री भागतवतको कथा भन्नु भएको छ। जुन समयमा श्री शुकदेवजीले राजा परीक्षित्‌लाई यो कथा सुनाइरहनुभएको थियो सो समयमा अमृत लिएर स्वर्गका देवतागण त्यहाँ आए। उनीहरूले भने—"स्वर्गको यो अमृत हामी राजालाई दिन्छौं, सट्टामा यो कथामृत हामीलाई तपाईंले दिनुहवस्।" शुकदेवजीले परीक्षित्‌लाई सोध्नुभयो, 'यो कथामृत पिउने हो वा स्वर्गको अमृत ?' तब परीक्षित्‌ले सोध्नुभयो, 'स्वर्गको अमृत पान गरेर के लाभ ?' श्री शुकदेवजीले भन्नुभो, 'स्वर्गको अमृत पिउनाले स्वर्गको सुख पाइन्छ, तर कथामृतको पानले पापहरूको नाश हुन्छ। कथामृतबाट भोगवासनाको विनाश हुन्छ। त्यसकारण स्वर्गको अमृतभन्दा यो कथामृत श्रेष्ठ छ।'

सनत्कुमार ब्रह्मलोकमा बस्थे। एक पटक उनी पनि यस कथाको आनन्द लिन भारतभूमिमा आए। यसबाट थाहा हुन्छ ब्रह्मलोकमा पनि यस कथाको आनन्द जस्तो आनन्द रहेनछ। तब परीक्षित् राजाले भन्नुभयो, "भगवन् ! मलाई यस स्वर्गको अमृत पान गर्नु छैन। म तर यस कथामृतको पान गर्छु।"

सातै दिनमा ज्ञान र वैराग्य जगाउनुलाई यो कथा हो। ज्ञान र वैराग्य आफ्नो भित्रै छ तर सुतेको छ। त्यसलाई ब्यूँझाउनु छ। ज्ञान र वैराग्यलाई मूर्च्छा आएको छ भन्ने कथा अगाड़ि आउनेछ। सात दिनमै यी ज्ञान र वैराग्यलाई ब्यूँझाएर भक्तिरस उत्पन्न गर्नुछ। त्यसका निमित्त यो कथा हो। यस्तो अरू कुनै ग्रन्थ छैन जसले सातै दिनमा मुक्ति दिलाओस्।

सूतजी भन्नुहुन्छ—सातै दिनमा परीक्षित्‌लाई जुन कथाले मुक्ति दिलाएको थियो सोही कथा तपाईंहरूलाई सुनाउँछु। सात दिनमै परीक्षित्‌लाई मुक्ति मिल्यो। किनभने उनका निमित्त यो निश्चित थियो ठीक सातौं दिन उनको काल आउने भएको छ। तर हामी काललाई बिर्सन्छौं।

वक्ता श्री शुकदेवजी र श्रोता परीक्षित्‌जस्तो अधिकारी भए सात दिनमा मुक्ति पाइन्छ। वक्ता र श्रोता दुवै अधिकारी हुनुपर्छ। बिजुलीको प्रवाह र बल्ब दुइटै ठीक हुनुपर्छ। वक्ता र श्रोता दुइटै अधिकारी भएका खण्डमा यस कथाले मुक्ति दिलाउँछ। कथा सुनेपछि परीक्षित्‌लाई लिन विमान आयो र उनले सद्‌गति पाए। परीक्षित् महाराज विमानमा बसेर श्रीपरमात्माको धाम गए। आजकल मानिसहरू कथा धेरै सुन्दछन् तर उनीहरूलाई लिन विमान किन आउँदैन ? यसको कारण यही

हो वक्ता र श्रोता अधिकारी हुँदैनन्। मानिस जबसम्म वासनाहरूमा जेलिएको छ तबसम्म विमान कसरी आउला? यदि यसभन्दा पहिले विमान आइहाल्यो भने पनि यसमा कोही बस्ने छैन। केही गरी स्वर्गबाट विमान लिन आयो भने पनि मानिसको जाने तयारी पो कहाँ भएको छ र! हामी सबै विकार र वासनाहरूद्वारा बाँधिएका छौं। मानिस पत्नी, पुत्र, धन, घर आदिमा फँसेका छौं। जबसम्म यो आसक्ति छुट्दैन तबसम्म मुक्ति पाइँदैन। जसको मन परमात्माको रङ्गमा रङ्गिएको छ त्यस्तालाई जहाँ बस्यो उहीं मुक्ति छ। यस्ताहरूलाई लिन विमान आए पो के नआए पो के? ईश्वरका साथ तन्मयता भयो भने त्यसैमा आनन्द पाइन्छ। त्यसभन्दा बढ़ेर आनन्द तर बैकुण्ठमा पनि छैन।

भक्त तुकारामलाई लिन भनी विमान आयो तब तुकारामले आफ्नी दुलहीलाई भने "यस जीवनमा मैले तिमीलाई कुनै सुख दिन सकिनँ, तर परमात्माले हामीलाई विमान पठाएको छ। तब जाऊँ, तिमीसहित विमानमा बसेर परमात्माको धाम। आऊ, मसँग हिँड़।" तर दुलहीले मानिनन्। उनले भनिन्—"महाराज, तपाईंलाई जाने मन छ भने जानुहोस्। मलाई जगत् छोड़ेर स्वर्ग जानु छैन।" तिनी गइनन्।

संसारको मोह छोड्न बड़ो कठिन छ। जबसम्म वासना अङ्कुशमा पर्दैन तबसम्म शान्ति पाउन सकिँदैन। कथाको एकाध सिद्धान्त पनि यदि मनमा गड़ाउन सकियो भने जीवन मधुर बन्न जान्छ। वासनाहरू बढ्दछन्, भोग बढ्दछन्, यसैले संसार कटु बन्न जान्छ। जबसम्म वासनाहरू क्षीण हुँदैनन् तबसम्म मुक्ति पाउन सकिन्न। पूर्वजन्मको शरीर गइहाल्यो तर पूर्वजन्मको मन गएको छैन। मानिसहरू आफ्नो शरीरको, लुगाको खूब चिन्ता गर्छन् तर मरेपछि पनि जो साथै जान्छ त्यस मनको चिन्ता गर्दैनन्। मरेपछि पनि जसलाई पछि आउनु छ त्यसको फिक्री गर। धन, शरीरादिको चिन्ता नगर। मरेपछि जो औंठी तिम्रो औंलामा छ त्यो पनि मानिसले झिकेर लिन्छन्।

आचार-विचारविना मनको शुद्धि हुँदैन। जबसम्म मनको शुद्धि हुँदैन तबसम्म भक्ति हुन सक्दैन। ज्ञान र वैराग्यलाई दृढ़ गर्नका निमित्त यो भागवतको कथा हो।

विवेकद्वारा जबसम्म संसारको अन्त्य गरिँदैन तबसम्म संसारको अन्त्य हुने होइन। जीवनमा संयम र सदाचार जबसम्म ल्याउन सकिँदैन तबसम्म पुस्तकहरूबाट पाइएको ज्ञान कुनै काम लाग्दैन। केवल ज्ञानमात्र के काम?

एउटा गृहस्थका पुत्रको मृत्यु भयो। गृहस्थ रुन्छ। त्यसको घरमा कुनै ज्ञानी साधु आउँछन् र उपदेश दिन्छन्, "आत्मा अमर छ। मरण शरीरको हुन्छ, त्यसकारण तिमीले पुत्रका मृत्युको शोक गर्नु अनुचित हो।" केही समयपछि ती साधुको बाख्री मरिछ र साधु रुनथाले। साधुलाई रोएको देखेर त्यस गृहस्थले साधुलाई सोध्यो, 'महाराज तपाईं तर मलाई उपदेश दिनुहुन्थ्यो कसैको मृत्युमा शोक नगर्नु। तब फेरि तपाईं केका निमित्त रोइरहनु भएको छ?' साधुले जवाफ

दिए, 'छोरा तिम्रो थियो र बाख्री चाहिँ मेरी भई, त्यसैले रुन्छु।' यस्तो 'परोपदेशे पाण्डित्यम्' के कामको ?

ज्ञानलाई अनुभव गर, मुक्त हुनका निमित्त ज्ञान काम लाग्छ। कथाले जीवनलाई सुधार्छ। जीवनलाई पल्टाइदिन्छ। कथा सुनेपछि जीवन पल्टिएन भने संझ कथा बराबर सुनेकै रहेनछौ। कथाले मुक्ति दिन्छ, यो कुरा बिलकुल सत्य हो।

सधैं मृत्युलाई एक-दुइपटक संझने गर। शायद आज मलाई यमदूतले समात्न आए भने मेरो के दशा होला ? यदि यस्तो तिमीले सधैं सोच्न थाल्यौ भने पाप हुने छैन। मानिस मरणको विचार दिन-दिनै गर्दै गर्दैन, तर भोजनको विचार सधैं गर्दछ।

यस भागवतशास्त्रको महिमाको वर्णन अरू धेरै पुराणहरूमा गरिएको छ। तर सामान्यतः पद्मपुराणअन्तर्गत माहात्म्यको वर्णन विशेष रूपले भएको छ। अब श्रीभागवतको महिमाको वर्णन गर्नुछ। यसमा श्रीभागवतको महिमाको वर्णन गरिन्छ। यस कथाको माहात्म्य एक पटक सनत्कुमारहरूले श्री नारदजीलाई भनी सुनाउनुभएको थियो। माहात्म्यमा लेखिएको छ—बड़े-बड़े ऋषि र देवता ब्रह्मलोक छोड़ेर विशालक्षेत्रमा यो कथा सुन्न भनी आएका थिए। यस कथामा जो आनन्द पाइन्छ त्यो ब्रह्मानन्दभन्दा पनि श्रेष्ठ छ। योगी केवल आफ्नोमात्र उद्धार गर्छन् तर सत्संगीले आफ्नासाथ आएका सबैको उद्धार गर्छ। बदरिकाश्रममा सनत्कुमार पाल्नुभएको छ। जसलाई मानिस बद्रिकाश्रम भन्दछन्, त्यही विशालक्षेत्र हो।

स्कन्दपुराणमा यस्तो कथा आउँछ बद्रीनारायण विशाल राजाका निमित्त सवारी भएको थियो। पुण्डरीकका निमित्त विट्ठलनाथ आएका थिए। जुन भक्तका निमित्त भगवान् आउनुभयो, त्यो धन्य छ। बद्रीनारायणजी तप-ध्यानको आदर्श जगत्लाई बताउनुहुन्छ। उहाँ भन्नुहुन्छ, ''म ईश्वर भए पनि तप गर्छु, ध्यान लगाउँछु। तपश्चर्याका विना शान्ति पाइँदैन। जीव कठिन तपश्चर्या गर्न सक्दैन, त्यसकारण श्रीभगवान् आदर्श भएर देखा पर्नुभएको छ। बालकले जब औषधि खाँदैन तब आमाले स्वयं खाएर देखाउँछिन्, जसबाट बालकले बुझ्दछ औषधि पनि एउटा खाने वस्तु रहेछ। यद्यपि आमाले औषधि खानुपर्ने कुनै आवश्यकता थिएन, तर बालकलाई संझाउनका निमित्त उनले पनि खाइन्।''

श्री बद्रीनारायणको मन्दिरमा लक्ष्मीजीको मूर्ति मन्दिरको बाहिरपट्टि छ। स्त्री र बालकको सङ्गत तपश्चर्यामा विघ्नरूप हुन्छ, यसमा स्त्रीको केही निन्दा हुँदैन तर कामको निन्दा हुन्छ। कसैले पनि पत्नी र बालकहरूको त्याग गर्नुपर्दैन, त्यसकारण भन्नुपर्छ पत्नी र बच्चाहरूका साथ घरमा बसेरै भगवानको भजन गर। यस्तै किसिमबाट तपस्विनी स्त्रीका निमित्त पनि पुरुषको सङ्गत त्याज्य छ।

विशालपुरीमा जहाँ सनत्कुमार राज हुन्थ्यो त्यहाँ एक दिन घुम्दै-घुम्दै नारदजी आइपुग्नुभयो। त्यहाँ सनकादि ऋषिहरूका साथ नारदजीको मिलन भयो। नारदजीको मुख निनाउरो देखेर सनकादिले उनीसँग उदासीनताको कारण सोध्नुभयो, " तपाईं चिन्तामा किन हुनुहुन्छ ? तपाईं हरिदास हुनुहुन्छ। श्रीकृष्णको दास, कहिल्यै नहुनु उदास। वैष्णव त सदा प्रसन्न रहन्छन्। जसले चिन्ता गर्दैन त्यही हो वैष्णव। वैष्णव त प्रभुको चिन्तन गर्छन्। तैपनि तपाईं किन प्रसन्न हुनुहुन्न ?" नारदजीले भन्नुभयो, "मेरो देश दुःखी छ। सत्य, तप, दया, दान रहेन। मानिस बोल्दछ एक कुरा र उसका मनमा छ अर्कै कुरा र पनि गर्दछ फेरि अर्कै कुरा। अरू विशेष के भनूँ ? ( उदरम्भरिणो जीवाः ) जीव केवल आफ्नो-आफ्नो पेट भर्नेवाला र स्वार्थी हुन गएको छ।"

समाजमा कसैलाई पनि सुख-शान्ति छँदै छैन। मैले अनेकौं स्थानहरूको परिभ्रमण गरेको छु। तैपनि मलाई शान्ति भएन। आज सारा देश दुःखी किन भइरहेछ ? नारदजीले यसको कैयन् कारण बताउनु भएको छ। धर्म र ईश्वरमा जबसम्म आस्थावान् होइँदैन, तबसम्म देश सुखी हुन सक्दैन। जसको जीवनमा धर्मको स्थान प्रधान छैन, त्यसलाई जीवनमा कहिल्यै शान्ति मिल्दैन। धर्म र ईश्वरलाई बिर्सने मानव कहिल्यै सुखी हुँदैन। जगत्मा अब धर्म बाँचेकै कहाँ छ ?

नारदजीले यो कुरा दुःखसाथ भन्नुभयो यस जगत्मा सत्य रहेन। जगत्मा असत्य धेरै बढ्न गएको छ। असत्य समान कुनै पाप छैन। उपनिषद्हरूमा भनिएको छ असत्यभाषीलाई केवल पापमात्र लाग्ने होइन उसका पुण्यहरूको पनि क्षय हुन्छ। यदि साँचो आनन्द पाउने इच्छा राख्छौ भने सत्यमा निष्ठा राख। असत्य बोल्ने मानिस न कहिल्यै सुखी भएको छ र न कहिल्यै होला।

मितभाषी बन्यौ भने सत्यभाषी बन्न सक्नेछौ।

जगत्मा कतै पनि पवित्रता देखिँदैन। शरीर र वस्त्र जस्ता प्रकारले सफा-सुग्घर राखिन्छ, त्यस्तै प्रकारबाट मनलाई पनि पवित्र राख्नुपर्छ। मानिस कपड़ालाई त स्वच्छ राख्छ तर मनलाई स्वच्छ राख्दैन। मनलाई एकदम पवित्र राख किनकि मन त सँगसँगै आउने हो।

जगत्मा कहीं पनि नीतिको दर्शन हुँदैन। नीति र अनीतिबाट थोरबहुत धन-सम्पत्ति जम्मा गर्नुछ र कुमार्गमा खर्च पनि गर्नुछ। कुटुम्ब सुखको उपरान्त पनि कुनै सुख छ वा छैन, यसको विचार पनि मनुष्य गर्दैन। त्यसले तर यही विचार गर्छ यस धन-सम्पत्तिबाट म आफ्ना कुटुम्बलाई सुख दिन्छु। आफ्ना इन्द्रियहरूको ऊ यति दास हुन जान्छ जसले गर्दा उसलाई कुनै पवित्र विचार आउँदै आउँदैन। शरीर र इन्द्रियहरूको सुखमा यति जेलिएको छ उ शान्तिसँग विचार पनि गर्न सक्दैन। सच्चा र श्रेष्ठ आनन्द कुनचाहिँ हो र कसरी पाउन सकिन्छ भन्न सक्दैन। जीवनमा जबसम्म कुनै पवित्र लक्ष्य निश्चित हुँदैन तबसम्म पाप रोकिने भएन। जसले लक्ष्यलाई कायम राख्न सक्दछ, त्यही पापबाट जोगिन सक्दछ।

मानिसलाई आफ्नो जीवनको लक्ष्य थाहा छैन। त्यस मन्दबुद्धिले गर्ने लायक काम गर्दै गर्दैन। जगत्मा अन्न बिक्री हुन थालेको छ। जगत्मा पाप धेरै बढ़ेर गएको छ। त्यसैले पृथ्वीमाताले अन्नलाई आफ्ना पेटभित्र सँगालेर लिनुभएको छ। अन्न विक्रय गर्नु पाप हो।

ज्ञानको पनि बिक्री हुन थालेको छ। ज्ञानको बिक्री नगर। ब्राह्मणले निष्काम भावले जगत्लाई ज्ञान दान गर्नुपर्छ। अन्नदानभन्दा पनि ज्ञानदान श्रेष्ठ हो किनभने ज्ञानले सदा शान्ति पाइन्छ।

जहिलेदेखि अन्न र ज्ञानको बिक्री चलेको छ तहिलेदेखि पवित्रता नष्ट हुन गयो र पाप बढ़िरहेछ।

मानिसको भावना जबदेखि बिग्रेको छ तबदेखि विश्वमा त्यसको जीवन पनि विकृत हुन गएको छ।

संसारमा मैले कतै पनि शान्ति देख्न पाइनँ। यसप्रकार कलियुगको दोष हेर्दै, घुम्दै-फिर्दै म वृन्दावनमा पुगें। त्यहाँ एउटा अचम्म देखें। एक युवतीलाई देखें, उनका नजिकै दुइ पुरुष मूर्च्छामा परिरहेका थिए। ती स्त्रीले चारैतिर हेरिरहेकी थिइन्। ती स्त्रीले मलाई बोलाइन् र म उनका नजिक गएँ। साधुपुरुष कुनै स्त्रीका नजिक जाँदैनन्, त्यसकारण नारदजी नबोलाईकन त्यसै जानुभएन। ती युवतीले मलाई भनिन्, ''एकक्षण पर्खनोस् !''

अर्काको काम सिद्ध गरिदियौ भने तिमी साधु बन्नेछौ। सुनभन्दा पनि बढ़ी मूल्यवान् समयलाई मान्ने साधु हो। जसलाई समयको केही मूल्य थाहा छैन, त्यसले अन्त्यकालमा खूब पछुताउनु पर्नेछ। कसैको एकक्षण पनि बिग्रिनु हुन्न।

अत: जब एक क्षण पर्खनलाई भनेपछि मैले ती युवतीलाई प्रश्न गरें, ''देवीजी, तपाईं को हुनुहुन्छ ?'' ''मेरो नाऊँ भक्ति हो'', ती युवतीले जवाफ दिइन्—'यी ज्ञान र वैराग्य मेरा पुत्र हुन्।' यी अब बूढ़ा भएका छन्। मेरो जन्म द्रविड़ देशमा भएको हो। महान् आचार्य दक्षिण भारतमा प्रकट भएका थिए।'' श्रीशङ्कराचार्य र श्रीरामानुजाचार्य दक्षिणमा जन्मनुभएको थियो।

''कर्णाटकमा मेरो परिपालन भयो र बढ़ें पनि त्यहीं।'' आचार-विचार जहाँ शुद्ध हुन्छ त्यहाँ भक्तिले पुष्टि पाउँछ। आचार-विचार शुद्ध भयो भने भक्ति हुन सक्दछ। विचारहरूका साथ-साथ आचार पनि शुद्ध हुनुपर्छ। कर्णाटकमा आज पनि आचारको शुद्धि देख्न पाइन्छ। भगवान् व्यासजीलाई कर्णाटकका प्रति कुनै पक्षपात थिएन। तर जो साँचो थियो त्यसैको उहाँले वर्णन गर्नुभएको छ। अहिले पनि कर्णाटकमा मानिस निर्जला एकादशी पारायण गर्दछन्। एकादशीको अर्थ तिहार होइन।

मेरा एक-एक गरेर सबै इन्द्रियहरू भगवान्लाई अर्पण गर्नु छ—यस्तो भावनाद्वारा एकादशीको व्रत गर्नुपर्छ।

''महाराष्ट्रमा कुनै-कुनै स्थानमा मेरो सम्मान भयो। महाराष्ट्रमा कतै भक्तिलाई सम्मान मिलेको छ। पंढरपुर जस्तो स्थानमा भक्तिको दर्शन पाइन्छ। गुजरातमा म जीर्ण भइसकेकी छु, 'गुर्जरे जीर्णतां गता'। गुजरातमा म आफ्ना दुवै छोराहरूका साथ वृद्धा भएँ।'' धनको दास प्रभुको दास हुन सक्दैन। गुजरात काञ्चनको लोभी भइसकेको छ, अतः भक्ति छिन्नभिन्न भएकी छन्।

भक्तिका प्रधान अङ्ग नौवटा छन्। यिनमा प्रथम श्रवण हो। खालि कथा सुनेर मात्र भक्ति पूरा हुन सक्दैन। जो सुनेका छौ त्यसको मनन गर। मनन गरेर जति जीवनमा लागू गर्न सकिएला त्यति नै भागवत श्रवण सार्थक भयो भन्नुपर्ला। कथा सुन्नाले पाप डढ्दछ, तर मनन गरेपछि जीवनमा लागू गर्नाले पो मुक्ति पाइन्छ।

श्रवण भक्ति छिन्नभिन्न भइरहेछ, किनभने मनन रहेन। मनन नगर्नाले श्रवण हुँदैन। मननको अभावमा श्रवण भक्ति क्षीण हुँदै गइरहेछ।

कीर्तन भक्ति पनि रहेन किनभने कीर्तनमा पनि कीर्तन र काञ्चनको लोभ घुस्न पुग्यो र त्यसपछि कीर्तन भक्ति भ्रष्ट भएको छ।

ज्ञानी पुरुषहरूलाई अपमानभन्दा पनि सम्मान ज्यादै नराम्रो लाग्छ। धनको लोभको अपेक्षा कीर्तिको मोह छुट्नु बड़ो कठिन छ। कीर्तिको मोहले ज्ञानीलाई पनि सताउँछ। म आफ्नो मनलाई संझाउँछु। जबसम्म तिमी आफ्नो मनलाई स्वयं संझाउँदैनौ तबसम्म त्यसले मान्ने पनि होइन।

कथा-कीर्तनमा जगत् अनायासै बिर्सिन पुग्छ। कथा सुन्न बसेपछि संसार व्यवहारका विचारहरूलाई मनबाट पन्छाइदेऊ। म आफ्ना श्रीकृष्णाको चरणमा बसेको छु, यस्तो भावना राख। कीर्तन-भक्ति निष्काम हुनुपर्छ। सन्त तुलसीदासले भन्नुभएको छ स्वान्तः सुखाय। म आफ्नो सुखका निमित्त कथा भन्छु। अरूले के सुख पाउँछन् यसको मलाई कुनै खबर छैन। मेरो मनलाई आनन्द मिलोस् भनेरै म कथा भन्छु।

वन्दन भक्ति अभिमानका कारणले खतम भयो। अभिमान बढ्नाले नै वन्दन भक्तिको नाश भयो। सबमा श्रीकृष्णाको भावना राखेर सबलाई वन्दना गर। वन्दना गर्नाले विरोध ( दुश्मनी ) नष्ट हुन्छ।

भक्त नरसिंहले भक्तको लक्षण बताउँदै भनेका छन्—''सकल लोकमा सहुने वन्दे।'' जो वन्दना गर्छ उही वैष्णव हो र जो वन्दना गराउन चाहन्छ ऊ वैष्णव होइन। मनभित्र जबसम्म अहंभाव रहन्छ तबसम्म भक्तिको वृद्धि हुने छैन।

आजकल मानिस शरीरको ज्यादै पूजा गर्छन्। श्री ठाकुरजीको सेवा गर्न, पूजा गर्न अब समय पाउँदैनन्, देहपूजा बढ्यो कि देवपूजा सकियो। मानिसहरूले भाँती-भाँतीका साबुन बनाएका छन्। जति साबुन लगाए पनि शरीरको जो रङ्ग छ त्यही कायम रहने हो। परमात्माले जो रङ्ग

दिनुभएको छ त्यही सच्चा रङ्ग हो र त्यही ठीक पनि हो। मानिस धेरै विलासी भएका छन्। त्यसैकारणले अर्चना भक्तिको ह्रास भएको छ। शरीरलाई मानिस धेरै सिँगार्न लागेका छन् र उसै वेलादेखि अर्चना भक्ति ओह्रालो लाग्यो। त्यसकारण जीवन सादा राख।

यस प्रकार भक्तिको एक अङ्गको विनाश भो। अर्थात् जीव ईश्वरसँग छुट्टिन गएको छ, श्री ठाकुरजीबाट विमुख भयो। बुद्धिको जब आधिक्य हुन्छ तब भक्तिको विनाश हुन्छ। भक्ति छिन्न-भिन्न भइन् अनि जीवन पनि विभक्त भयो।

भक्तिका दुइ बालक पुत्र छन्—ज्ञान र वैराग्य। भक्तिको आदर ज्ञान र वैराग्यका साथ गर। ज्ञान-वैराग्य मूर्च्छित भए भने भक्ति पनि रुन्छिन्। कलियुगमा ज्ञान र वैराग्य क्षीण भइरहेछन्, बढ़ेका छैनन्।

जबदेखि पुस्तकहरूमा आएर मिसिन गयो तबदेखि ज्ञानले बाटो तताँयो। नारदजी भन्नुहुन्छ, ''ज्ञान र वैराग्यलाई किन मूर्च्छा आयो त्यो म जान्दछु। यस कलिकालमा जगत्मा अधर्म ज्यादै बढ्न गएको छ। यसैकारणले यिनलाई मूर्च्छा आएको हो। यस वृन्दावनको प्रेमभूमिमा तिमीले पुष्टि पाउँछ्यौ। कलियुगमा ज्ञान र वैराग्यको उपेक्षा हुन्छ, त्यसकारण तिनीहरू निरुत्साहित भएर वृद्ध र जीर्ण भएका छन्।

ज्ञान र वैराग्यका साथ भक्तिलाई म जगाउनेछु। ज्ञान र वैराग्यका साथ म भक्तिको प्रचार गर्नेछु।'' ज्ञानवैराग्यलाई जगाउनका निमित्त नारदजीले अनेक प्रयत्न गर्नुभो। तर केही भएको छैन, वेदहरूको अनेक पारायण गरे तापनि ज्ञान र वैराग्यको मूर्च्छा हट्न सकेको छैन।

केही अलिकति विचार गर्‍यौं भने यो कुरा ध्यानमा आउने छ, यस्तो कथा प्रत्येक घरमै हुन्छ। आफ्नो यो हृदय भनेको वृन्दावन हो। यस हृदयको वृन्दावनमा कहिलेकाहीं वैराग्य जागेर आउँछ। तर त्यो जागृति स्थायी रहँदैन।

उपनिषद्हरू र वेदहरूको पठनले आफ्नो हृदयमा केही ज्ञान र वैराग्य जागेर आउँछ। तर फेरि तिनीहरू मूर्च्छित भइहाल्छन्।

वेदको पारायणले वैराग्य आउँछ, तर त्यो स्थायी हुँदैन। श्मशानभूमिमा जब चिता सल्किरहेको हुन्छ त्यसलाई देखेर कति मानिसलाई वैराग्य आउँछ, तर त्यो वैराग्य टिकाउ हुँदैन।

काम-सुखको भोग गरेपछि पनि धेरैलाई वैराग्य आउँछ। संसारको विषयको उपयोग गरेपछि धेरैलाई वैराग्य आउँछ, तर त्यो पनि स्थायी हुँदैन। विषयभोगपछि अरुचि त हुन्छ, तर त्यो अरुचि विवेक र वैराग्यरहित हुन गएकाले टिक्तैन।

ज्ञान, वैराग्य र भक्तिआदि सबै कुरा वेदहरूबाटै उत्पन्न भएका छन्। तर वेदको भाषा नबुझिने हुनाले सामान्य मानिसले कत्ति पनि बुझ्दैनन्। कलियुगमा तर श्रीकृष्ण कथा र श्रीकृष्ण कीर्तनद्वारा मात्र ज्ञान र वैराग्य ब्यूँझन्छन्।

नारदजी चिन्तामा पर्नुभएको छ। ज्ञान र वैराग्यको मूर्च्छा खुल्दैन। त्यसै वेलामा आकाशवाणी भयो, ''तिम्रो कोशिश उत्तम छ। ज्ञान-वैराग्यका साथ भक्तिको प्रचार गर्नको निमित्त तिमीले केही सत्कर्म गर।'' नारदजीले सोध्नुभयो, ''म के सत्कर्म गरूँ? तब फेरि आकाशवाणी भयो, तिमीलाई सन्त महात्माले सत्कर्म के हो बताउनेछन्।''

नारदजी अनेक साधु-सन्तहरूलाई सोध्नुहुन्छ, ''ज्ञान-वैराग्यसहित भक्तिलाई पुष्टि मिल्ने यस्तो कुनै उपाय बताउनुहोस्।'' तर निश्चित उपाय कसैले पनि बताउन सकेनन्।

नारदजी चिन्तामा पर्नुभयो। उहाँ सोचमा पर्नुभयो—''निश्चित उपाय बताउने सन्त मलाई कहाँ भेटिनु होला र उहाँले के साधन बताउनुहोला?'' यस्तो विचार गर्दागर्दै नारदजी घुम्दैफिर्दै बद्रिकाश्रम पुग्नुभो। त्यहाँ सनकादि मुनिहरूका साथ उहाँको भेट भयो। नारदजीले सनत्कुमारहरूलाई यी सारा कथा सुनाउनुभो।

नारदजी भन्नुहुन्छ, ''मैले जुन देशमा जन्म लिएँ, सोही देशका निमित्त उपयोगी हुन सकिनँ भने मेरो जीवन व्यर्थ छ। तपाईं भन्नुहोस् म के सत्कर्म गरूँ।''

सनकादि मुनि भन्नुहुन्छ, ''देशको दुःखले तिमी दुःखी छौ। तिम्रो भावना दिव्य छ। भक्तिको प्रचार गर्ने तिम्रो इच्छा छ। तिमी भागवत ज्ञानमार्गको पारायण गर, तिम्रो इच्छा पूर्ण हुनेछ। तिमी भागवत ज्ञानयज्ञ गर र भागवतको प्रचार गर। यसैले मानिसहरूको कल्याण हुनेछ। यस कथाद्वारा ज्ञान र वैराग्यको जागृति हुनेछ। श्रीभागवतको कथा ज्ञान, भक्ति र वैराग्यलाई बढ़ाउने हो।

वेदहरूको पारायण गर्नु राम्रो हो। त्यसले तिम्रो इच्छा पूर्ण हुनेछ। तर वेदहरूको अर्थ चाँड़ै बुझ्न नसकिने हुन्छ। त्यसकारण सबै वेदहरूको साररूप यस भागवतको ज्ञानयज्ञ गर।''

श्री भागवत-कथाको अमृतपान गर्नका निमित्त तिनीहरू त्यहाँबाट गङ्गाका किनारमा गए। शुद्धभूमिमा सात्त्विक भाव जाग्दछ। भूमिको प्रभाव सूक्ष्म रीतिबाट मनमा अवश्य पर्दछ। भोगभूमि भक्तिमा बाधक हुन्छ। श्री गङ्गाजीको तट ज्ञानभूमि हो। त्यसकारण गङ्गा किनार जानलाई आज्ञा भयो।

श्री नारदजी सनत्कुमारका साथ आनन्दवनमा आएका छन्। सनत्कुमार श्री व्यासाश्रममा आएका छन्। नारदजी हात जोड़ेर बसेका छन्। त्यहाँ ऋषि-मुनि पनि श्री भागवतकथा पानगर्न आएका छन्। जो आएका थिएनन् ती सबैका घर-घर भृगु ऋषि गएर विनीत भावले वन्दना गर्दै उनीहरूलाई कथामा ल्याए। सत्कर्ममा अरूहरूलाई प्रेरणा दिनेलाई पनि पुण्य हुन्छ।

कथाका आरम्भमा भगवान्को जय जय गर्दछन् र ''हरये नमः ''को शुद्ध उच्चारण गर्दछन्। यो ''हरये नमः '' महामन्त्र हो।

सारा प्रवृत्तिलाई छोड़ेर मानिस ध्यानमा बस्छ। त्यहाँ पनि माया विघ्न पार्न आउँछे। अनादिकालदेखि मानिसको मायाका साथ युद्ध चल्दै आएको छ। जीव ईश्वरका नजीक जान्छ,

तर मायालाई यो कुरा मन पर्दैन। जीवले सब प्रकारको मोह छोड़ेर प्रभुका नजिक जाओस्, तर मायालाई यो पनि मन पर्दैन। मायाको कुनै एक रूप छैन। ईश्वर जस्ता प्रकारले व्यापक हुन्छ, त्यस्तै किसिमले माया पनि व्यापक जस्तो भइदिन्छे। जीव र ईश्वरको मिलनमा विघ्न पारिदिन्छे।

मायाले मनलाई चञ्चल बनाइदिन्छे। माया मानिसलाई सम्झाउँछे। स्त्री, बालक र धन-सम्पत्तिमै सुख छ भनेर मानिसलाई मायाले हराइदिन्छे। मानिसको हार हुन्छ र मायाको जीत हुन्छ। यसको कारण यो हो मानिस प्रभुको जय-जयकार गर्दैन। कथा, भजनमा प्रेमले ईश्वरको जयकार गर्नुपर्छ, जो गर्नाले मायाको हार होस् र आफ्नो जीत होस्।

प्रभुको जय-जयकार गऱ्यौ भने तिम्रो पनि जीत हुनेछ र तिम्रो पनि जय-जयकार हुनेछ।

भोक र तृष्णालाई नबिर्सिएसम्म पाप भइरहन्छ। भोक र प्यास सहन गर्ने बानी हुनुपर्छ। अगाड़ि कथा आउने छ राजा परीक्षित्‌को उनको बुद्धि, भोक र प्यासको कारणले नै बिग्रिएको थियो।

सूतजी सावधान गराउनु हुन्छ—"हे राजन् ! नारदजी आज श्रोता भएर बस्नुभएको छ र सनकादि आसनमा विराजमान हुनुहुन्छ। अतः जय-जयकार शुद्ध हुन लाग्यो।"

यो भागवतको कथा अति दिव्य छ। यस कथालाई जसले प्रेमले सुन्ला त्यसको कानद्वारा परमात्मा हृदयमा पाल्नुहुनेछ।

आँखा र कानलाई जसले पवित्र राख्दछ उसको हृदयमा श्री परमात्मा पाल्नुहुन्छ। भगवान् श्रीकृष्ण कानबाट, आँखाबाट मनमा आउनुहुन्छ। बारम्बार जसले श्रीकृष्णको कथा सुन्छ, उसको कानबाट श्रीकृष्ण हृदयमा पाल्नुहुनेछ।

पाप पनि कानबाटै मनमा आउँछ। कानलाई कथा श्रवण गराऊ, आफूले पनि श्री भगवान्‌का कथाहरू सुन तब मन भगवान्‌मा स्थिर हुनेछ। कानबाट भगवान् हृदयमा आउनुहुनेछ। श्री भगवान्‌को हृदयप्रवेशलाई हाम्रो शरीर आँखाहरू र कान द्वार हुन्; साधन हुन्। कति मानिसले तर आँखाबाटै प्रभुको स्वरूपलाई मनमा स्थापना गर्छन् र कोही कानद्वारा सुनेर श्री भगवान्‌लाई हृदयमा ल्याउँछन्। त्यसकारण आँखा र कान दुवैलाई पवित्र राख, त्यहाँ श्रीकृष्णलाई स्थापना गर।

प्रत्येक सत्कर्मको आरम्भमा शान्तिपाठ गरिन्छ। त्यसको मंत्र हो—भद्रं कर्णेभिः शृणुयाम देवाः। हे देव, कानहरूबाट हामी कल्याणकारी वचन सुनौं। कान र आँखा पवित्र होस्। त्यसपछि सत्कर्मको उठान गर। यसैले पूजामा गुरु महाराज कान र आँखाहरूमा पानी सेचन गर भन्नुहुन्छ।

विशुद्ध इन्द्रियहरूमा मात्र परमात्माको प्रकाश हुन्छ। त्यसैले इन्द्रियहरूलाई शुद्ध गर र शुद्ध राख। मनलाई पनि शुद्ध गर र शुद्ध राख। काल बिग्रिएको छैन, मन मात्र बिग्रिएको छ। आँखा र कानलाई पवित्र गरेपछि कथाको आरम्भ हुन्छ।

सनकादि मुनिहरू भन्नुहुन्छ, "यस भागवतशास्त्रमा अठार हजार श्लोक छन्। अठारको संख्या परिपूर्ण हो। श्री राम-कृष्ण परिपूर्ण हुनुहुन्छ, त्यसैले नवमीका दिन प्रकट हुनुभयो। श्रीकृष्ण नवमीका दिनमै गोकुलमा आउनुभएको र नन्दमहोत्सव भएको हो। श्रीरामजीका बाह्र कला छन् र श्री कृष्णजीका सोह्र कला छन् भनेर यस्तो भेद गर्नु हुँदैन।"

श्रीभागवतमा मुख्य कथा छ नन्दमहोत्सवको। यस कथाका पनि अठार श्लोक छन्। श्रीभागवतका ऊपर प्राचीन र उत्तम टीका श्रीधर स्वामीजीबाट भएको छ। उहाँले कुनै पनि साम्प्रदायिक सिद्धान्तहरूको सहारा नलिइकन स्वतन्त्र रीतिबाट भागवत तत्त्वको विचार गर्नुभएको छ। यस श्रीधर टीकामाथि वंशीधर महाराजको टीका छ। उहाँले भन्नुभएको छ हाम्रा ऋषि-मुनिहरूले केवल निःस्वार्थ भावबाट यस ग्रन्थको रचना गर्नुभएको छ।

श्रीमद्‌भागवतको महिमाको वर्णन कसले गर्न सक्छ ? भागवत श्री नारायणकै रूप हो। श्री भगवान् जब गोलोकतर्फ सवारी भो त्यसवेला उहाँले आफ्नो तेजस्वरूपलाई यस ग्रन्थमा राखिदिनुभयो भन्ने कुा एकादश स्कन्धमा लेखिएको छ। त्यसकारण भागवत भगवानको शब्दमयी साक्षात् मूर्ति हो, श्रीकृष्णको वाङ्मय मूर्ति हो।

उद्धवजीले जब सोध्नुभयो, "हजूरको स्वर्गधाम-गमनपछि यस पृथ्वीमा अधर्म बढ्न गयो भने धर्म कसको शरणमा पर्नजाला ?" श्रीभगवान्‌ले त्यसवेला भन्नुभयो, "मेरो भागवतको जसले आश्रय लेला त्यसका घरमा कलि जान सक्नेछैन।"

श्रीभागवत भगवान्‌को नामस्वरूप हो। नामस्वरूपबाटै अन्य रूप सिद्ध हुन्छ। मनको मैलो हटाउनका निमित्त मात्र यो भागवतशास्त्र हो। मनलाई शुद्ध गर्ने साधन भागवत कथा हो। यो कथा सुनेपछि पाप गर्न कायमै राख्यौ भने यमदूतहरूका तर्फबाट दुइ थप्पड़ अरू खानुपर्नेछ।

ईश्वरका साथ प्रेम गराउने साधन यो भागवतशास्त्र हो। मानिस पत्नी, धन-सम्पत्ति, भोजन आदिका साथ त प्रेम गर्दछ, तर प्रभुका साथ प्रेम गर्दैन। त्यसकारण त्यो दुःखी हुन्छ।

श्री रामानुजाचार्यको जीवनमा एउटा घटना घटेको थियो। रङ्गदास नाउँ गरेको एउटा सेठ थियो जो एक वेश्यामाथि अतिशय आसक्त थियो। एक दिन रङ्गदास र त्यो वेश्या प्रभु श्री रङ्गनाथजीको मन्दिर नजिकैबाट निस्किए। श्रीमन्त सेठ रङ्गदास वेश्याको शिरमा छाता ओढाएर जाँदै थियो। सोही समयमा श्री रामानुजाचार्यजी मन्दिरबाट बाहिर निस्किनुभो। उहाँले यो दृश्य देख्नुभयो। यी पनि ईश्वरकै जीव हुन्, यी पनि ईश्वरसँग मिल्न सकेभने उद्धार हुँदो हो भन्ठानेर तिनीहरूसँग भेट्ने मन गर्नुभो। बाटामा पुगेपछि ती रङ्गदासलाई भेट्नुभयो र भन्नुभयो— "तिमी यस वेश्याका साथ जो प्रेम गर्दछौ, त्यो देखेर मलाई बहुतै आनन्द भयो। हाड़ र विष्ठाले भरिएकी यस स्त्रीसँग तिमी प्रेम गर्दछौ। यस स्त्रीको तुलनामा मेरा प्रभु श्री रङ्गनाथजी अति सुन्दर हुनुहुन्छ। यस स्त्रीसँग जस्तो प्रेम गर्छौ, त्यस्तो प्रेम मेरा प्रभुसँग गर। प्रेम गर्ने लायक एक मात्र परमात्मा

होइबक्सिन्छ।'' यति भनेर उहाँले रङ्गदासलाई एक थप्पड़ हिर्काउनुभो। रङ्गदासको त्यहीं समाधि भो, श्री रङ्गनाथजीको दर्शन पाए। त्यस दिनदेखि रङ्गदासले कुनै पनि दिन स्त्रीसँग प्रेम गरेनन्।

मानिसको प्रेममात्र हरक्षण बद्लिन्छ। तर कहीं पनि उसले सन्तोष र शान्ति पाउँदैन। बाल्यावस्थामा आमासँग प्रेम गर्छ। केही ठूलो भएपछि मित्रहरूसँग प्रेम गर्छ। विवाह भएपछि पत्नीसँग प्रेम गर्छ। केही समय बितिसकेपछि आफ्नी त्यही प्यारी पत्नीलाई हेलाँ गर्न थाल्छ र उसलाई भन्छ—''तँसँग विवाह गरेर मैले ठूलो भूल गरेंछु।'' त्यसपछि ऊ पुत्रहरूसँग प्रेम गर्न थाल्छ। त्यसपछि ऊ धनसँग प्रेम गर्छ। त्यसकारण ईश्वरलाई मात्र प्रेमपात्र बनाऊ, जो भएपछि प्रेमको पात्र बदल्ने मौकै पर्ने छैन।

श्री भागवतशास्त्र बारम्बार सुन्यौ भने परमात्मासँग प्रेम बढ्नेछ। आजकल मानिस भक्ति धेरै गर्छन् तर भगवानलाई साधन र सांसारिक सुखहरूको साध्य मानेर गर्छन्। त्यसकारण भक्ति सार्थक हुँदैन र मानिस दुःखी हुन्छन्। श्री भगवान्लाई मात्र साध्य मान, संसारको सुखलाई होइन।

कथामा हास्यरस गौण ( अप्रत्यक्ष ) हुन्छ। कथा कसैलाई हँसाउनलाई होइन। कथा त ईश्वरलाई प्रसन्न गराउनका निमित्त हो।

श्रोताहरूका हृदयमा जसले शोक जगाउँछ त्यो शुद्ध हो। कथा शुद्धहृदयद्वारा रुनका निमित्त हो।

मेरो आजसम्मको जीवन निरर्थक नै भयो भन्ने भाव हृदयमा जागेर आयो भने त्यस्तो कथाको श्रवण सार्थक भयो। कथा सुनेपछि पाप छुटेन र वैराग्य उत्पन्न भएन भने कथा सुनेर के काम?

श्रीभागवतको दर्शन, श्रवण, पूजनद्वारा पापहरूको नाश हुन्छ। श्रीमद्भागवतको श्रवणमात्रले नै सद्गति पाइन्छ। कथा श्रवणको लाभ आत्मदेव ब्राह्मणको चरित्र भनेर बताइएको छ। विनादृष्टान्तको सिद्धान्तले मनलाई छुँदैन। त्यसकारण आत्मदेव ब्राह्मणको चरित्र उल्लेख गरिएको छ। कथा खालि वर्णनमात्र होइन कथाको लीला साँचो हो र त्यसमा उल्लेख भएको अध्यात्म-सिद्धान्त पनि सत्य हो।

तुङ्गभद्रा नदीको किनारमा एउटा गाउँ थियो। त्यहाँ आत्मदेव नाउँ गरेका एक ब्राह्मण आफ्नी पत्नी धुन्धुलीका साथ बस्थे। आत्मदेव पवित्र थिए। तर धुन्धुली स्वभावकी क्रूर, झगड़ालू र अर्काको टीकाटिप्पणी गर्ने खालकी थिई। आत्मदेव निःसन्तान थिए। सन्तानका अभावले आत्मदेव दुःखी थिए। सन्तानका निमित्त आत्मदेवले निकै प्रयत्न गरे, तर कुनै सफलता पाएनन्। त्यसकारण उनले आत्महत्या गर्ने निश्चय गरे। आत्मदेव वनतर्फ हिँड़े। घुम्दैफिर्दै बाटामा नदीको किनारमा आइपुगे। त्यहाँ उनलाई एउटा महात्मा भेटिए। आत्मदेव ती महात्मानजिक गएर रुनथाले। महात्माले उनीसँग उनको दुःखको कारण सोधे।

आत्मदेवले भने, ''मसँग खानापिनाका निमित्त प्रसस्त छ तर मपछि खाने सन्तान कोही छैनन्, त्यसकारण म दुःखी छु। त्यसै कारणले मर्नका निमित्त आत्महत्या गर्न यहाँ आएको छु।'' महात्माले भने, ''तिमीसँग कोही सन्तान छैन, यो तर परमात्माको कृपा हो। पुत्र, परिवार नभएमा तिमीले सम्झनुपर्‍यो श्री भगवान्‌ले तिम्रै हातबाट सबै कुरा गराउन खोज्नुभयो, तिम्रो भाग्यमा यस्तै लेखेको रहेछ र त्यसैले तिमीलाई कुनै सन्तान नदिनुभएको हो। पुत्र ता दुःख रूप हो।''

ईश्वरले जस्तै स्थितिमा तिमीलाई राखे पनि उस्तै नै स्थितिमा सन्तोष मानेर ईश्वरको स्मरण गर्नुपर्छ। तुकाराम महाराजले भन्नुहुन्छ—

ठेवीले अनंते तैसेची रहावे।
चिती असौद्यावं समाधान॥

त्यसकारण ईश्वरले जुन स्थितिमा राख्नुहुन्छ, त्यसैमा आनन्द मान्नुपर्छ।

एकपटक एकनाथ महाराज विट्ठलनाथजीको मन्दिरमा दर्शन गर्न जानुभयो। एकनाथजीलाई सुयोग्य पत्नी भेटिनुभएको थियो, त्यसकारण उहाँले श्रीभागवतको उपकार हो भन्नुहुन्थ्यो। मलाई स्त्रीको सङ्ग मिलेको होइन तर सत्सङ्ग मिलेको हो भन्ने कुरा उहाँको थियो। केहिबेरपछि त्यस मन्दिरमा भक्त तुकारामजी दर्शन गर्न आउनु भयो। तुकारामजीकी पत्नी कर्कशा थिइन्, कर्कशा पत्नीलाई पनि तुकारामजी भागवतको उपकार मान्नुहुन्थ्यो। उहाँ भन्नुहुन्थ्यो, ''हे भगवान् ! यदि हजूरले असल र राम्री पत्नी दिनुभएको भए म सारा दिन उसैका पछि लाग्ने थिएँ र हजूरलाई बिर्सने थिएँ। त्यसकारण कर्कशा पत्नी पाएर पनि बेशै भएको छ।''

एकनाथजीले अनुकूल पत्नी पाएकाले उहाँलाई यसैमा आनन्द छ र तुकारामजीले प्रतिकूला पत्नी पाउनुभयो र पनि आनन्द छ। दुवैलाई आ-आफ्नो परिस्थितिबाट सन्तोष छ र भगवान्‌को उपकार मानेका छन्।

आफ्नी पत्नीको मृत्यु भएपछि नरसिंह मेहताले पनि आनन्द मान्नुभयो र भन्नुभयो—

भलु थयुँ भांगी जंजाल।
सुखे भजीशुं श्री गोपाल॥

अर्थात् राम्रै भयो कुटुम्बको झञ्झट छुट्यो, अब म बड़ो सुखले, निश्चिन्त मनले श्री गोपालको भजन गर्न सक्ने भएँ।

एक सन्तकी पत्नी अनुकूला थिइन, अर्काकी प्रतिकूला थिइन् र तेस्राकीले संसार छोड़ेर गइन्, तैपनि यी तीनै महात्माहरू आ-आफ्नो परिस्थितिबाट सन्तुष्ट भए।

साँचो वैष्णव त्यही हो जो कुनै पनि परिस्थितिमा परमात्माको कृपाको अनुभव गर्दछ र मनलाई शान्त र सन्तुष्ट राख्छ। मनलाई शान्त राख्नु पनि बड़ो पुण्य हो।

आमा र बाबुलाई आफ्नो पुत्रका निमित्त बहुतै चिन्ता रहन्छ। तर पुत्रैषणाका साथसाथै अनेक वासनाहरू पनि आउँछन्। पुत्रैषणाका पछि वित्तैषणा र वित्तैषणाका पछि लोकैषणा जागेर आउँछ।

आत्मदेवले ती महात्मालाई भने, "मलाई पुत्र दिनुहोस् किनभने पुत्रले नै पिताको सद्‌गति गरिदिन्छ—अपुत्रस्य गतिर्नास्ति।" ती महात्मा आत्मदेवलाई संझाउनु हुन्छ, "श्रुति भगवती एक ठाउँमा भन्छिन् पुत्रद्वारा मुक्ति पाइँदैन।"

वंशको रक्षालाई सत्कर्म गर। यदि छोराले नै सद्‌गति दिन सक्ने हो भने संसारमा प्रायः सबैका पुत्र हुन्छन्, त्यसकारण ती सबैले सद्‌गति पाउनुपर्ने हो। बाबुले यस्तो आशा कहिल्यै राख्नुहुन्न कि मेरो छोराले श्राद्ध गर्ला र सद्‌गति होला। श्राद्ध गर्नाले त्यो जीव असल योनिमा जान्छ तर यस्तो नसंझ त्यो जन्म-मृत्युको चक्रबाट छुट्ला।

श्राद्ध र पिण्डदानले मुक्ति दिलाउन सक्दैन। श्रद्धा कर्म-धर्म हुन्। श्राद्ध गर्नाले नरकबाट ता छुटकारा पाइन्छ, तर केवल श्राद्ध गर्नाले मुक्ति पाइँदैन। श्राद्ध नगर भनेर रोक लाएको छैन। श्राद्ध गर्नाले पितृगण प्रसन्न हुन्छन् र आशीर्वाद दिन्छन्।

पिण्डदानको सही अर्थ कसैले बुझेको छैन। यस शरीरलाई पिण्ड भन्छन्। यसलाई परमात्मामा अर्पण गर्नु पिण्डदान हो। यो निश्चय गर्नुछ मलाई आफ्नो जीवन ईश्वरलाई अर्पण गर्नुछ र यसै प्रकारले जसले यो जीवन ईश्वरमा अर्पण गर्छ, त्यसैको जीवन सार्थक र त्यसैको पिण्डदान साँचो हो, अन्यथा यदि केवल पीठोको पिण्डले नै मुक्ति भए ऋषि, मुनि, ध्यान, योग, तप आदि साधनाहरूको निर्देश किन गर्थे ?

जीवन मृत्युको त्रासबाट केवल सत्कर्मले मात्र छुटाउँछ र त्यो सत्कर्म पनि आफैंले गरेको हुनुपर्ने। स्वयंले आफ्नो आत्माको उद्धार गर्नुछ। जीव स्वयं मात्र आफ्नो उद्धार गर्न सक्छ। श्री गीताजीमा स्पष्ट भनेको छ—

उद्धरेदात्मनात्मानं नात्मानमवसादयेत्।

—( अ. ६, श्लोक ५ )

स्वयं आफूद्वारै आफ्नो आत्माको संसार-समुद्रबाट उद्धार र आफ्नो आत्मालाई अधोगतितर्फ नलैजाऊ। जीवको उद्धार स्वयं आफूले नगरे अरू कसले गर्ला ? मानिसको आफू सिवाय अरू को हितकारी हुन सक्छ ? यदि ऊ स्वयंले आफ्नो भलो गर्दैन भने पुत्रादिले के गर्लान् ?

ईश्वरका निमित्त जो बाँच्दछ, उसलाई अवश्य मुक्ति मिल्दछ।

श्रुतिभगवती भन्छिन्—"जबसम्म ईश्वरको अपरोक्ष अनुभव, ज्ञान हुँदैन तबसम्म मुक्ति पाइँदै पाइन्न।"

मृत्युको पहिले जसले भगवान्‌को अनुभव गर्छ, त्यसलाई मात्र मुक्ति मिल्छ। परमात्माको अपरोक्ष साक्षात्कारविना मुक्ति पाइँदैन।

**तमेव विदित्वाति मृत्युगेति नान्यः पन्था विद्यनयनाय।**

त्यसैलाई थाहा पाएरै मानिस मृत्युको उल्लङ्घन गर्छ। परम पदको प्राप्तिका निमित्त यसको सिवाय अन्य कुनै मार्ग छँदैछैन। श्री भगवान्‌लाई नचिनीकन दोस्रो कुनै उपाय छैन। अन्यथा केवल श्राद्ध गर्नाले कुनै मुक्ति पाइने होइन।

आफ्नो पिण्डको दान गऱ्यौ भने अर्थात् आफ्नो शरीरलाई श्री परमात्मामा अर्पण गऱ्यौ भने तिम्रो कल्याण हुनेछ।

आफ्नो पिण्डदान तिमीले स्वयं आफ्नो हातबाटै गर, त्यही उत्तम हो। जो पिण्डमा छन् उही ब्रह्माण्डमा छन्। यो निश्चय गर यो शरीररूपी पिण्डलाई श्री परमात्मामा अर्पण गर्नुछ। तिमी आफ्नो पिण्डदान स्वयं किन गर्दैनौ ? घरमा जे-जति छ त्यो सब काममा लगाइदेऊ र 'नारायण', 'नारायण' भन।

आत्मदेवलाई महात्माको यो कुरा ठीक लागेन। उनले भने, "तपाईं संन्यासीहरू पुत्रसुखबाट अपरिचित हुनुहुन्छ र यस्तो भन्नुहुन्छ।

माता-पिताको काखलाई बालकले जस्तै किसिमले फोहोर गरे पनि उनीहरू प्रसन्न हुन्छन्। असुखमा सुखको अनुभव गर्नु नै संसारीहरूको नियम हो।"

महात्माले राम्रो उपदेश दिए, तैपनि आत्मदेवले जिद्दी गर्दै भने, "मलाई पुत्र दिनुहोस्, होइन भने म प्राणत्याग गर्नेछु।" महात्मालाई दया लाग्यो। उहाँले एक फल दिएर भन्नुभो, "यस फललाई तिमीले दुलहीलाई खुवाउनू। तिमीकहाँ योग्य पुत्र हुनेछ।"

आत्मदेव फल लिएर घर फर्के। पत्नीलाई फल दिए। धुन्धुलीले फल खानु साटो अनेक तर्क-कुतर्क गर्न थाली। उसले विचार गरी, फल खाएपछि म गर्भवती हुनेछु र परिणामतः दुःखी हुनेछु र बालकको लालन-पालन गर्नमा पनि बड़ो दुःख छ। उसले आफ्नी बहिनीसँग यो कुरा गरी। बहिनीले एउटा जुक्ति सिकाई "मालाई बालक हुनेवाला छ। त्यसलाई म तपाईंलाई दिनेछु। तपाईंले चाहिं पेट बोकेको नाटक गर्नुहोस्।"

धुन्धुलीलाई पुत्र ( फल )-को इच्छा छ तर विना कुनै कष्ट नभोगिकन। मानिसको यो स्वभावै हो सुखको इच्छा सबै गर्छन् तर विना कुनै प्रयत्न र विना कुनै कष्टले।

मानिस पुण्य गर्न चाहँदैन, तर पनि पुण्यको फलको इच्छा गर्छ र पाप गर्छ तर पापको फललाई चाहँदैन।

बहिनीको भनाइमा लागेर धुन्धुलीले त्यो फल गाईलाई ख्वाइदिई र स्वयं चाहिँ गर्भवती भएको नाटक रच्न थाली। बहिनीको छोरो लिएर आई र जाहेर गरिदिई "यो मेरो छोरो हो।"

धुन्धुलीले आफ्नो छोराको नाउँ धुन्धुकारी राखी। उतातिर जुन गाईलाई त्यो फल खान दिएको थियो त्यसले गाईको जस्तो कान भएको मनुष्याकार बालकलाई जन्माई। त्यसको नाउँ गोकर्ण राखियो। दुवै बालक ठूला भए। गोकर्ण पण्डित र ज्ञानी भए र धुन्धुकारी दुष्ट भयो।

श्रीभागवतको कथा तीन प्रकारबाट हुन्छ : आध्यात्मिक, आधिदैविक र आधिभौतिक। अलिकता विचार गरे बुझिन्छ।

मानव काया भनेको तुङ्गभद्रा हो। भद्राको अर्थ हो कल्याण गर्ने र तुङ्गको अर्थ हो अधिक। अत्यधिक कल्याण गर्ने नदी तुङ्गभद्रा नदी र त्यही मनुष्यको शरीर हो।

मानव आफ्नो कायाद्वारै आत्मदेव हुन सक्छ।

आफ्नो आत्मालाई स्वयंदेव बनाए त्यही आत्मदेव हो। आत्मदेव भनेको जीवात्मा हो। हामी सबै आत्मदेव हौं। नर पनि नारायण बन्दछ। मानवदेहमा रहेको जीव, देव बन्न सक्छ र अरूलाई पनि देव बनाउन सक्छ।

पशु आफ्नो शरीरद्वारा आफ्नो कल्याण गर्न सक्दैन। मानिस बुद्धिवाला प्राणी भएको हुनाले आफ्नो शरीरद्वारा आफ्नो तथा अरूहरूको कल्याण गर्न सक्छ।

क्रोधी र कुतर्क गर्ने धुन्धुली पनि बुद्धि हो। प्रत्येक घरमा यो धुन्धुली रहन्छे। धुन्धुली कथामा पनि उधूम मचाउँछे। द्विधा बुद्धि, द्विधा वृत्ति भनेकै यो धुन्धुली हो। यस्तो द्विधा बुद्धि जबसम्म रहन्छ तबसम्म आत्मशक्ति जागा हुँदैन।

बुद्धि अरूहरूका कुराहरूमा व्यर्थ बाधा पुऱ्याउँछ। यो बहुत ठूलो पाप हो।

म को हुँ ? मेरो स्वामी को हो ? यसको विचार बुद्धि गर्दैन।

बुद्धिको विवाह ( सम्बन्ध ) मात्र भयो तर जबसम्म उसलाई कोही महात्मा भेटिँदैनन्, सत्संग हुँदैन, तबसम्म विवेक आउँदैन र विवेकरूपी पुत्रको जन्म हुँदैन।

**विवेक नै आत्माको पुत्र हो।**
**विना सत्संग विवेक हुँदैन॥**

आत्मा र बुद्धिका सम्बन्धबाट विवेकरूपी पुत्रको जन्म यदि हुँदैन भने संसाररूपी नदीमा जीव डुबेर मर्दछ। जसका घरमा विवेकरूपी पुत्र हुँदैन, त्यो संसाररूपी नदीमा डुब्छ। त्यसैले आत्मदेव गङ्गामा डुबेर मर्नलाई जान्छन्।

विवेक सत्संगबाट जागेर आउँछ र विवेकले आत्मालाई बोलाउँछ।

स्वयं देव हुन सक्ने र अरूहरूलाई देव बनाउन सक्ने शक्ति आत्मामा छ। तर यस आत्मशक्तिलाई जगाउनु छ। हनुमानजी समर्थ हुनुहुन्थ्यो तर जाम्बवान्ले उहाँलाई आफ्नो स्वरूपको ज्ञान गराएपछि उहाँलाई पनि आफ्नो स्वरूपको ज्ञान भयो।

आत्मशक्ति सत्संगबाट जागा हुन्छ। सत्संगविना जीवनमा दिव्यता आउँदैन।

बुद्धि धुन्धुलीकी बहिनी हो। मन बुद्धिको सल्लाह लिन्छ, तर दुःखी हुन्छ। मनले कति पटक आत्मालाई धोका दिन्छ। मन स्वार्थी छ। मनले भन्यो भनेर सो नगर्नू। सल्लाह केवल ईश्वरको मात्र लिनुपर्छ।

केही विचार गर। आत्मदेवको आत्मा सोझो छ। उनलाई मन र बुद्धिले बारम्बार धोका दिएका छन्। मनको सल्लाह लेऊ। आत्मदेवले मन र बुद्धिको छललाई बुझ्न सकेनन्।

फल गाईलाई ख्वाए। गो अर्थात् गाई, इन्द्रिय, भक्ति आदि अर्थ हुन्छ। फल गाईलाई अर्थात् इन्द्रियलाई ख्वाए।

सूतजी संझाउनुहुन्छ सत्संगबाट तुरुन्त इन्द्रियहरूको शुद्धि हुँदैन। मन र बुद्धिले जब भागवत र भगवान्को भरोसा गर्लान् तब शुद्ध हुनेछन्।

धुन्धुकारी को हो ? जो सारा समय द्रव्य-सुख र काम-सुखको चिन्तन गर्छ त्यही धुन्धुकारी हो। जसको जीवनमा धर्म छैन तर काम-सुख र द्रव्य-सुख प्रधान छ, त्यही धुन्धुकारी हो।

सूतजी सावधान गराउनुहुन्छ र भन्नुहुन्छ ठूलो भएपछि धुन्धुकारी पाँच वेश्याहरूमा फँस्दछ। शब्द, स्पर्श, रूप, रस र गन्ध—यी पाँच विषय भनेका वेश्या हुन्। यिनै पाँच विषयले धुन्धुकारी अर्थात् जीवलाई बाँध्दछ।

त्यो शव ( मुर्दा )लाई हातले खान्थ्यो। स्पष्ट लेखिएको छ—'शवहस्ते च भोजनम्।'

शवको हात कुनचाहिँ हो ? जो हात परोपकार गर्दैन, त्यही शवको हात हो।

जुन हातले श्रीकृष्णको सेवा नहोस्, जुन हातले परोपकार गर्दैन त्यो हात शवको हात हो।

धुन्धुकारी स्नान र शौचक्रियाहीन थियो। कामी थियो, अतः स्नान नगरिहाल्दो हो, तर स्नानपछि सन्ध्या-सेवा गरेन भने त्यो स्नान व्यर्थ भयो। त्यसकारण त्यो स्नान गर्दैनथ्यो पनि होला।

स्नान गरेपछि सत्कर्म नहुनु त्यो स्नान पशुस्नान हो। स्नान गरेपछि यदि सत्कर्म हुँदैन भने त्यो स्नान के कामको ? स्नान केवल शरीरलाई स्वच्छ राख्न मात्र होइन।

स्नान गरेपछि सेवा, सन्ध्या, गायत्री भएन भने त्यो स्नान पनि पाप हुन जान्छ। शास्त्रहरूमा तीन प्रकारका स्नान उल्लेख छन्। ती हुन्—ऋषिस्नान, मनुष्यस्नान र राक्षसस्नान। उषाकालमा ४ देखि ५ बजेका समयमा जो स्नान गरिन्छ त्यो ऋषिस्नान हो। त्यसपछि ५ देखि साढ़े ६ बजेतकको समयमा गरेको स्नान मनुष्यस्नान हो र साढ़े ६ बजेदेखि यता भएको स्नानलाई राक्षसीस्नान भन्दछन्।

तीनोटा स्नानमा ऋषिस्नान श्रेष्ठ छ।

भगवान् सूर्यनारायणको उदयपश्चात् दतिवन, शौच आदि गर्नु योग्य होइन।

सूर्य बुद्धिका स्वामी, देव हुन्। तिनको सन्ध्या गर्नाले बुद्धि सतेज ( तेजिलो ) हुन्छ। स्नान र सन्ध्या नियमले गर। सम्यक् ध्यान भनेको सन्ध्या हो।

नित्य सत्कर्म नगरीकन गरेको भोजन, भोजन होइन, यस्तो मानिसले भोजन गरेको होइन तर पापको खाना खाएको हो।

गीतामा भनेको छ—

'भुञ्जते ते त्वघं पापा ये पचन्त्यात्मकारणात्।'

*—( अ० ३, श्लोक १३ )*

जो पापी मानिस आफ्नो शरीरको पोषणलाई अन्नोत्पादन गर्छन् ती पापको भोजन गरिरहेका हुन्छन्। त्यसकारण सदा सत्कर्म गर आयुष्यको सदुपयोग गर।

तन र मनलाई दण्ड दियौ भने पापको क्षय हुनेछ र पुण्यको वृद्धि हुनेछ। आफ्नो मनलाई तिमीले स्वयं दण्ड दिएनौ भने अरू कसले देला ?

पुत्रको दुराचरणलाई देखेर आत्मदेवलाई ग्लानि भयो। उनले सोचे म पुत्रहीन भएको भए असल हुन्थ्यो। धुन्धुकारीले सारा धन खर्च गरिदियो। अब त्यसले आमा-बाबुलाई-समेत पिट्न लाग्यो।

पिताको दुःखलाई देखेर गोकर्ण नजिक आए। गोकर्ण पितालाई वैराग्यको उपदेश दिन्छन्। यो संसार असार छ र दुःखरूप तथा मोहले बन्धनमा पार्छ। कसको पुत्र र धन पनि कसको ?

संसारलाई बन्ध्यासुतको उपमा दिएको छ। संसार मायाको पुत्र हो र जब माया झूटो ठहरिन्छ भने वास्तविक कसरी हुन सक्छ ?

गोकर्ण आत्मदेवलाई भन्दछन् तपाईं अब घरबार छोड़ेर वनतर्फ जानुहोस्। घरको मोहलाई अब त्याग्नुहोस्। सबै कुरा राम्ररी बुझेर स्वयं छोड़िदिनुहोस्, होइन भने कालले जबर्जस्ती छुटाउने छ।

देहेऽस्थिमांसरुधिरेऽभिमतं त्यज त्वं जायासुतादिषु सदा ममतां विमुञ्च।
पश्यानिशं जगदिदं क्षणभङ्ग निष्ठं वैराग्यरागरसिको भव भक्तिनिष्ठः॥

*—भागवत महात्म्य, अ० ४, श्लोक ७९*

यो देह हाड़, मासु र रुधिरको पिण्ड हो। यसलाई आफ्नो भन्न छोड़िदेऊ। स्त्री पुत्रादिको ममता छोड़िदेऊ। यो संसार क्षणभङ्गुर छ। यसमध्ये कुनै पनि वस्तुलाई स्थायी सम्झेर ऊसँग राग, मोह नगर। केवल वैराग्यको रसिक बन र भगवान्को भक्तिमा डुबिजाऊ।

संसार-मोहको त्यागविना भक्ति हुँदैन।

कुनै प्रकारबाट मनलाई सांसारिक विषयहरूमा वीतरागी बनाएर प्रभु-प्रेममा लगाऊ। संसारमा आसक्ति नष्ट नभएसम्म भगवत् आसक्ति सिद्ध हुँदैन। संसारको विषयमा नफँसिरहू। भगवान्‌को चरणमा पर।

यो देह आफ्नो होइन। कारण हामी यसलाई सदा राख्न सक्दैनौं। तब अरू आफ्नो हुने पो को हो ?

''पिताजी, अब धेरै बितिसक्यो र थोरै मात्र बाँकी रह्यो। गंगाका किनारमा गएर भगवान्‌को सेवा गर्नुहोस्। मन विक्षेप हुन आएमा उसलाई कृष्ण-लीलाको कथामा लगाइदिनोस्। भावना राखेमा हृदय परिवर्तन हुनेछ। सेवा र सत्कर्ममा परदोषदर्शन विघ्नकर्ता हुन पुग्छ। त्यसकारण परदोषदर्शनको त्याग गर्नुहोस्।

पिताजी, अब तपाईंले श्री भगवान्‌को आश्रय लिएर भगवान्‌मय जीवन बिताउनु होस्। भगवान्‌मय जीवन बिताउन ध्यान, जप र पाठ अति आवश्यक छ।

उत्तम पाठका छ अंग छन्—मधुरता, स्पष्ट अक्षरोच्चारण, पदच्छेदको ज्ञान, धैर्य, लय, सामर्थ्य र मधुरकण्ठ। पाठ शान्त चित्तले गर्नु, नबुझीकन अतिशय छिटो पाठ नगर्नु।''

आत्मदेव गङ्गाका किनारमा आएर मानसी सेवा गर्न थाले। एकान्तमा बसेर मनलाई एकाग्र पार्न थाले।

चञ्चल मनलाई विवेकरूपी ज्ञानले सम्हाल र ध्यानमग्न होऊ। सङ्कल्प-विकल्पबाट मनलाई टाढा राख। मानसिक सेवामा मनको धारा अटूट रहनुपर्छ। यस्तो सेवा दिव्य हुन्छ। उच्च स्वरबाट जप-पाठ गर्नाले मन एकाग्र हुन्छ, निरोध हुन्छ।

आत्मदेव सतत भागवत-ध्यानमा तन्मय भएका छन्।

निवृत्तिमा सतत सत्कर्म हुनुपर्छ, अन्यथा निवृत्तिमा पनि पाप प्रकट हुनेछ।

आत्मदेव दशम स्कन्धको पाठ गर्छन्। यसको नित्य पाठ गर्नाले उनी साँच्चै देव बने।

आत्मा-परमात्मासँग मिलेपछि देव बन्दछ। आज जीव र शिव एक भए। जीव र शिवको मिलन भयो।

भागवतको जो भर पर्छ, त्यो भगवान् बन्दछ, ईश्वर हुन्छ। त्यसलाई परमात्माले अनेक पटक आफूभन्दा ठूलो बनाइदिनुहुन्छ।

श्री परमात्माका दुइ स्वरूप छन्—एक अर्चनास्वरूप र दोस्रो नामस्वरूप। श्रीमद्भागवत भगवान्‌को नामस्वरूप हो। सामग्रीद्वारा जो पूजा गरिन्छ, त्यो अर्चनास्वरूप हो।

नामस्वरूपको विना स्वरूप सेवा फलवती हुँदैन, स्वरूपसेवा ठीक किसिमले हुँदैन पनि। त्यसको कारण यो हो मनको शुद्धि भएको छैन। मनको शुद्धिविना स्वरूप सेवामा आनन्द

पाइँदैन। सेवकले जबसम्म संसारका साथ पनि सम्बन्ध राख्छ, माया राख्छ, त्यतिञ्जेलसम्म उसलाई स्वरूप सेवाको आनन्द मिल्दैन।

यदि सेवा गर्नै छ भने संसारको स्नेह, मोह छोड्नुपर्छ। संसारका विषयहरूमा स्नेह गरे पनि विवेकका साथ गर। आगोले त्यसो तर सबै कुरा खरानी पार्छ, तर त्यसको पनि विवेकपूर्ण उपयोग गरेका खण्डमा अग्नि उपयोगी हुन्छ। अग्नि नभएमा मानिसको पोषण हुन सक्दैन।

मानिस जबसम्म यस संसारमा आफ्नो शरीरका प्रति सम्मान गर्छ तबसम्म त्यसले यस संसारलाई छोड्न सक्दैन। जो मन मायालाई स्पर्श गर्छ, त्यो मन मनमोहनको सेवामा जान सक्दैन। मन त बारम्बार मायाको नै विचार गर्छ। त्यसकारण त्यो मलिन हुन्छ। नामसेवा मनको शुद्धिलाई नै हो।

जबसम्म स्वरूप सेवामा मन एकाग्र हुँदैन तबसम्म नामसेवा मात्र गर।

स्वरूप सेवामा आनन्द आउँदैन, किनभने मन व्यग्र हुन्छ, चञ्चल हुन्छ। आफ्नो मन ईश्वरलाई छोड़र बारम्बार विषयहरूतर्फ जान्छ। मानिसको मन संसार-व्यवहारका साथ अति तल्लीन हुन्छ जसले गर्दा उसलाई आफ्ना पापहरूको भान पनि हुँदैन र पाप गर्दछ।

स्वरूप सेवा गर्दागर्दा हृदय पग्लियोस्, आँखा रसाओस्, आनन्द होस् र हृदयमा सात्त्विक भाव जागृत भयो भने ठान्नु सेवा सफल भयो। हृदयको भावनाविना गरेको सेवा फलवती हुँदैन। जीवले शुद्ध भएर परमात्माको सेवा गऱ्यो भने श्री ठाकुरजी प्रेमले प्रसन्न हुनुहुन्छ।

मनमा अनेकौं जन्महरूको मैलो भरिएको हुन्छ र स्वरूप सेवामा मनको शुद्धि अति आवश्यक छ। मन शुद्ध नभएपछि परिणामतः स्वरूप सेवा फलवती हुँदैन। मनलाई शुद्ध पार्नका निमित्त नामसेवाको आवश्यकता छ। मनको अशुद्धि श्री भागवतले मात्र नष्ट गर्छ।

कलियुगमा नामसेवा प्रधान छ। श्री भागवत भगवान्‌कै नामस्वरूप हो। नाउँ स्वयं ब्रह्म हो, नाउँ स्वयं परमात्मा हो। अरू धेरै के भनूँ? नाउँ परमात्माभन्दा पनि श्रेष्ठ छ। ईश्वर अदृश्य हुनुहुन्छ। उहाँका साथ स्नेह गर्नु कठिन छ। नामस्वरूप तर स्पष्ट देखिन्छ।

जसको प्रत्यक्ष दर्शन भएको छैन भने उसको नाउँलाई समात, ऊ अवश्य दृष्टिगोचर हुनेछ। ईश्वरको स्वरूप सबैलाई अनुकूल र सुलभ छैन तर नामस्वरूप सुलभ छ। ज्ञानी पुरुष नाउँमा निष्ठा राख्छन्। तिनीहरू नाउँको आश्रय लिन्छन्। नाउँ ईश्वरको स्वरूप हो। श्रीरामजीले अलिकता जीवको उद्धार गर्नुभएको थियो तर उहाँपछि उहाँको नाउँले अनेकौंको उद्धार गऱ्यो। श्रीकृष्णजीको जब पृथ्वीमा राज भएको थियो, त्यसवेला जति जीवहरूको उद्धार भयो; त्यसको तुलनामा उहाँका नाउँले अनगिन्ती मानिसले संसारसागर तरे।

ठूलोभन्दा ठूलो पाप कुनचाहिँ हो? ईश्वरका नाउँका प्रति निष्ठाको अभाव। नाम साधन सरल छ। श्री भागवत भगवान्‌को नामस्वरूप हो। श्री भागवतको आश्रय भनेको नामको आश्रय हो।

जसले भागवतको आश्रय लिन्छ, त्यो भगवान् बन्दछ।

आत्मदेव श्रीभागवतको आश्रय लिएर दशम स्कन्धको पाठ गर्थे। केवल दशम स्कन्धको पाठले मात्र उनलाई मुक्ति मिलेको थियो।

यदि संस्कृतको ज्ञान छ भने प्रतिदिन दशम स्कन्ध, विष्णुसहस्त्रनाम र शिवमहिम्नस्तोत्रको पाठ गर्नू। पाठ अर्थको ज्ञानका साथ गर। अर्थ ज्ञान नगरीकन गरेको पाठ अधम पाठ कहलिन्छ।

भगवान् छिट्टै प्राप्त हुनुहुन्न, उहाँले छिट्टै कृपा पनि गर्नुहुन्न किनभने त्यसका निमित्त तिमीले कष्ट सहन गरेकै छैनौ। जीव कष्ट सहन गर्न डराउँछ। भगवान्‌को कृपाका निमित्त दुःख सहन गर। जसले स्वेच्छाले कष्ट सहन गर्छ, यमले पनि दुःख दिन सक्दैन।

आत्मदेव आसन लगाएर दश-बाह्र घण्टा बस्थे।

आसनमाथि शान्त चित्त भएर बस। ज्ञानीहरूलाई जो आनन्द समाधिमा प्राप्त हुन्छ, त्यही आनन्द तिमीलाई पनि कथामा मिल्नेछ। जुन लीलाको यो कथा हो, त्यो प्रत्यक्ष भइरहेछ भन्ने सोच्यौ भने आनन्द पाइनेछ। सोच—मेरो मन ईश्वरसँग तदाकार भइसकेको छ।

दृश्यबाट दृष्टि हटेर द्रष्टामा स्थिर भयो भने मनको निरोध हुनेछ र आनन्द प्रकट हुनेछ।

गोकर्णले पनि विचार गरे—धुन्धुकारीको व्यवहारले आफूलाई पनि विक्षेपरूप हुन जाला भन्ने ठानी उनी पनि वनमा गएर बसे। यता धुन्धुकारी वेश्याहरूलाई प्रसन्न राख्नका निमित्त चोरी गर्न थाल्यो।

सूतजी सावधान गर्नुहुन्छ—

जीव प्रत्येक इन्द्रियहरूको स्वामी हो तर इन्द्रियहरूले जीवमाथि प्रभुत्व जमायो र मनुष्य इन्द्रियहरूको अधीन भयो भने जीवन कलुषित भइहाल्छ। मनले ईश्वरका साथ मैत्री गरेमा सुखी हुनसक्छ। ईश्वरबाट अलग्ग भएमा त्यो दुःखी हुन्छ। जीव मात्र मनले गर्दा सुखी हुन्छ।

धुन्धुकारी अनिष्ट मार्गहरूबाट अर्थोपार्जन गरिरहेछ। त्यो राजाका महलमा चोरी गर्न गयो, अलङ्कार आदि चोरेर ल्यायो र वेश्याहरूलाई दियो। वेश्याहरू विचार गर्छन्—''यदि यो जीवित रह्यो भने हामी कुनै पनि दिन समातिन्छौं। यसो भएपछि राजाले हाम्रो सारा धन खोस्नेछन् र शायद अरू पनि दण्ड पाइयोस्। त्यसकारण यस ( धुन्धुकारी )-लाई हामीले मारिदिनै असल होला।'' यस्तो सोचेर तिनीहरूले धुन्धुकारीलाई डोरीले बाँधेर त्यसको घाँटीमा पासोको फन्को हालिदिए। तैपनि धुन्धुकारी मरेन।

तर पापीको मृत्यु पनि छिटै हुँदैन।

वेश्याहरूले सल्किँदो कोइला धुन्धुकारीको मुखमा कोचिदिए र मारी पनि हाले।

पाँचै इन्द्रियहरूले अन्त्यकालमा जीवलाई मार्दछन्, कष्ट दिन्छन् र त्यसवेला जीव तड्पन्छ, छटपटाउँछ। त्यसपछि वेश्याहरूले धुन्धुकारीको शरीरलाई पृथ्वीमा गाड़िदिए। उसको शरीरको अग्नि-संस्कार पनि वेश्याहरूले गरिदिएनन्।

जसको चरित्रलाई हेरेमात्र घृणा हुन्छ, त्यही हो धुन्धुकारी। धुन्धुकारी आफ्नो कुकर्मले गर्दा भयङ्कर प्रेत बनेको छ। पापी मात्र प्रेत बन्दछ। पापी यमपुरीमा पनि जान सक्दैन। त्यो प्रेत हुन्छ।

गोकर्णले धुन्धुकारीको मृत्युको समाचार सुने। उनी गयाजी गए र त्यहाँ धुन्धुकारीको श्राद्ध-क्रिया गरे।

गयाश्राद्ध श्रेष्ठ हो। त्यहाँ श्री विष्णुपाद छ। यसको कथा यस प्रकार छ—गयासुर नाउँ गरेको एक राक्षस थियो जसले तप गरेर ब्रह्माजीलाई खुशी पार्‍यो। ब्रह्माजीले वर माग भन्नुभो। तब उसले ब्रह्माजीलाई भन्यो तपाईंले मलाई के वरदान दिनुहुन्छ ? तपाईंलाई केही माग्नु छ भने मसँग माग्नुहोस्। उसको तपश्चर्याले देवताहरू पनि भयभीत भए। यो असुर कसरी मर्ला भनी ब्रह्माजीले सोच्नुभयो। यसको शरीरमा दीर्घकालसम्म यज्ञ गराउन सके ऊ मर्ला। त्यसकारण ब्रह्माजीले यज्ञका निमित्त उसकै शरीर माग्नुभयो। यज्ञकुण्ड उसको छातीमा बनाइयो। सय वर्ष यज्ञ चल्दै रह्यो र पनि गयासुर मरेन। यज्ञको पूर्णाहुति भएपछि ऊ उठ्न थाल्यो। ब्रह्माजी चिन्तातुर हुनुभयो। ब्रह्माजी डराउनु पनि भयो। उहाँले भगवान् नारायणको स्मरण गर्नुभयो। उहाँले श्रीनारायणको ध्यान गर्नुभयो। नारायण भगवान् प्रकट हुनुभयो र गयासुरको छातीमा दुवै पाउ राख्नुभयो। गयासुरले मर्ने वेलामा वर माग्यो र भन्यो—यस गया तीर्थमा जो कोही श्राद्ध गर्ला उसका पितृगण सद्गति पाऊन्। भगवान्ले उसलाई वर दिनुभयो—जो कोहीले तेरा शरीरमा पिण्डदान देला, त्यसका पितृहरू मुक्त हुनेछन्। भगवान्ले गयासुरलाई पनि मुक्ति दिनुभयो। भगवान्को वरदानको कारण गयाजीमा पितृ श्राद्ध गर्नेहरूका पितृहरूको मुक्ति हुन्छ।

गोकर्ण पछि घर फर्के। रातमा उनले कोही रोएको स्वर सुने।

मानिस पाप गर्दा त हाँस्छ तर पापको दण्ड चुक्ता गर्नुपर्ने वेलामा रुन्छ।

एउटै आमा-बाबुका पुत्र भएता पनि गोकर्ण देव बने र धुन्धुकारी प्रेत।

देव हुनु या प्रेत हुनु तिम्रो आफ्नै हातमा छ।

गोकर्णले सोधे—''तिमी के हौ ? तिम्रो यस्तो दशा किन भयो ? तिमी भूत हौ, पिशाच हौ या राक्षस ?''

प्रेतले भन्यो—''म तिम्रो भाइ धुन्धुकारी हुँ। धेरै पाप गरेको कारण मेरो यस्तो गति भएको छ। मैले प्रेत योनि पाएको छु।''

गोकर्णले सोधे—''तिम्रा निमित्त मैले गयामा पिण्डदान दिएको छु र पनि फेरि प्रेत योनिबाट मुक्त किन भएनौ ?''

प्रेतले भन्यो—''गयाश्राद्धशतेनापि मुक्तिर्मे नभविष्यति। सयौं गया-श्राद्ध तिमी किन नगर तैपनि मलाई मुक्ति नमिल्ने भयो। केवल श्राद्ध मात्रले उद्धार गर्न सक्तैन।''

गोकर्णले सोधे—''तिमीले सद्गति कसरी पाउँछौ ? के गरूँ ?'' फेरि विचार गरेर भने, ''म भोलि सूर्यनारायणसँग सोध्छु।''

भोलिपल्ट गोकर्णले सूर्यनारायणलाई अर्घ्य दिए र उनीसँग सोधे—''महाराज ! एकछिन पर्खनोस्।'' सूर्यनारायण रोकिनुभयो। यो त्रिकाल-सन्ध्याको फल हो।

ब्राह्मणले त्रिकाल सन्ध्या गर्न कैले पनि नचुकोस्। त्रिकाल सन्ध्या गर्ने मानिस न कहिल्यै मूर्ख हुन्छ, न कहिले दरिद्र।

सूर्यनारायणले सोध्नुभयो—''के काम छ मेरो ?''

गोकर्णले भने, ''मेरो भाईको उद्धारको उपाय भनिदिनुहोस्।''

सूर्यनारायणले भन्नुभो—''आफ्नो भाइलाई सद्गति दिलाउने मन छ भने भागवतको विधिपूर्वक कथा भनिदेऊ। श्राद्धले जुन आत्माको मुक्ति हुँदैन, त्यसलाई भागवतले मुक्त गराउँछ। भागवतशास्त्र मुक्तिशास्त्र हो। भागवतले मुक्ति पाइन्छ।''

धुन्धुकारीलाई पापबाट मुक्त गराउनका निमित्त गोकर्णले भागवत-सप्ताहको आयोजना गरे। धुन्धुकारी त्यहाँ आयो तर उसलाई बस्ने ठाउँ मिलेन र ऊ सात आँख्ला भएको बाँसमा प्रवेश गर्‍यो। सधैं एकका पछि एक आँख्ला फुट्दै गयो। सातौं दिनमा परीक्षित-मोक्षको कथा भयो। बाँसभित्रबाट दिव्य पुरुष बाहिर निस्कियो। गोकर्णलाई प्रणाम गरेर उसले भन्यो—''भाइ ! प्रेतयोनिबाट तिमीले मलाई मुक्त गरिदियौ।''

धन्य छ भागवत-कथा।

जड़ बाँसको आँख्ला फुट्छ भने चेतनको किन नफुटोस् ? बिहामा दुइ जनाको लगनगाँठो बाँधिन्छ। पति-पत्नीको स्नेह यही ग्रन्थि हो। यस गाँठोलाई फुस्काउन कठिन छ। परमात्माको सेवा गर्नका निमित्त एक-अर्काको भेट भयो भन्ने सोचेका खण्डमा पति-पत्नी सुखी हुन सक्छन्।

बाँसमा अर्थात् वासनाहरूमा धुन्धुकारी बस्थ्यो। बाँसको सात आँख्ला अर्थात् वासनाहरूको सातगाँठो। वासना नै पुनर्जन्मको कारण हो। त्यसकारण वासनालाई नष्ट गर। वासनामाथि विजय पाउनु नै सुखी हुने उपाय हो, बाटो हो। मानिस मोहलाई छोड्न सक्दैन। वासना अर्थात् आसक्ति, सात प्रकारका हुन्छन्—( १ ) नारीको ( पति-पत्नीको ) आसक्ति, ( २ ) पुत्रको आसक्ति ( पिता-पुत्रको आसक्ति ), ( ३ ) व्यावसायिक आसक्ति, ( ४ ) द्रव्यको आसक्ति, ( ५ ) कुटुम्बको आसक्ति, ( ६ ) घरबारको आसक्ति र ( ७ ) गाउँको आसक्ति। यी सबै आसक्तिहरूको त्याग गर।

शास्त्रमा काम, क्रोध, लोभ, मोह, मद, मात्सर्य र अविद्यालाई सात गाँठा भनेको हो। यसमा जीव बाँधिएको छ, जसलाई मुक्त गर्ने प्रयत्न गर्नुपरेको छ।

बाँस वासनाको रूप हो। जीव वासनाहरूमा फँसेको छ। वासनाद्वारा नै जीवमा जीवभाव आएको छ। त्यो निष्कामबाट सकाम बन्यो। वासनाहरूको गाँठो जबसम्म छुट्‌दैन तबसम्म जीवभाव निर्मूल हुन सक्दैन।

श्री भागवतको कथा सुन्नाले वासनाको हरेक ग्रन्थि छिन्दछ। भागवत-कथाले यी ग्रन्थिहरू छिनिन्छन्। प्रभुसँगको प्रेम बढ्‌दै गयो भने आसक्तिको ग्रन्थि छिन्न लागिहाल्छ। श्री भगवान्‌को नाउँको जप गर्नेछु र यही कुरा सत्य हो, यस्तो ठानेर उनको नित्य स्मरण गर्‍यौं भने वासनाहरूको ग्रन्थि छुटेर जान्छ।

एउटा गृहस्थको नियम थियो कथा सुन्ने। त्यसले बाह्र वर्षदेखि कथा सुनिआएको थियो। एक जना ब्राह्मण सधैं कथा भन्न आउँथे। एक दिन सेठलाई बाहिर जाने काम पर्‍यो। कथा श्रवणको नियम कसरी टुटाउने ? उनले ब्राह्मणलाई भने म भोलि कथा सुन्न नसक्ने भएँ। मेरो नियम के होला ? ब्राह्मणले भने तिम्रो छोराले सुने हुन्छ। गृहस्थले सोधे—"कथा सुनेपछि त्यो वीतरागी भयो भने ?" ब्राह्मणले भने—"बाह्र वर्षदेखि तिमीले कथा सुनिआयौ र पनि तिमी वीतरागी भएनौ, तब एक दिनको कथाले तिम्रो छोरा वीतरागी कसरी बन्न जाला ?" यजमान भन्दछन्, "म रोज कथा सुन्छु तर मनको गाँठो छोड्‌दिनँ।" यस्तो नगर, कथा सुनेपछि मनको गाँठो छुट्‌नुपर्छ।

जीवले जबसम्म संसारसुखलाई मनबाट पनि त्याग्न सक्दैन तबसम्म भक्ति सिद्ध हुन सक्दैन। भोगको त्याग पनि नगर्ने र भक्ति पनि गर्ने कुरा कसरी हुनसक्छ ? बिस्तार-बिस्तार मनलाई, स्वभावलाई सुधार्नुपर्छ। स्वभाव सुध्रिएपछि मात्र भक्ति सिद्ध हुन्छ।

ज्ञान र वैराग्यलाई पुष्ट पार्नका निमित्त यो भागवत-कथा हो।

परमात्माका चरणहरूको भरोसा गरेरै महापापी धुन्धुकारी देवताजस्तो बन्यो। धुन्धुकारी भन्दछ यही कथाले मजस्तो पापीलाई पनि परमगति प्राप्त भयो।

धुन्धुकारी लिन पार्षद् विमान लिएर आए। गोकर्णले पार्षद्‌हरूलाई सोधे—"केवल धुन्धुकारीलाई लिनका निमित्त मात्र विमान किन ल्याएको र अरूलाई लिनका निमित्त किन ल्याइएन ?"

पार्षद्‌ले भने—"तिनी ( धुन्धुकारी ) एक आसनमा बस्थे, अनशन गर्थे र रोज कथाको मनन गर्थे।"

प्रभुको चरणको मनमा निवास गर्नु उपवास हो। उपवासका बखत केही खानाले पूर्ण उपवास हुँदैन।

कथा सुनेर केवल धुन्धुकारी मात्र मुक्ति किन मिल्यो ? कथा धुन्धुकारीको जस्तो गरेर सुन्नुपर्छ। उसले कथाको मनन र निदिध्यासन गरेकाले उसलाई मुक्ति मिल्यो।

श्रवण, मनन र निदिध्यासनद्वारा ज्ञान दृढ़ हुन्छ।

अदृढं च हतं ज्ञानं प्रमादेन हत श्रुतम्।
असंदिग्धो हि हतो मन्त्रो व्यग्रचित्तो हतो जपः ॥

विना दृढ़ताको ज्ञान व्यर्थ छ। त्यस्तै प्रकारले लापरवाहीबाट गरेको श्रवण व्यर्थ हुन्छ, सन्देहयुक्त मन्त्र व्यर्थ छ, व्यग्रचित्तबाट गरिएको जपको पनि केही फल पाइँदैन। सन्देह गर्नाले मन्त्र, चित्तलाई यताउति नचाउनाले जप फलदायी हुँदैन। कथामा मनलाई स्थिर नगरी श्रवण गर्नाले के लाभ ? त्यो फलदायी हुँदैन। कथा सुन्दाखेरि तन, मन र घरको कुरा बिर्सिदिनुपर्छ। देह-देहात्मक विस्मृतिद्वारा र तन्मयताद्वारा कथा सुन्नुपर्छ। म ईश्वरका साथ तन्मय हुन चाहन्छु, यस्तो भावना राख। कथा सुनेर र मनन गरेर जीवनमा लागू गराउन सक्यौ भने कथा सुनेको सार्थक हुनेछ। कथा सुनेर जीवनमा एक लक्ष्य निश्चित गर्नुपर्छ। श्री भागवत्को कथा सुनेर केही ग्रहण गर। कथाको कुनै एक शब्द मनमा गड़ाउन सक्यौ भने जीवनको उद्धार हुनेछ।

सबैलाई विश्वास भयो धुन्धुकारी जस्तो गरेर हामीले कथा सुनेनौं, त्यसकारण उसको जस्तो गति हामीलाई प्राप्त भएन। कथालाई मनन गरेमा त्यो उत्तम हो, तर मनन नगरे पनि लाभ तर छँदैछ। यसका पश्चात् गोकर्णले साउन मासमा दोस्रो पटक कथा गराएर सबैको उद्धार गरे।

त्यस पटक महारानी भक्ति त्यहाँ प्रकट हुनुभयो। ज्ञान र वैराग्यका साथ आउनुभयो। यस कथाले महारानी भक्ति प्रकट हुनुहुन्छ। ज्ञान र वैराग्यका साथै भक्ति बढ़ेका खण्डमा मुक्ति पाइन्छ। ज्ञान र वैराग्यविना भक्ति गर्नाले मुक्ति पाइँदैन। भक्ति महारानी आनन्दित हुनुभयो र ज्ञान-वैराग्यका साथ नाच्न लाग्नुभयो।

मूर्च्छित र ज्ञानलाई फेरि पुष्ट गर्नका निमित्त र जागा गराउन यो श्री भागवतको कथा हो।

गोकर्णको सभामण्डपमा भगवान् प्रकट हुनुभयो। उहाँले गोकर्णलाई भन्नुभयो, ''म तिम्रो कथा-कीर्तनबाट प्रसन्न भएको छु। तिमी कुनै वरदान माँग।''

त्यस बखत सनत्कुमार भन्नुहुन्छ, ''जो मानिस श्रीकृष्णको कथा भन्छ, कीर्तन गर्छ, यस्ता वैष्णव भक्तका हृदयमा हजूर विराजमान हुनुहोस् र सबलाई सद्गति प्राप्त होस्।''

वैकुण्ठमा जो आनन्द पाइन्छ, त्यही आनन्द श्री भागवत कथामा पाइन्छ। तर शर्त यो छ प्रेमपूर्वक यस कथाको श्रवण गरियोस् र कथा श्रवणकालमा यस जगत्लाई बिर्सिदिनुपर्छ। श्री भागवत यस्तो ग्रन्थ होइन, जो मरेपछि मात्र मुक्ति दिने, यसले मृत्युअगावै मुक्ति दिलाउँछ।

भागवत मुक्ति प्राप्त गराउने शास्त्र हो।

वेदान्तको दिव्य सिद्धान्त व्यासजीले यस माहात्म्यमा भरिदिनुभएको छ। छैटौं अध्याय विधि बताउनलाई हो।

सत्कर्म विधिपूर्वक गरियो भने दिव्य हुन जान्छ। सत्कर्म कालको नियमले बाँधिएको छैन। सत्यनारायणजीको कथामा पनि भनेको छ—

सत्कर्म गर्न अबेर नगर।

धर्मराजकहाँ आएर एक भिक्षुकले दान मागे। धर्मराजले उनलाई 'भोलि आउनू' भने। भीमसेनले यस कुरालाई सुन्नासाथ विजयको बाजा बजाउन शुरु गरिदिए। सबैले विचार गरे भीमसेन कहीं पागल त भएनन् किनभने विजय बाजा केवल विजयको समयमा मात्र बजाइन्छ। भीमसेनले यसको कारण बताउँदै भने, ''आज हाम्रा दाज्यूले काललाई पनि नियन्त्रणमा राख्नुभयो। उहाँले यो थाहा पाइसक्नुभयो भोलि पनि बाँच्नेछु भनेर। धर्मराजको यस काल-विजयको उपलक्ष्यमा म यो बाजा बजाइरहेछु।'' धर्मराजलाई आफ्नो यस भूलको तुरुन्त ज्ञान भयो।

भनिएको पनि छ—''न जाण्युं जानकीनार्थे सवारेशुंथवानुं छे।'' अर्थात् जानकीनाथ भगवान् श्रीरामले पनि भोलि प्रातःकाल के हुने हो थाहा पाउन सक्नुभएको थिएन।

धर्मराजले याचकलाई तुरुन्त फिर्ता बोलाएर यथायोग्य दान दिए।

सत्कर्म तत्कालै गर।

भवरोगको औषधि हो—भागवत कथा।

जीवमात्र रोगी छ। सबभन्दा दुःखदायी रोग हो—जीवको ईश्वरसँग वियोग। यस रोगको निवारणका निमित्त श्री भागवतको भर गर। श्रीकृष्णबाट विरहरूपी रोग दूर गर्ने औषधिरूपी भागवतशास्त्र प्रदान भो। रोगको परिचर्या सँगसँगै आहार-विहार आदिका केही नियमहरू हामीले मान्नुपर्छ, त्यस्तै यस कथाका निमित्त जरुरी छ। शुभ मुहूर्तमा कथाको आरम्भ हुनुपर्छ।

कथाका वक्तालाई पनि केही जरुरी लक्षण बताइएको छ। पहिलो लक्षण हो—विरक्तभाव। श्री शुकदेवजी जगत्‌बाट टाढ़ा हुनुहुन्थ्यो तैपनि निर्विकार हुनुहुन्थ्यो। हामी पनि जगत्‌मा बस्छौं, देख्छौं, तर हाम्रा आँखाहरू विकाररहित छैनन्। श्री शुकदेवजी ब्रह्मदृष्टिवाला हुनुहुन्थ्यो। प्रत्येक स्त्री-पुरुषहरूलाई उहाँ भगवद्‌भावबाट हेर्नुहुन्थ्यो।

प्रत्येक नर-नारीलाई भगवद्‌भावबाट हेर।

सूतजी सावधान गर्नुहुन्छ—

के अर्थ हो वैराग्यको ? उपभोगका निमित्त अनेक पदार्थ सुलभ भए पनि मन तिनका प्रति आकर्षित नहोस्, त्यही वैराग्य हो। जगत्‌लाई त्याग गर्नुपर्ने कुनै आवश्यकता छैन। तर भोगदृष्टिबाट हेर्ने वृत्तिको त्याग गर्नु छ। आफ्नो विकारी दृष्टिलाई बदल्नु छ। जगत्‌लाई कामदृष्टिले, भोगदृष्टिले नहेर। जबसम्म दृष्टिको दोष जाँदैन तबसम्म हाम्रो दृष्टि देवदृष्टि हुँदैन।

उपदेशकर्ता ब्राह्मण अथवा ब्रह्मज्ञ हुनुपर्छ। त्यो धीर, गंभीर र दृष्टान्तकुशल हुनुपर्छ।

वक्ता अति निःस्पृही पनि हुनुपर्छ। द्रव्यको मोह छुट्छ, तर कीर्तिको मोह छोड्नु बड़ो कठिन काम हो। जीवले कीर्तिको मोह राख्छ। जो मानिस कीर्तिको मोहमा फँसेको हुन्छ, त्यसले भक्ति गर्न सक्दैन।

जहिले पनि कथा सुनौं, संसारबाट निर्लिप्त भएर सुनौं। कथामा बसेर घरबार र कामधन्धाको कुरा मात्रै सोचिरहनाले मन विकृत हुन्छ। कथामण्डपमा केवल कथाको नै विचार गर। अन्य सबै चिन्ताहरूलाई छोड़ेर कथामा बस।

वक्ता र श्रोताले आँखा, मन, वाणी, कर्म र प्रत्येक इन्द्रियबाट पनि ब्रह्मचर्यको पालन गर्नुपर्छ।

मन स्थिर गर्नलाई ऊर्ध्वरेता हुनु जरूरी छ। ब्रह्मचर्य पालनबाट ऊर्ध्वरेता हुन सकिन्छ। क्रोधित हुनाले पुण्यको क्षय हुन्छ। वक्ता र श्रोताले क्रोध नगर्नू। विधिपूर्वक कथा-श्रवण गर्नाले त्यसको फल प्राप्त हुन्छ। कथा-श्रवण गर्ने वैष्णव यमपुरीमा जाँदैनन्। तिनीहरू बैकुण्ठ जान्छन्।

भागवत कथाको श्रवण जसले प्रेमले गर्छ, त्यसको सम्बन्ध भगवान्सँग जोड़िन्छ। भागवत भगवान्को साक्षात् स्वरूप हो। श्री भगगवान्को वाङ्मयरूप हो।

वेदान्तमा अधिकार र अधिकारीको राम्रो चर्चा गरिएको छ।

## अथातो ब्रह्मजिज्ञासा।

सबैलाई वेदान्को अधिकार छैन। नित्यानित्य वस्तु-विवेक, शमदमादि, षड्सम्पत्ति, इहामूत्रफलभोग विरागविना वेदान्ताधिकार प्राप्त हुन सक्तैन। वेदहरूलाई तीन विभाग गरिएको छ—कर्मकाण्ड, ज्ञानकाण्ड र उपासनाकाण्ड। त्यस्तै प्रकारले यसका अधिकारी पनि निश्चित गरिएका छन्।

भागवत जसलाई पनि हो। भागवतको आश्रय लियौ भने भागवतले तिमीलाई भगवान्को काखमा बसाउनु हुनेछ। यसो हुँदा तिमीलाई निर्भय र निःसन्देह गरिदिनुहुन्छ।

भागवतको अठार हजार श्लोक किन भएको ? आठ प्रकृतिका आठ र नवौं ईश्वर, अतः पूर्णता भयो। नवम् अंग पूर्णतादर्शी हो। खानपान, व्यवहार, पत्र-लेखन आदि सबै कार्यहरूका विधिहरू भागवतमा बताइएको छ। यसै ग्रन्थको अवलम्बन गर्नाले सबै प्रकारको ज्ञान प्राप्त हुनेछ।

यो ग्रन्थ पूर्ण छ। भागवत भगवान् नारायणकै स्वरूप हो। जगत् र ईश्वर, जीव र जगत्, जीव र ईश्वर आदिसँग सम्बन्धित ज्ञान भागवतबाट प्राप्त हुनेछ।

'भागवत कति सुन्यौ त ?' भन्नेछौ 'जति कुराहरू जीवनमा लागू गरियो।' श्रवण गरेको कुरालाई मनन गर र त्यसलाई व्यवहारमा कार्यान्वित गर।

केवल ज्ञान व्यर्थ हो। जीवन व्यवहारको काममा ल्याए पो ज्ञान सार्थक हुनेछ।

गान्धीजी पनि भन्नुहुन्थ्यो—अढाई मनको ज्ञानभन्दा तोलाभर आचरण श्रेष्ठ छ।

प्रभुका दिव्य सद्गुणहरूलाई जीवनमा कार्यान्वित गर। पूर्वजन्मको विचार नगर।

जनक राजाले याज्ञवल्क्य ऋषिसँग पूर्वजन्महरूको जीवनलीला हेर्ने इच्छा गरे। याज्ञवल्क्यले रोक्ता-रोक्तै भन्नुभयो त्यसलाई हेरेर दुःख मात्र होला। फेरि पनि जनक राजाले दुराग्रह गर्दा ऋषिले राजालाई उनका पूर्वजन्महरूको जीवन देखाइदिनुभयो। जनक राजाले देखे—उनकी आफ्नै पत्नी पूर्व जन्ममा उनकी आमा थिइन्। उनलाई दुःख लाग्यो।

अतः यही राम्रो हुनेछ पूर्वजन्महरूको विचारै नगरौं। यसै जन्मलाई सार्थक गर्ने प्रयत्न गरौं।

भगवान्का साथमै विवाह गर, अरूको पनि विवाह गराऊ। तुलसी राधारानीको स्वरूप हो। तुलसी-विवाहको अर्थ—आफ्ना भगवान्का साथ विवाह ( सम्बन्ध )। चतुर्मासमा संयम र तप गरेपछि मात्र तुलसी-विवाह हुन सक्छ।

संयमको पालन गर, तप गर अनि ईश्वर भेटिनुहुनेछ। आत्माको धर्म हो—प्रभुका सम्मुख जानु।

# प्रथम स्कन्ध

## मङ्गलाचरण

जन्माद्यस्य यतोऽन्वयादितरतश्चार्थेष्वभिज्ञः स्वराट्
तेनेब्रह्महृदाय आदिकवये मुह्यन्ति यत्सूरयः।
तेजोवारिमृदां यथाविनिमयो यत्र त्रिसर्गोऽमृषा
धाम्ना स्वेन सदा निरस्तकुहकं सत्यं परं धीमहि॥

सत्कर्महरूमा अनेक विघ्न आउँछन्। ती सबैको शान्तिलाई मङ्गलाचरणको आवश्यकता पर्दछ। कथा थाल्नुअघि पनि मङ्गलाचरण भन।

देवगण पनि सत्कार्यमा विक्षेप गर्छन् भनेर शास्त्रले भनेको छ। 'यसले नारायणको ध्यान गर्‍यो भने हामीजस्तै देव हुनजाला'—भन्ने रीस देवहरूलाई हुन्छ। त्यसकारण देवताहरूसँग पनि प्रार्थना गर्नु आवश्यक छ—'हे देवहरूहो ! हाम्रो सत्कार्यमा विक्षेप नगरिदिए, सूर्यले हाम्रो कल्याण गर्नुहोस्, वरुणदेवले हाम्रा ऊपर कृपा गरिदिनुहोस्।'

जसको मङ्गलमय आचरण छ, उसको ध्यान गर्नाले, उसलाई वन्दना गर्नाले उसलाई स्मरण गर्नाले, मङ्गलाचरण हुन्छ। जसको आचरण मङ्गल छ, उसको मनन र चिन्तन गर्नु मङ्गलाचरण हो। त्यस्ता एक परमात्मा हुनुहुन्छ। श्रीकृष्णको नाउँ र धाम मङ्गल हो।

संसारको कुनै वस्तु वा जीवको चिन्ता नगर। ईश्वरको चिन्तन र ध्यान मानिसले गर्‍यो भने उनको शक्ति मानिसले पाउँछ।

क्रियामा अमङ्गलता कामको कारणले आउँछ। कामले जसलाई छुन्छ, प्रभाव पार्छ त्यसको सब कुरा अमङ्गल हुन जान्छ, श्रीकृष्णलाई कामले स्पर्श गर्न सक्दैन। त्यसकारण उहाँका सबै कुरा मङ्गलमय छन्। जसका मनमा काम छ, उसको स्मरण गर्नाले त्यसको काम तिम्रो मनमा आउँछ। सकामको चिन्तनले आफूमा सकामता आउँछ र निष्कामको चिन्तनले मन निष्काम बन्न पुग्छ। शिवजीको सब कुरा अमङ्गल छ र पनि उहाँको स्मरण मङ्गलमय छ किनभने उहाँले कामलाई डढाएर खरानी पारिदिनुभएको छ। मानिस सकाम जबसम्म हुन्छ, त्यतिञ्जेलसम्म उसको मङ्गल हुँदैन।

ईश्वर पूर्णतः निष्काम हुनुहुन्छ त्यसकारण उहाँको ध्यान र स्मरण गर। परमात्मा बुद्धिभन्दा पनि टाढा हुनुहुन्छ। श्रीकृष्णको ध्यान गर्ने मानिस निष्काम बन्दछ। श्रीकृष्णको लगातार ध्यान हुन नसकेमा केही आपत्ति छैन तर जगत्का स्त्री-पुरुषहरूको ध्यान भने कहिल्यै नगर।

मन किन भाँडिन्छ भन्ने कुरा अलिकता विचार गरेका खण्डमा बुझ्न सकिन्छ। संसारको चिन्ता गर्नाले मन बिग्रन्छ। प्रभुको चिन्तन-स्मरण गर्नाले मन सुध्रिन्छ।

जीव अमङ्गल छ, प्रभु मङ्गलमय हुनुहुन्छ। मानिसको कामवृत्ति नष्ट भएका खण्डमा सबै कुरा मङ्गलमय हुन्छ। जो कामको अधीनमा छैन त्यसको सधैं मङ्गल मात्रै हुन्छ।

कामले जसलाई मार्न सक्छ, हराउन सक्छ त्यो जीव हो र कामलाई जसले हराउन सक्छ त्यो ईश्वर हो।

मानिसको आफ्नै अमङ्गल काम विघ्नकर्ता हुन्छ, कुनै अरू होइन।

प्रत्येक कार्यको प्रारम्भ मङ्गलाचरणबाट गर। भागवतमा तीन मङ्गलाचरण छन्—प्रथम स्कन्धमा व्यासदेवको, द्वितीय स्कन्धमा शुकदेवजीको र समाप्तिमा सूतजीको।

शैय्यामा सुतेका बखत मानिस धेरै पाप गर्छ।

प्रातःकालमा मङ्गलाचरण गर, मध्याह्नमा मङ्गलाचरण गर र राती सुत्नुभन्दा अघि मङ्गलाचरण गर।

धीमहि—ध्यान गर्दाखेरि एउटै स्वरूपको बारबार चिन्तन गर भनी व्यासजीले भन्नुभएको छ। मनलाई प्रभुको स्वरूपमा अड्याऊ। एउटै स्वरूपको लगातार चिन्तन गर्नाले मन शुद्ध हुन्छ, परमात्माको कुनै पनि स्वरूपलाई इस्टदेव मानेर उनको ध्यान गर।

ध्यानको अर्थ हो मानस दर्शन। राम, कृष्ण, शिव या कुनै पनि स्वरूपको ध्यान गर। सर्वश्रेष्ठ सत्यस्वरूप प्रभुको ध्यान गर्छु भनेर श्री व्यासजीले मङ्गलाचरणमा भन्नुभएको छ। एकमात्र श्रीकृष्णकै ध्यान गर भन्ने आग्रह व्यासजीको होइन। उहाँले कुनै पनि विशिष्ट स्वरूपको ध्यान गर भनेर तोक्नुभएको छैन। जो मानिस जुन कुनै स्वरूपको ध्यान गर्न मन पराउँछ त्यसले उसैको ध्यान गरोस्। भगवान्को जुन रूपमा हामीलाई आनन्द आउँछ, त्यही रूप उत्तम हो। एउटै स्वरूपका अनगिन्ती नाउँ छन्। सनातन धर्मका अनुसार देव अनेक भए तापनि ईश्वर तर एउटै हो। मङ्गलाचरणमा कुनै एक देवको नाउँ लेखिएको छैन।

ईश्वर एउटै हुनुहुन्छ, केवल उहाँको नाउँ र स्वरूप अनेक छन्।

राधाछेउ जानलाई कुनै पुरुषको अधिकार छैन भनी वृषभानुले आज्ञा दिएकी थिइन्। त्यसकारण सारी लाएर चन्द्रावलीको शृंगार गरेर कृष्णजी राधासँग भेट्न जानुहुन्छ। कृष्णजीले सारी लाउनु भयो र आमा बन्नु भएको छ।

## एकं सद्‌विप्रा बहुधा वदन्ति

ईश्वरका अनेक स्वरूप छन्, तर तत्त्व एउटै हो। बत्तीका अगाडि जुन किसिमको रङ्गको शीशा ( काँच ) राखौं त्यसै रङ्गको प्रकाश देखिन्छ।

जुन कुनै देवताको पूजा गर, तर ध्यान भने एउटा ईश्वरकै गर।

रुक्मिणीको भक्ति अनन्य छ। पूजा देवीको गर्छिन् र पनि ध्यानचाहिँ कृष्णकै गरेको छ।

वन्दना जुन देवताको गरे पनि हुन्छ, तर ध्यान कुनै एक देवताको गर। जुन कुनै रूपमा तिम्रो आस्था र रुचि छ, सोही रूपको ध्यान गर।

ध्यान, ध्याता र ध्येयमा एकत्व हुनु आवश्यक छ र यस्तो एकत्व भएपछि नै परमानन्दको प्राप्ति हुन्छ।

ध्यानको समय केही अरू कुराको चिन्ता नगर। कुनै चेतनको ध्यान गर, जड़को होइन।

ध्यान गर्नु छ भने श्रीकृष्णको ध्यान गर। अनेक जन्मदेखि यस मनलाई भौंतारिने बानी बसेको छ। ध्यानमा पहिले संसारकै विषय उम्रिन्छन्। यी मनमा नआउन् भन्नाका खातिर ध्यान गर्दा परमात्माको नाउँको बारम्बार चिन्तन गर अनि मन स्थिर हुन्छ। ठूलो स्वरले कीर्तन गर। कृष्णको कीर्तनले जगत् बिर्सिइन्छ। परमात्माको मङ्गलमय स्वरूपको दर्शन गर्दै कीर्तन गर। वाणीले कीर्तन गरोस् र आँखाले दर्शन गरोस् अनि मन शुद्ध र पवित्र हुन्छ।

परमात्माको ध्यान गर्नाले मन शुद्ध हुन्छ। दान या स्नानादिले मनको शुद्धि हुँदैन। संसारको चिन्तन गर्दै रहनाले बिग्रिएको मन ईश्वरको सतत चिन्तन नगरीकन शुद्ध हुँदैन।

यो शरीर जस्तो मलिन वस्तु अरू कुनै छैन। यस मलिन शरीरद्वारा परमात्मासँग मिलन हुन सक्दैन। यस शरीरको बीज अपवित्र छ। मनद्वारा परमात्मासँग मिसिनु छ। विना ध्यानको मनोमिलन हुन सक्दैन।

आँखाद्वारा श्रीभगवान्‌को दर्शन र मनद्वारा स्मरण गर्‍यौ भने परमात्माको शक्ति तिमीले पाउनेछौ। ईश्वरको ध्यान गर्नाले ईश्वरको शक्ति जीवले पाउँछ। ध्यान गर्नाले ईश्वर र जीवको मिलन हुन्छ। बिना ध्यानको ब्रह्मसम्बन्ध हुन सक्दैन।

ध्यानको परिपक्व दशा समाधि हो। वेदान्तमा यसलाई जीवनमुक्ति मानिएको छ। समाधि धेरै बेरसम्म रहिरहनाले ज्ञानीहरूलाई जिउँदा-जिउँदै मुक्तिको आनन्द पाइन्छ। भागवतमा बारंबार उल्लेख भएको छ—ध्यान गर र जप गर। प्रत्येक चरित्रमा यस सिद्धान्तको वर्णन भएको छ। पुनरुक्ति दोष होइन। कुनै सिद्धान्तलाई बुद्धिमा दृढ़ गराउनका निमित्त त्यस कुरालाई बारंबार भन्नुपर्छ। भागवतको प्रत्येक स्कन्धमा यस जप-ध्यानको कथा छ।

विना ध्यान ईश्वरको साक्षात्कार हुन सक्दैन। वसुदेव-देवकीले एघार वर्षसम्म ध्यान गर्नुभयो र उहाँहरूले परमात्मा भेट्टाउनु भयो। भागतवको प्रारम्भ ध्यान-योगबाट भएको छ।

जो मानिस ईश्वरको ध्यान गर्छ उही मात्र ईश्वरको प्रिय हुने छ।

साधन-मार्गको आश्रय लिएर ज्ञानी मुक्त हुन्छन्। ज्ञानद्वारा ज्ञानीले भेदको निषेध गर्छन्। ज्ञानमार्गको लक्ष्य हो ज्ञानद्वारा भेदलाई हटाउनु। भक्तिद्वारा भेद हटाउनु भक्ति मार्गको लक्ष्य हो, ध्येय एउटै हो। त्यसकारण भागवतको अर्थ ज्ञानपरक र भक्तिपरक हुन सक्छ। मार्ग र साधन भिन्न-भिन्न छन्, तर ध्येय एउटै हो।

यसै कारण सगुण र निर्गुण दुवैको आवश्यकता छ। यसो तर ईश्वर अरूप हुनुहुन्छ, तर, जुन रूपको भावनाले वैष्णवजन तन्मय हुन्छन्, त्यस्तो स्वरूप पनि ईश्वर धारण गर्नुहुन्छ। सगुण र निर्गुण दुवै स्वरूपहरूको भागवतमा निरूपण भएको छ। निर्गुण रूपमा प्रभु सर्वत्र हुनुहुन्छ र सगुण रूपद्वारा श्रीकृष्ण गोलोकमा राज भएको छ। इष्टदेवमा पूर्णतः विश्वास राखेर यस्तो विश्वास राख जगत्‌का जड़ र चेतन सबै पदार्थहरूमा प्रभुको बास छ। मङ्गलाचरणको सगुण-निर्गुण छुट्याउने अर्थ हुन सक्छ।

क्रिया र लीलामा अन्तर छ। प्रभु जो गर्नुहुन्छ त्यो हो 'लीला' र जीवले जे गर्छ त्यो 'क्रिया' हो। 'क्रिया' बन्धन रूप हो, किनभने त्यसका साथ कर्ताको आसक्ति, स्वार्थ, अहङ्कारको सम्बन्ध हुन्छ। ईश्वरको लीलाले बन्धनबाट मुक्त गराउँछ। कारण यो हो ईश्वरलाई स्वार्थ र अभिमानले छुन सक्तैन। जुन कार्यमा कर्तृत्वको अभिमान हुँदैन, त्यो हो लीला। केवल जीवहरूलाई परमानन्द दिलाउनका निमित्त प्रभु लीला गर्नुहुन्छ। त्यसै कारणले नौनी-चोरी, रास आदि सबैलाई व्यासजीले लीला भन्नुहुन्छ। श्रीकृष्णजी नौनी चोरी गर्नुहुन्छ तर आफ्ना निम्ति नभएर साथीभाईलाई हो।

व्यासजी 'ब्रह्मसूत्र'मा लेख्नुहुन्छ; स्थिति लीला हो र विनाश पनि लीला हो।

विनाशमा पनि आनन्द छ। सबैको द्रष्टा म हुँ 'म' को नाश हुँदैन। अहम् 'म' को विनाश नभएमा यसलाई पनि ज्ञानी पुरुष लीला भन्छन्। 'म' पनि ईश्वरको अंश हुँ। तर यो 'म' ले अहंकार बन्नु हुँदैन।

श्रीकृष्ण गान्धारीकहाँ भेट गर्न जानुभयो। गान्धारीले श्रीकृष्णजीलाई श्राप दिनुभयो 'तिम्रा वंशमा पनि कोही बाँच्ने छैनन् किनभने तिमीले मेरो वंशमा पनि एउटा कसैलाई रहन दिएनौ।' तर कृष्णजी यसमा पनि आनन्द मान्नुहुन्छ र भन्नुहुन्छ 'आमा ! मैले पनि यो विचार गरिरहेको थिएँ यी सबको विनाश कसरी गरूँ ? यहाँले श्राप दिनुभएको बेसै भयो।'

''शान्ताकारं भुजगशयनम्'' सर्पमाथि सुलुपरे पनि परमात्मालाई पनि शान्ति नै मिल्छ। मानिसहरूलाई शैय्या र पलङ्ग पाए तापनि शान्ति छैन। श्रीकृष्णको शान्ति कस्तो छ त ?

लय पनि भगवान्‌कै लीला हो। जीवलाई उत्पत्ति र स्थिति मन पर्छ तर लय मन पर्दैन।

ब्रह्माजीलाई देवदत्तको ज्ञान दिने र जगत्‌को उत्पत्ति, स्थिति, संहारका कारणभूत श्री परमात्माको हामी ध्यान गर्छौं। आदिकवि ब्रह्मालाई जुन दिव्य ज्ञानको दान गरियो त्यसको वर्णन अब गर्छौं।

भगवान्को ध्यानमा तन्मयता भएन भने संसारको ध्यान भइरहन्छ। त्यसलाई छोड्ने प्रयत्न गर। ध्यानको आरम्भमा संसार देखापर्छ, प्रत्येक साधकलाई यस्तै अनुभव हुन्छ। ईश्वरको ध्यान नहुन सकेमा कोही आपत्ति छैन, तर संसारको, नर-नारीको, धन-सम्पत्तिको ध्यान हुनुहुँदैन।

दर्शन गरेपछि पनि ध्यानको आवश्यकता पर्छ। मन्दिरको चौकामा बस्ने प्रथाको कारण भगवान्को ध्यान हो, सांसारिक कुराका निमित्त होइन। मन्दिरमा जुन स्वरूपको दर्शन गरेको छ त्यसैको ध्यान र चिन्तन चौकामा बसेर पनि गर्नु। आरम्भमा व्यासजी ध्यान गर्न आज्ञा गर्नुहुन्छ।

सत्कर्म गर्दाखेरि अनेक विघ्न उपस्थित हुन्छन्, जसको नाश परमात्माको ध्यानद्वारा हुन्छ।

मङ्गलाचरणमा व्यासजी लेख्नुहुन्छ—"सत्यं परं धीमहि।" सत्यस्वरूप परमात्माको हामी ध्यान गर्छौं। सत्यस्वरूप परमात्माको ध्यान गर्छु भनेर व्यासजीले लेख्नुभएको छ किनभने यदि उहाँले श्रीकृष्णकै ध्यान गर्ने भन्नुभएको भए शिवभक्त, दत्तात्रेयभक्त, देवीभक्त आदिले भागवत तर श्रीकृष्णका भक्तहरूको ग्रन्थ पो रहेछ भन्ने थिए।

व्यासजीले कुनै विशिष्ट रूपको ध्यान गर भनेर निर्देश दिनुभएको छैन। केवल सत्यस्वरूप प्रभुको ध्यान गर्नु भन्नुभएको छ। जसलाई जुन कुनै स्वरूपका प्रति आस्था हुन्छ त्यसैको ध्यान उसले गरोस्।

संसारमा विभिन्न मानिसहरूको रुचि एकनासको हुँदैन। 'शिव महिम्नस्तोत्र'-मा भनेको छ—

त्रयी साख्यं योगः पशुपतिमतं वैष्णवमिति
प्रभिन्ने प्रस्थाने परमिदमदः पथ्यमिति च।
रुचीनां वैचित्र्यादृजुकुटिलनानापथजुषां
नृणामेको गम्यस्त्वमसि पयसामर्णव इव॥

सांगोपाङ्गवेद, सांख्यशास्त्र, योगशास्त्र, पाशुपातशास्त्र, वैष्णवशास्त्र आदि विभिन्न शास्त्रहरूको आस्थावाला मानिस आ-आफ्ना-शास्त्रहरूलाई सर्वोत्तम मान्दछन् र आ-आफ्ना मनोवृत्तिका अनुसार सजिलो या गाह्रो बाटो देखाउँछन् र मान्दछन्। साँचो कुरा तर यो हो। यी सबै शास्त्रानुसारी मतहरूको प्राप्ति स्थान, लक्ष्य तर एउटै हो, जुन किसिमले सरल र टेढ़ा-मेढ़ा सबै नदीहरू एउटै समुद्रमा गएर मिसिन्छन् र लक्ष्यमा पुग्छन्।

प्रत्येक व्यक्तिको रुचि र आस्था भिन्न-भिन्न भएको हुनाले शिव, गणेश, राम, देवी आदि विविध स्वरूपहरूलाई परमात्माले धारण गर्नुहुन्छ।

सत्य, अविनाशी, अबाधित, अपरिवर्तनशील छ। सुख-दुःख, लाभ, हानि आदिका कारणले परमेश्वरको स्वरूपमा कुनै परिवर्तन हुँदैन।

गीताजीमा भगवान्‌ले भन्नुभएको छ—

दुःखेष्वनुद्विग्नमनाः सुखेषु विगतस्पृहः ।

दुःख.परेको वेलामा जसको मन उद्वेगरहित हुन्छ र सुखका समयमा जसको मन स्पृहारहित हुन्छ, त्यही स्थित-प्रज्ञ हो। श्रीकृष्णले आफ्नो वचन अनुसार जीवन बिताउनुभयो। श्री रामचन्द्रजीलाई पनि राज्याभिषेक र वनवासका समयमा एकनासको आनन्द थियो। श्रीकृष्णलाई सोह्र हजार रानीहरूबाट सेवा पाउँदामा र सुवर्णको द्वारिकाको सर्वनाश हुँदामा एकनासको आनन्द अनुभव भएको थियो।

श्रीकृष्ण उद्धवलाई भन्नुहुन्छ—'उद्धव, यो सब ( जगत् ) भूल छ, म मात्र एउटा सत्य छु। जगत् असत्य छ, परमात्मा सत्य छ। भूत, वर्तमान र भविष्यमा जसले एउटै स्वरूप धारण गर्छ, त्यही सत्य हो। यसैले भगवान् व्यासजी भन्नुहुन्छ—म सत्यको मात्र ध्यान गर्छु, कुनै अरू देवको होइन। त्यस कारण सत्यसँग मात्र प्रेमभाव राख। सुखी हुनु छ भने सत्यस्वरूप परमात्माका साथ प्रेम गर। जगत् असत्य छ। दुनियाँका पदार्थ दुःखदायी छन्। व्यवहारमा जगत् सत्य जस्तै लाग्छ तर पारमार्थिक दृष्टिबाट, तात्त्विक दृष्टिबाट हेर्‍यौं भने जगत् सत्य छैन। त्यसै कारण ज्ञानी पुरुष जगत्‌को चिन्तन गर्दैनन् र जगत् अनित्य छ भन्ने बारंबार विचार गर्छन्।'

जसलाई परमात्माको अपरोक्ष ज्ञान हुन्छ, तिनले जगत्‌को सम्मान गर्दैनन्। सपनाबाट ब्यूँझेपछि जस्तो सपना झूठो लाग्छ, यस्तै भगवान्‌को साक्षात्कार पाएपछि जगत् मिथ्या लाग्छ। मानिस सधैं एकस्वरूपमा बस्दैन। ईश्वरको एउटै स्वरूप हुन्छ। ईश्वरलाई काम, क्रोध, लोभ आदिले प्रभाव पार्न सक्दैन। त्यो स्वयं आनन्द रूप छ। ईश्वर बाहेक जे पनि देखिएको छ, त्यो सबै माया हो, असत्य हो र भास मात्र हो।

नक्कली रुपियाँसँग कसैको कुनै मोह हुँदैन। सोही प्रकार यस असत्य, नक्कली संसारसँग मोह नगर। स्त्री-पुरुष भनेको भेटघाटको सुख हो तर वियोग अति दुःखद हुन्छ। वियोग अवश्यम्भावी छ, यस्तो बुझेर यस जगत्‌मा जीवहरूसँग प्रेम नगर। परमात्मा अविनाशी हुनुहुन्छ त्यसकारण उहाँसँग नै प्रेम गर।

अँध्यारामा डोरी सर्प जस्तो लाग्छ तर प्रकाश भएपछि, ज्ञान भएपछि मात्र यथार्थ स्वरूपको ज्ञान हुन्छ। यस सर्परज्जुन्यायको दृष्टिबाटै यस असत्य संसारलाई अज्ञानी मानव सत्य मान्दछ। जगत्‌को भास ईश्वरका 'प्रति' हुनु अज्ञानकै कारण हो। ईश्वरको ज्ञान नहुनाले तिमीलाई यो जगत् सत्य लागेको छ। त्यसो तर यो दृश्य जगत् भ्रामक छ, मिथ्या छ तर परमात्मामा आधारित भएको कारणले यो सत्य जस्तो लाग्दछ।

परमात्मा सत्य भएकाले जगत् असत्य भए तापनि सत्य जस्तो लाग्छ। जगत्‌को अधिष्ठान, आधार ईश्वर हो र ईश्वर सत्य छ र जगत् पनि सत्य लाग्दछ। जसरी राजाले नक्कली मोतीको

माला लाएको छ तापनि उसको प्रतिष्ठाले गर्दा जनताले त्यो मालालाई सक्कली मोतीकै माला भन्ठान्छ। गरीब मानिसको सक्कली मोतीको मालालाई उसको गरीबीले गर्दा नक्कली संझिन्छ। सोही किसिमले यो जगत् नक्कली मोतीको माला जस्तो हो जसलाई परमात्माले आफ्नो घाँटीमा भिर्नुभएको छ।

जगत्मा बसे तापनि त्यसलाई मिथ्या ठान। दृश्यमान वस्तु नाशवान् हुन्छ 'यद् दृष्टम् तद् नष्टम्।' त्यस कारण बाह्य दृश्यमान जगत्लाई आभास मात्र संझ।

भागवत प्रथम स्कन्धको पहिलो अध्यायको दोस्रो श्लोक भागवतको प्रस्तावनारूप हो। भागवतको मुख्य विषय के हो। भागवतका अधिकारी को हुन्, आदिको वर्णन यस दोस्रो श्लोकमा गरिएको छ।

धर्मः प्रोज्झितकै तवोऽत्र परमो निर्मत्सराणां सतां।
वैद्यं वास्तवमत्र वस्तु शिवदं तापत्रयोन्मूलनम्।।॥

श्रीमद्भागवतमा प्राणीमात्रमा दया गर्ने र मत्सररहित सत्पुरुषहरूको एकमात्र आधाररूप, ईश्वर-आराधनारूप, निष्काम परमधर्म वर्णित गरिएको छ र जो परमार्थरूप जान्ने योग्य,परम सुखदायी, आध्यात्मिक, आधिभौतिक तथा आधिदैविक तापलाई हर्ने ती परमात्मारूप तत्त्वको भागवतमा वर्णन भएको छ। 'प्रोज्झित कैतवो धर्मः' जुन धर्ममा कुनै कपट छैन, यस्तो निष्कपट धर्म भागवतको मुख्य विषय हो।

नारदजीले वाल्मीकिजीलाई 'राम' मन्त्रको जप गर भन्नुभयो। वाल्मीकिले भूल गरेर 'राम' को सट्टा 'मरा' गर्दिए र 'मरा-मरा' जप्न थाले। यस्तै भए तापनि उनले फल तर 'राम' मन्त्रको जपकै पाए।

अतिशय पापीको मुखबाट सजिलैसँग 'राम' निस्कँदैन। भगवान्को हृदयमा प्रवेश गरेपछि पापलाई बाहिर निस्कनुपर्छ। पापले भगवानको नाउँ लिन दिँदैन, सेवाको फल सेवा हो। मुक्तिको पनि आश नराख।

भागवतको मुख्य विषय हो निष्काम भक्ति। जहाँ भोगेच्छा छ त्यहाँ भक्ति हुँदैन। भोगका निमित्त गरिएको भक्तिले भगवान् प्रसन्न हुनुहुन्न। भोगका निमित्त भक्ति गर्नेलाई संसार प्यारो हुन्छ, भगवान् प्यारो हुनुहुन्न।

भगवान्का निमित्त मात्र भक्ति गर। भक्तिको फल भगवान् हुनुपर्छ, संसार-सुख होइन। जसले यस्तो विचार गर्छ भगवान्ले मेरो काम पार लाइदिऊन् वा मेरो काममा आइदिऊन् त्यस्तालाई वैष्णव भन्न सकिन्न। भगवान्सँग कसैले सन्तान माग्छन् र कसैले धन। तर भगवान् विचार गर्नु हुन्छ मेरा निमित्त ता मन्दिरमा कोही पनि आउँदा रहेनछन्; सबै आ-आफ्नो मनोरथ मबाट पूरा गराउन मात्र पो आएका रहेछन्।

साँचो वैष्णवले भगवान्‌लाई भन्छ म आफ्ना ज्ञानेन्द्रियहरू, कर्मेन्द्रियहरू, मन आदि सबै कुराहरू हजुरको चरणमा चढ़ाउन आएको छु। सच्चा वैष्णवले भगवान्‌सँग न दर्शन माग्छ न मुक्ति। उसले यदि केही माग्यो भने पनि केवल यही मात्र भन्ला म भगवानकै सेवामा तन्मय भइरहूँ।

माग्नाले प्रेमको धारा टुट्छ, प्रेमको प्रमाण घट्न थाल्छ। त्यसकारण प्रभुसँग केही नमाग। भगवान्‌लाई आफ्नो ऋणी बनाऊ। श्रीरामचन्द्रजीले राज्याभिषेकका वेलामा सबै वानरहरूलाई इनाम दिनुभयो तर हनुमानजीलाई केही पनि दिनु भएन। यो घटनाले गर्दा सीताजीलाई दुःख लाग्यो। उहाँले रामलाई भन्नुभयो 'हनुमानलाई पनि केही दिनुहोस्।' रामजीले भन्नुभयो 'उनलाई के दिऊँ ? उनले मलाई कति उपकार गरेका छन् र मलाई ऋणी बनाएका छन्।'

श्रीरामले हनुमानलाई भन्नु भएको छ—

प्रति उपकार करउँ का तोरा।
सनमुख होइ न सकत मन मोरा॥

शुद्ध प्रेममा लिने भावना हुँदैन, दिने मात्र हुन्छ। मोहले भोगको इच्छा गर्छ तर प्रेमले भोग दिन्छ। प्रेममा माग्ने कुरा हुँदैन। प्रेममा आशाको भावना जाग्यो भने सच्चा प्रेम भागिहाल्यो भनी ठान। भक्तिद्वारा मागेको वस्तु जरूर पाइएला तर भगवान् हातबाट उम्कनुहुन्छ। सधैं दिनेवाला गइहाल्छ।

गीतामा भनेको छ—

देवान्देवयजोयान्ति मद्‌भक्ता यान्ति मामपि।

( अ० ७ श्लोक २३ )

सकामी भक्तले जुन-जुन देवताहरूको पूजा गर्छन्, तर सब देवताहरूद्वारा म इच्छित भोगहरूको पूर्ति गर्छु तर मेरो निष्काम भक्ति गर्ने भक्त ममा मात्र प्राप्त हुन्छन्।

भगवान्‌सँग धन माग्यौ भने धन पाइएला तर भगवान् स्वयं भेटिनुहुन्न।

भगवान्‌सँग जति माग्छौ त्यति उहाँले दिनुहुन्छ तर प्रेम भने कम हुन्छ। व्यवहारमा पनि यो अनुभव भएको कुरा हो जबसम्म केही माँगिदैन त्यतिसम्मलाई मात्र दुइ मित्रहरूको मैत्री प्रेमपूर्ण रहन्छ।

गोपिनीहरूले दृष्टि पनि श्रीकृष्णलाई दिएका छन् र मन पनि। तिनीहरूले श्रीकृष्णसँग केही माग्नुको सट्टा सर्वस्व अर्पण गर्छन्। भगवान्‌सँग केही माग्यौ भने प्रेम खण्डित हुन्छ। सधैं यस्तै भन्ठान प्रभुले मलाई धेरै दिनुभएको छ।

धेरै मानिस प्रतिवर्ष डाकोरजी तीर्थको यात्रा गर्छन्। तिनीहरूले रणछोड़जीलाई भन्छन् म ६ वर्षदेखि तपाईंको दर्शनलाई आइरहेको छु र पनि मलाई एउटा छोरो प्राप्त भएको छैन।

भगवान्‌ले उसलाई पुत्र दिनुहुन्छ तर त्यसका साथसाथै सुनाइदिनु पनि हुन्छ अब मेरो र तेरो सम्बन्ध तोड़ियो।

डाकोरजीले चाहेको भन्दा केही कम दिनुभयो भने भन्ठान उहाँ परिपूर्ण हुनुहुन्छ, तर मेरो पात्रता अपूर्ण भएकाले मैले कम पाएँ भनिठान।

निष्काम भक्ति उत्तम हो। वैष्णव मुक्तिको पनि अपेक्षा गर्दैनन्। हरिका भक्त तर मुक्ति पनि चाहन्नन्। मुक्तिको चाहनाभन्दा भक्तिमा अलौकिक आनन्द छ। भक्तिमा जसले आनन्द पाएको छ त्यसलाई मुक्तिको आनन्द तुच्छ-नगण्य लाग्छ।

वेदान्ती तर मान्दछन् यस आत्मालाई बन्धन छैन भने मुक्तिको प्रश्नै कसरी उठ्ने। मुक्ति मेरा भगवान्‌की दासी हो भनेर वैष्णव मान्दछन्। दासीको अपेक्षा मेरा भगवान् गुरुतर हुनुहुन्छ।

भगवान्‌ले मेरो काम गरिदिनुहोला भनेर यस्तो आशा कहिल्यै नगर।

रामकृष्ण परमहंसलाई क्यान्सरको रोग लाग्यो। शिष्यहरूले भने 'माताजीलाई भन्नुहोस् आफ्नो रोगको औषधि गरिदिनू भनेर।' रामकृष्णले जवाफ दिए 'मेरी आमालाई म स्वयं आफ्ना निमित्त कष्ट दिन्नँ।'

भक्तिको अर्थ यो होइन आफ्नो सुखका निमित्त डाकोरजीलाई धम्काऊँ र काम गराऊँ।

माग्नाले साँचो मित्रताको गौरवको हानि हुन्छ। साँचो समझदार मित्रले कहिल्यै केही माग्दैन।

सुदामाको भगवान्‌का प्रति सच्चा भक्ति थियो। उनी गरीब थिए। दुलहीले केही माग्नका निमित्त उनलाई भगवान्‌कहाँ पठाइन्। सुदामा भगवान्‌कहाँ गए, माग्न होइन तर भेट गर्न। उनले द्वारिकापतिको वैभव देखे र पनि मुखसम्म बाएनन्। सुदामाले सोचे मैत्री-मिलनबाट मात्र भगवान्‌को आँखा रसाउँछ भने फेरि आफ्नो दरिद्रताको कुरा भनेका खण्डमा उहाँलाई कति गहिरो दुःख लाग्ला। मेरो दुःखको कारण मेरो कर्म हो। मेरो दुःखको कथा सुनेर तर उहाँलाई दुःख मात्र होला। यस्तो सोचेर सुदामाले भगवान्‌सँग केही मागेनन्।

सुदामाको यही इच्छा थियो आफूले ल्याएको मुट्ठीभर कनिका भगवान्‌ले प्रेमसहित ज्यूनार गरिदिए हुन्थ्यो। भगवान्‌ले यो कुरा थाहा पाइबक्सिन्थ्यो म केही लिन आएको रहेनछु बरु दिनै आएको रहेछु।

ईश्वर पहिले हाम्रो सर्वस्व लिनुहुन्छ र फेरि आफ्नो सर्वस्व हामीलाई दिनुहुन्छ। जीव निष्काम भएपछि मात्र भगवान् उसको पूजा गर्नुहुन्छ। भक्त जब निष्काम हुन्छ अनि भगवान् आफ्नो स्वरूपको दान भक्तलाई दिनुहुन्छ।

जीव जब आफ्नो जीवत्व छाड़ेर ईश्वरको ढोकामा जान्छ तब भगवान् पनि आफ्नो ईश्वर तत्त्वलाई बिर्सिएर भक्तसँग भेट गर्नुहुन्छ।

सुदामा दस दिनका भोका थिए र पनि उनले आफ्नो सर्वस्व ( एक मुट्ठी कनिका ) प्रभुलाई दिए। सुदामाको कनिका एक मुट्ठीमात्र भए पनि त्यस बखत उनको त्यही सर्वस्व थियो। त्यसो तर मुट्ठीभरि कनिकाको कुनै त्यस्तो ठूलो मोल होइन तर मूल्य सुदामाको प्रभु-प्रेमको छ।

मेरा निमित्त भगवान्‌लाई अलिकति पनि परिश्रम पर्न गयो भने मेरो भक्ति व्यर्थ छ, निष्फल छ भन्ठान। भगवान्‌सँग केही पनि नमाग। नमाग्नाले मात्र भगवान् तिम्रो ऋणी हुनुहुनेछ।

गोपिनीहरूले भगवान्‌सँग केही पनि मागेका थिएनन्। उनको भक्ति निष्काम थियो। त्यसकारण भगवान् गोपिनीहरूको ऋणी हुनुहुन्थ्यो। गोपीगीतमा पनि तिनीहरूले भगवान्‌लाई भनेका छन्—हामी तर हजूरका निःशुल्क क्षुद्र दासीहरू हौं अर्थात् निष्काम भावबाट सेवा गर्ने दासीहरू हौं। यस्तै किसिमले कुरुक्षेत्रमा पनि जब तिनीहरूले भगवान्‌को दर्शन पाउँछन् तर त्यहाँ पनि उनीहरू केही माग्दैनन्। उनीहरू केवल यति मात्र इच्छा गर्छन्—

**संसारकूपपतितोत्तरणावलम्बं गेहंजुषामपि मनस्युदियात् सदा नः।**

'संसाररूपी इनारमा खसेकालाई त्यहाँबाट बाहिर निकाल्ने अवलम्बनरूप हजूरको चरणकमल हामी घरमा भए पनि हाम्रा मनमा सदा बसिरहून्।'

एउटी सखीले उद्धवजीलाई सोद्धछिन् 'तिमीले कसको समाचार लिएर आएका छौ। कृष्णको! उहाँ यहाँनै हुनुहुन्थ्यो। मानिस भन्छन् श्रीकृष्ण मथुरा जानुभएको छ, तर यो कुरा झूटो हो। मेरा भगवान् सदा मेरासाथमै हुनुहुन्छ। चौबीसै घण्टा मेरो उहाँसँग संयोग छ।'

गोपीहरूको प्रेम शुद्ध छ। तिनीहरूले जुन वेला भगवान्‌को स्मरण गर्छन् त्यसवेला ठाकुरजीले प्रकट हुनैपर्छ। गोपिनीहरूको निष्काम भक्ति यति सत्त्वशील छ भगवान् तानिएर सवारी हुनैपर्छ।

जहाँ पनि जाऊ ठाकुरजीलाई सदा साथमा राख, भक्ति गर्न सक्ने छौ, त्यसैले तुकाराम भगत भन्नुहुन्छ, 'मलाई भोजन नभए हुन्छ, तर हे विट्ठलनाथ, मलाई एक क्षण पनि आफूबाट अलग नपारिदेऊ।'

भगवान् उद्धवजीलाई भन्नुहुन्छ—''उद्धव मेरा गोपिनीहरू ममा तन्मय चित्तवाला, मेरा लागि सर्वस्व त्याग्ने हुन्। गोपिनीहरूको आदर्श आँखाका सामुन्ने राख र भगवान्‌को भक्ति गर। सुदामाको निष्काम भक्तिलाई स्मरण गरेर प्रभुको भक्ति गर। सुदामा र गोपिनीहरू जस्तै भक्ति गर्न सिक। सुदामाको भक्ति पनि निष्काम थियो।''

तिमीले आफ्नो सर्वस्व भगवान्‌लाई अर्पण गर। यस्तो भएपछि भगवान्‌ले पनि आफ्नो सर्वस्व तिमीलाई दिनु हुनेछ।

निष्काम भक्ति भागवतको मुख्य विषय हो। निष्काम भक्ति श्रेष्ठ भक्ति हो। निष्काम भक्तिको श्रेष्ठ दृष्टान्त हो श्रीकृष्णका प्रति गोपिनीहरूको निष्काम ममता, निष्काम प्रेम। गोपिनीहरूले मुक्तिको पनि इच्छा गर्दैनथे।

श्रीकृष्णको सुख आफ्नो सुख हो भनी गोपिनीहरू ठान्दथे।

एउटी सखीले उद्धवजीलाई भनिन् ' श्रीकृष्णको वियोगमा हाम्रो कस्तो दशा छ, त्यो तपाईंले देखिहाल्नु भयो। मथुरा गएपछि श्रीकृष्णलाई भनिदिनुहोला यदि उहाँ मथुरामा सुखसँग बस्नुभएको छ भने हाम्रो सुखका निमित्त ब्रजमा आउने कष्ट नगर्नुहोला। हाम्रो प्रेम आफ्नो सुखका निमित्त होइन, तर श्रीकृष्णको सुखका निमित्त मात्र हो। श्रीकृष्णका वियोगले हामी दुःखी छौं र विलाप पनि गर्छौं, तर हाम्रो विरहमा यदि उहाँ मथुरामा सुखपूर्वक बस्नुभएको छ भने उहाँ सुखी रहनुहोस्। हाम्रो सुखका निमित्त उहाँले यहाँ आउनुपर्दैन। यदि आफ्नै सुखका निमित्त उहाँ आउन खोज्नु हुन्छ भने अवश्य पाल्नुभए हुन्छ।'

अरूको सुखमा सुखको अनुभव गर्नुनै सच्चा प्रेमको लक्षण हो।

शाण्डिल्यमुनिले आफ्नो भक्तिसूत्रमा लेख्नुभएको छ—

तत्सुखे सुखित्वम् प्रेमलक्षणम्।

धन्य छन् ती ब्रजवासी भक्तजन जो श्रीकृष्णसँग भेट गर्न मथुरा गएनन्। गोपिनी प्रेमको पागल अवस्थामा भगवान्को नजिक भएको अनुभव गर्छन्। सखी विचार गर्छिन् 'म वहाँलाई भेट्न गएँ र मेरो भेटले कृष्णजीलाई केही कष्ट भयो भने ? उहाँलाई केही लाज लाग्ला कि गाउँकी यस गोठाल्नीसँग म खेल्दथें ! अहँ ! मलाई मथुरा जानु छैन। मेरा प्रेममा केही न केही कमी भएको छ।'

'मेरो प्रेम साँचो भएदेखि अवश्य गोकुल फर्कनुहुने छ। त्यतिञ्जेलसम्म म विरह दुःख सहन गरिरहनेछु।'

त्यसैले श्रीकृष्णजी भन्नुहुन्छ मलाई गोकुलमा जो आनन्द गोपिनीहरूद्वारा पाइन्छ, त्यो द्वारिकामा छैन। गोपिनीहरूको प्रेम निष्काम छ। भगवान्को जसले आश्रय लिन्छ, त्यो निष्काम हुन जान्छ। गोपिनीहरूको यस्तो निष्काम भक्तिले गर्दा परमात्मा गोपिनीहरूको ऋणी हुनुभयो। गोपीप्रेमको महिमा दर्शनीय छ।

श्रीकृष्ण एक पटक बिरामी पर्नुभयो, ( बिरामी भएको नाटक गरेको ); कुनै औषधि काम लागेन। तब प्रभुले वैष्णव-भक्तको चरणरज औषधिका रूपमा माग्नुभयो। कुनै वैष्णवले आफ्नो चरणरज दिएका खण्डमा भगवान्को रोग निको हुन सक्थ्यो, भगवान्का रानीहरूसँग चरणरज मागियो। सबै रानीहरूलाई आश्चर्य भयो। प्राणनाथलाई चरणरज दिएका खण्डमा महापाप लाग्ने र नरकमा जानुपर्ने। नरकमा को जाने ? हामी त चरणरज दिँदैनौं। अरूहरूसँग पनि चरणरज मागियो कोही दिन तयार भएनन्।

अन्त्यमा कुरा गोपिनीहरूसम्म पुग्यो। गोपिनीहरूले सुने उनका कृष्ण बिमारी छन्। 'यदि उहाँ राम्रै निको हुन सक्नुहुन्छ भने हामी चरण-रज दिन तयार छौं। यसका निमित्त हामी कस्तै पनि दुःख सहन तयार छौं। आफ्नो कृष्ण सुखी ( निको ) हुनुहुन्छ भने हामी नरक यातना सहन पनि तयार छौं।' उनीहरूले आफ्नो चरणरज दिए। श्रीकृष्णको बिमारी निको भयो। साँचो निष्काम प्रेमको परीक्षा पनि भयो।

भागवतको फल हो निष्काम भक्ति। निष्काम भक्तिले भगवान् प्रसन्न हुनुहुन्छ। गोपिनीहरूको जस्तो निष्काम भक्तिको बानी बसाल।

भक्तिले मुक्ति पाइन्छ। भक्तिविना ज्ञान वैराग्य प्राप्त हुन सक्दैन। विना ज्ञानको भक्ति अन्धो हुन्छ र विना भक्तिको ज्ञान कुँजो हुन्छ। वाणी र आवश्यकतामा नियन्त्रण राख्न सकेका खण्डमा मानव प्रभुमा लीन हुन सक्छ।

भागवतको मुख्य विषय हो निष्काम भक्ति। भागवत सबैका निमित्त हो, वेदान्त सबैका निमित्त होइन। वेदान्तको अधिकार सबैलाई दिइएको छैन। जसलाई ब्रह्म चिन्ने इच्छा छ उसलाई नै वेदान्त हो। वेदान्तको अधिकारी को ? जसले षट्संपत्ति आदि प्राप्त गरेको छ त्यहीनै वेदान्तको अधिकारी हो। तर भागवत त सबैका निमित्त हो।

भागवत्को अधिकार त्यसो तर सबैलाई दिइएको छ तापनि 'निर्मत्सराणां सतां—' शुद्ध अन्तःकरण भएकाले जान्नुपर्ने परमात्माको निरूपण यसमा गरिएको छ।

निर्मत्सराणाम्—निर्मत्सर ( ईर्ष्या, डाहरहित ) भएर कथा सुन। मत्सर सबैभन्दा ठूलो शत्रु हो। मत्सरले सबैलाई दुःख दिएको छ। ज्ञानी र योगी दुवैलाई मत्सरले दुःख दिए।

स्वयं प्राप्त गरेको योगसिद्धिको शक्तिले चांगदेव १४०० वर्षसम्म बाँचेका थिए। उनले मृत्युलाई १४ पटक फर्काइदिए। उनी सिद्धिहरूमा फँसेका थिए। उनलाई प्रतिष्ठाको मोह थियो। उनले सन्त-ज्ञानेश्वरको कीर्ति सुनेका थिए। चांगदेव ज्ञानेश्वरका प्रति डाह ( मत्सर ) गर्न थाले। के यो बालक मभन्दा पनि ठूलो भयो ? ज्ञानेश्वरको उमेर १६ वर्षको थियो। चांगदेवले ज्ञानेश्वरलाई चिट्ठी पठाउनुपर्‍यो भन्ने इच्छा गरे। तर चिट्ठीमा संबोधन कसरी गर्ने ? ज्ञानेश्वर आफूभन्दा साना-केवल सोह्र वर्षका—त्यसकारण 'पूज्य' कसरी लेख्ने ? र यस्ता महाज्ञानीलाई 'चिरंजीवी' पनि कसरी लेखूँ ? यस समस्याको हल गर्न नसकी चिठीमा केही संबोधन नगरी पत्र पठाए।

सन्तको भाषा सन्त मात्र बुझ्न सक्छन्। तिनीहरू कोरा पनि पढ़िहाल्छन्।

मुक्ता बाईले पत्रको उत्तर दिइन् '१४०० वर्षको तिम्रो आयु भयो र पनि तिमी कोरा रह्यौ।'

यस्ता ज्ञानी पुरुषसँग भेट गर्नै पर्छ भनेर चांगदेवले विचार गरे। आफ्नो सिद्धिको प्रदर्शनका निमित्त उनले बाघको सवार र सर्पको लगाम बनाई यस्ता प्रकारले ज्ञानेश्वरसँग भेट गर्न भनी आइरहेका थिए।

यतातिर कसैले ज्ञानेश्वरलाई यो समाचार दिए चांगदेव बाघको सवारी चढ़ेर तपाईंलाई भेट्न आइरहेछन्। ज्ञानेश्वरले सोचे यस बूढ़ालाई आफ्ना सिद्धिहरूको अभिमान भएछ।

चांगदेवले आफ्ना सिद्धिहरूका अभिमानका कारणले ज्ञानेश्वरको पत्रमा 'पूज्य' शब्दले संबोधन गरेको थिएन।

ज्ञानेश्वरले सोचे चांगदेवलाई केही पाठ पढ़ाइदिनै पर्ने हो। त्यस बखत ज्ञानेश्वर पूजाकोठाको चौकीमा बसेका थिए। उनले चौकीलाई हिँड्ने आदेश दिए। ढुङ्गाको चौकी हिँड्यो। चौकी हिँड़ेको देखेर चांगदेवको अभिमान चूर भयो।

चांगदेवले थाहा पाए मैले हिंस्रक पशुहरूलाई मात्र वशमा ल्याएको रहेछु उता ज्ञानेश्वरसँग यस्तो शक्ति छ, जो जड़ पदार्थलाई पनि चेतन बनाइदिन्छ। दुवैको भेट भयो। चांगदेव ज्ञानेश्वरका शिष्य भए।

यस दृष्टान्तले यो सिकायो हठयोगले मनलाई नियंत्रित गर्नुभन्दा प्रेमले मनलाई वशमा गर्नु उत्तम हो। चांगदेव हठयोगी थिए। हठद्वारा उनले मनलाई वशमा गरेका थिए।

योगले मनलाई एकाग्र पार्न सक्छ तर हृदयलाई विशाल पार्न सक्दैन। यही कारण हो चांगदेव ज्ञानेश्वरसँग ईर्ष्या गर्थे।

हृदयलाई विशाल पार्छ भक्तिले। भक्तिद्वारा हृदय पग्लिन्छ, विशाल पनि हुन्छ।

मत्सर गर्नेहरूको तर यो लोक र परलोक दुवै बिग्रन्छ। मनमा मत्सर नराख। मनबाट मत्सर निकालिदियौ भने मनमोहन स्वरूप मनमा सुदृढ़ हुन्छ।

कथा सुनेर त्यसलाई जीवनमा चरितार्थ गर्ने मानिस बहुतै कम हुन्छन्।

कथा सुन र कथाका सिद्धान्तहरूलाई जीवनमा आचरण गराऊ। केवल 'शुश्रुभिः' होइन 'कृतिभिः' पनि बन। त्यसकारण भनिएको छ जब सुकृति पुरुष तिनलाई सुन्न इच्छा गर्छन् त्यही समयमा ईश्वर अविलम्ब उनका हृदयमा आएर बन्दी भइहाल्छन्। भागवत कथाको श्रोता निष्काम र निर्मत्सर भइहाल्छ।

कुनै पनि जीवका प्रति राखेको कुभाव ईश्वरका प्रति राखिएको कुभाव हो। मानिस जबसम्म निर्मत्सर बन्दैन, तबसम्म त्यसको उद्धार हुँदैन। जस्तो भावना तिमी अर्काका प्रति राख्छौ त्यस्तै भावना उनले तिम्राप्रति राख्नेछन्। अरूहरूसँग वैरभाव गर्ने मानिसले आफ्ना साथ पनि वैरभाव गर्छ, किनभने सबैका हृदयमा ईश्वरको वास छ।

गीतामा भनेको छ—

**क्षेत्रज्ञं चापि मां विद्धि सर्वक्षेत्रेषु भारत।**

नैमिषारण्यमा अट्ठासी हजार ऋषिहरूको ब्रह्मसूत्र भयो। त्यस ब्रह्मसूत्रमा एक पटक सूतजी पाल्नुभयो। शौनकजीले सूतजीलाई प्रश्न गर्नुभयो 'जीवमात्रको कल्याण कसरी हुन्छ? कल्याणको सरल र सुगम बाटो देखाउनुहोस्। मनुष्य मात्रको कल्याणको उपाय बताउनुहोस्। कलियुगका शक्तिहीन मनुष्य पनि जसको उपयोग गर्न सकून, यस्तो कुनै साधन बताउनुहोस्।' यस कलियुगका मानव मन्द बुद्धि र मन्द शक्तिका छन्, त्यसकारण कठिन बाटो लिन सक्दैनन्, कलियुगका मानिस भोगी हुनाले मन्दबुद्धि भनिएका हुन्। कलियुगका मानव यस्ता भोगी छन् एउटै आसनमा

बसेर आठ घण्टा ध्यान गर्न सक्दैनन्। ती आफूलाई चतुरो ठान्दछन्, तर व्यासजी यस्तो मात्र तयार हुनुहुन्न।

संसारका विषयहरूका पछि मात्र जो परिरहन्छ त्यसलाई प्रवीण कसरी भन्नु? शास्त्रले भनेको छ—सय काम छोड़ेर भोजन गर, हजार काम छाड़ेर स्नान गर, लाख काम छोड़ेर दान गर र करोड़ काम छाड़ेर प्रभुको स्मरण गर, ध्यान गर, सेवा गर—

शतं विहाय भोक्तव्यं सहस्र स्नानमाचरेत्।
लक्षं विहाय्र दातव्यं कोटि त्यक्त्वा हरिं भजेत्॥

घरको काम गरिसकेपछि माला नजप, तर प्रभुनामको जप गरेपछि सब काम गर। करोड़ कामहरूलाई छोड़ेर भगवान्‌को स्मरण गर। कलियुगका मानिसले जो काम गर्नुपर्छ त्यसलाई गर्दैनन् र जसलाई नगर्नुपर्ने हो त्यही पहिले गर्छन्। यसै कारणले व्यासजीले उनलाई मन्दबुद्धि भनेको हो।

विस्तारपूर्वक तपाईंले कथा सुनाउनुहोस्। कृष्ण कथाले तृप्ति हुँदैन। द्वारिकाको कृष्णको स्वरूप दिव्य छ। श्रीनाथजीको स्वरूप मनोहर छ। दर्शनबाट तृप्ति हुँदैन। भगवान्‌का मङ्गलमयी कथाहरूको वर्णन गर्नुहोस्। भगवान्‌को लीला-कथा सुनेर हामी कहिल्यै तृप्त हुँदै-हुँदैनौं।

कलियुगमा जब अधर्म बढ्दछ तब धर्मले कसको आश्रय लिन्छ? प्रथम स्कन्धको प्रथम अध्यायलाई 'प्रश्नाध्याय' भनिन्छ।

समुद्र पार गर्ने मानिसलाई जस्तो कर्णधारको भर हुन्छ त्यस्तै हामीले तपाईंलाई भेटेका छौं। तपाईं भगवान् हाम्रो माझी होइबक्सिन्छ। कुनै यस्तो रीतिले हामीलाई तपाईंले कथा सुनाउनुहोस् जसले गर्दा हाम्रो हृदय पग्लिन जावोस्। प्रभुका कृपाको कारणले मात्र तपाईं हामीलाई भेटिनु भएको छ।

परमात्मासँग भेट्ने आतुरीका कारणले मात्र सन्तसँग भेटघाट हुन्छ। जीव जब परमात्मासँग भेट्नलाई आतुर हुन्छ तब परमात्माका कृपाले सन्त भेटिन्छन्।

स्वाद भोजनमा हुँदैन, त्यसको कारण भोक हो।

मानिसलाई परमात्मा मिलनको भोक तबसम्म लाग्दैन, जबसम्म सन्त भेटिए पनि उसका प्रति सद्भाव जागेर आउँदैन। यसको एउटै कारण यो हो जीवलाई भगवद्दर्शनको इच्छै नभएको।

वक्ताको अधिकार सिद्ध हुनुपर्छ र श्रोताको पनि अधिकार सिद्ध हुनुपर्छ।

श्रवणका तीन प्रधान अङ्ग छन्—श्रद्धा, जिज्ञासा र निर्मत्सरता।

(१) श्रद्धा—श्रोताहरूले मनलाई एकाग्र गरेर श्रद्धापूर्वक कथा सुनून्।

(२) जिज्ञासा—श्रोतामा जिज्ञासा हुनुपर्छ। जिज्ञासाको अभावमा मन एकाग्र हुँदैन र कथाको कुनै असर पनि पर्दैन। धेरै कुरा जान्ने जिज्ञासा भएन भने कथा श्रवणले कुनै विशेष लाभ हुँदैन।

(३) निर्मत्सरता—श्रोताका मनमा जगत्को कुनै पनि जीवप्रति मत्सर हुनु हुँदैन। कथामा दीन र नम्र भएर जानुपर्छ। पापलाई छोड़ेर भगवान्सँग भेट्ने तीव्र आतुरीको भावनाले कथा सुन्यौ भने भगवान्को दर्शन पाइने छ।

प्रथम स्कन्धमा शिष्यको अधिकारको वर्णन छ।

एकजना महात्मा रामायणको कथा सुनाइरहनुभएको थियो। कथा समाप्त भएपछि कुनै श्रोताले महात्मालाई सोधेछन्—'कथा त सुनें तर मैले यो कुरा बुझ्न सकिनँ राम राक्षस थिए वा रावण'। महात्माले जवाब दिए—'राक्षस त मै हुँ, जो तिमीलाई केही पनि बुझाउन सकिनँ।'

परमात्माको कथा बारंबार सुन्यौ भने प्रभुका प्रति प्रेम-भाव जाग्ने छ।

शौनकमुनिले सूतजीलाई भन्नुभयो—'भागवत कथामा हामीलाई श्रद्धा छ। तपाइँका प्रति हाम्रो आदर छ। अनेक जन्मका पुण्यहरूको उदय भएपछि नै अधिकारीलाई वक्ताका मुखबाट कथा सुन्ने सौभाग्य प्राप्त हुन्छ।

प्रथम श्रवण भक्ति हो। रुक्मिणीले आफ्नो पत्रमा लेखेकी थिइन् 'तपाइँको कथा सुनेर नै तपाइँसँग विवाह गर्ने इच्छा भएको थियो'। 'श्रुत्वा' शब्द त्यहाँ छ।

भगवान्को गुण सुन्नाले उनका प्रति प्रेम-भाव उत्पन्न हुन्छ।

श्रोता र वक्ता दुवै विनयी हुनुपर्छ। सूतजी श्रोताहरूलाई धन्यवाद दिनुहुन्छ। उहाँ भन्नुहुन्छ—'कथा सुनेर तिमीलाई जो गर्नुपर्छ, त्यो तिमी गर्छौ। तिमी शान्तिले सुन्दछौ तर मेरो मन पनि भगवान्मा स्थिर हुन्छ। तिमी ज्ञानी छौ। प्रभु-प्रेममा पागल छौ, तर मेरो कल्याणका निमित्त प्रश्न सोद्धछौ। कथा सुनाएर म आफ्नो वाणीलाई पवित्र गर्नेछु।'

**मम त्वेतां वाणीं गुणकथनपुण्येन भवतः।**
**पुनामीत्यर्थेऽस्मिन् पुरमथनबुद्धिर्व्यवसिता॥**

'शिवमहिम्नस्तोत्र' मा पुष्पदन्तले पनि भनेका छन् शिवतत्त्वको वर्णन त्यसो त कसले गर्न सक्तछ। म केवल आफ्नो वाणी पवित्र गर्न हिंडेको छु।

आरम्भमा सूतजी शुकदेवजीलाई वन्दना गर्नुहुन्छ। फेरि भगवान् नारायणलाई वन्दना गर्नुहुन्छ—नारायणं नमस्कृत्य।

भारतका प्रधान देव नारायण हुनुहुन्छ। श्रीकृष्ण गोलोकमा पाल्नुभयो। सबै अवतारहरूको समाप्ति भयो। तर नारायणको त समाप्ति भएको छैन होला। भारतका प्रजाको कल्याण गर्नका निमित्त उहाँ आज पनि तपश्चर्या गरिरहनुभएको छ।

श्री शङ्कराचार्यलाई नर-नारायणको दर्शन भयो र उहाँले भन्नुभयो—'म महान् योगी हुँ, त्यसैले यहाँको दर्शन गर्न सकेको छु। तर कलियुगका भोगीजनले पनि तपाइँको दर्शन पाउन सकून, यस्तो कृपा गरिदिनुपऱ्यो।' भगवान्ले उहाँलाई त्यस समयमा बद्रीनारायणको नारायण कुण्डमा स्नान गर्ने आदेश दिनुभयो र भन्नुभयो त्यहाँबाट तिमीलाई जो मेरो मूर्ति पाइएला, त्यसलाई स्थापना गरिदिनू। बद्रीनारायण भगवान्को स्थापना शङ्कर स्वामीले गर्नुभएको हो। शङ्कराचार्यको प्रथम ग्रन्थ हो 'विष्णुसहस्रनाम' को टीका।

मनद्वारा मानस दर्शनको पुण्य धेरै लेखिएको छ। नारायणलाई मनमै प्रणाम गर। जो बद्री जान्छ त्यसको शरीर सुध्रिन्छ।

बद्रीनारायण तीर्थमा लक्ष्मीको मूर्ति मन्दिरको बाहिर छ। तपश्चर्यामा स्त्री, द्रव्य, बालकको सङ्ग त बाधादायी हुन्छ। नारायणले लक्ष्मीजीलाई भन्नुभयो—'तिमी बाहिर बसेर ध्यान गर, म भित्र बसेर ध्यान गर्ने छु।'

एक भक्तले बद्रीनारायणका पुजारीलाई सोधे, 'यस्तो कड़ा जाड़ोमा चन्दनद्वारा ठाकुरको पूजा किन गर्छौ?' पुजारीले उत्तर दिए—'हाम्रा भगवान् कठोर तपश्चर्या गर्नुहुन्छ, जसले शक्ति बढ्छ र भगवान्लाई धेरै गर्मी हुने हुनाले चन्दनद्वारा पूजा गरिन्छ।'

सूतजी सरस्वती र व्यासजीलाई वन्दना गरेर कथा प्रारम्भ गर्नुहुन्छ।

**स वै पुंसां परो धर्मो यतो भक्तिरधोक्षजे।**
**अहैतुक्यप्रतहिता यथाऽत्मा सम्प्रसीदति॥**

*(श्रीमद्भागवत १-२-६)*

जुन धर्मद्वारा मानिसका हृदयमा श्रीकृष्णका प्रति भक्ति जाग्दछ, त्यही धर्म श्रेष्ठ हो। भक्ति पनि यस्तो हुनुपर्छ जसमा कुनै प्रकारको कामना नहोस्। निष्काम तथा निरन्तर भक्तिले हृदय आनन्दरूप परमात्मालाई प्राप्त गरेर कृतकृत्य हुन्छ।

सूतजी भन्नुहुन्छ—'जीवात्मा अंश' हो र परमात्मा अंशी। अंशीबाट अंश छुट्टिएर गएको छ र यसैले ऊ दुःखी छ। अंशी अर्थात् परमात्मामा मिलेपछि मात्र जीव कृतार्थ हुन्छ। परमात्मा भन्नुहुन्छ—ममैवांशो जीव लोके। तिमी मेरा अंश हौ,तिमी ममा मिसिएर कृतार्थ हुनेछौ। नर, नारायणको अंश हो। अंश (नर) अंशी (नारायण)-मा जबसम्म मिसिँदैन तबसम्म उसलाई शान्ति पाईंदैन। मैले यो नियम निश्चय गरेको छु आफ्नो परमात्माको आश्रय लिएर उनका साथ मलाई एक हुनु छ, कुनै पनि प्रकारबाट् ईश्वरका साथ एक हुनु छ। ज्ञानी ज्ञानद्वारा अभेद सिद्ध गर्छ तर वैष्णव महात्मा प्रेमद्वारा अद्वैत (अभेद) सिद्ध गर्छन्। प्रेमको परिपूर्णता अद्वैतमै छ। भक्त र भगवान् अन्ततः एकै भइहाल्छन्। जसरी गोपिनी र कृष्ण एक भएका थिए।

जीव र ईश्वर कसरी छुट्टिए, यसको चर्चा गर्नुपर्ने केही आवश्यकता छैन। ईश्वरबाट जीवको वियोग भएको छ, यो सत्य हो यो वियोग कसरी र कहिलेदेखि भयो, यसको खोजीमा समय खेर फाल्ने केही आवश्यकता छैन र यसबाट केही लाभ पनि छैन। धोतीमा दाग लागेपछि त्यो कहिले र कसरी लाग्यो भनेर विचार गरिरहनाले त्यो दाग जाने होइन। त्यो दागलाई हटाएपछि मात्र धोती सफा हुन्छ। यस्तै किसिमबाट ईश्वरसँग भेट्ने प्रयत्न गरौं, यही मात्र कामना गरिएको हो।

जब जीव निर्भय बन्दछ, तब त्यो भाग्यशाली हुन्छ। जसको शिरमा कालको भय छ, त्यो निर्भय कसरी हुन सक्छ ? भाग्यशाली त्यो हो, जसलाई मरणको भय छैन। ध्रुव, पाण्डव, ब्रजभक्त धन्य हुन् जसका अधीनमा काल थियो।

ईश्वरलाई यो सोध्न मन लाग्छ र आशा गर्छन् मानिसलाई दिएको बुद्धि र मनलाई उसले के गऱ्यो ? जीवलाई मृत्युका दिन अर्थात् हिसाब बुझाउने दिन डर लाग्छ। जसको जीवन सफा छ, त्यसको हिसाब सफा हुन्छ। जुन दिन करअड्डाको हाकिमले कुनै व्यापारीसँग लाख-दुइ-लाखको हिसाब माग्छ तब त्यो व्यापारी डराउँछ। तब फेरि जब ईश्वरले सारा जीवनको हिसाब मागेको खण्डमा कस्तो दशा होला ? के यसको पनि कहिल्यै विचार गरेको छ ? गरिएका पापहरूको स्मरण अन्त्यकालमा जब आउन थाल्छ तब जीव डराउँछ।

जबसम्म मृत्युको भय छ, तबसम्म जीवनले शान्ति पाउँदैन।

भगवान्‌ले जब जीवलाई स्वीकार गर्नुहुन्छ तब भगवान्‌का सेवक कालले जीवको केही पनि बिगार्न सक्दैन।

उपनिषद्‌मा भनेको छ—जीव र ईश्वर साथ-साथै बसेका छन् र पनि जीवले ईश्वरलाई चिन्दैन। जीव बहिर्मुखी भयो भने त्यसले अन्तर्यामी चिन्न सक्छ।

एउटा मानिसले थाहा पाएछ गङ्गा किनारामा बस्ने एक सन्तसँग एक पारसमणि छ। पारसमणि पाउने लोभले त्यस मानिसले सन्तको सेवा गर्न थाल्यो। सन्तले 'म गङ्गा स्नान गर्न जाँदैछु। फर्किएर आएपछि तिमीलाई पारसमणि दिनेछु।' सन्त यति भनेर गइहाले। अब त्यस मानिसका मनमा पारसमणिका निमित्त छट्‌पटी बढ्दै गयो। उसले सन्तको अनुपस्थितिमा सारा झुप्रो तलासी गऱ्यो, तर पारसमणि उसको हात परेन। सन्त फर्किएर आए। सन्तले कुरा थाहा पाएर भने 'के यतिसम्म पनि धैर्य गर्न सकेनौ ? पारसमणि मैले त्यस बट्टामा राखेको छु। यति भनेर उनले एउटा बट्टा तल झारिदिए। त्यो बट्टा तर फलामको थियो। तब त्यस मानिसले विचार गऱ्यो यो कस्तो पारसमणि हो ? किनभने जुन बट्टामा त्यो पारसमणि राखिएको थियो, त्यो फलामको थियो। यस पारसमणिले त्यो बट्टालाई सुनको किन बनाएन ? के यो पारसमणि असली हो या सन्तले ठट्टा गर्नु भइरहेछ ? उसले सन्तलाई सोध्यो यो बट्टाले पारसमणिलाई छोएपछि पनि फलामै किन रह्यो, किन सुन भएन ? त्यसपछि सन्तले उसलाई भने 'त्यो पारसमणि एउटा झुम्रोमा बेरेको थियो,

आवरणमा थियो र त्यसैले त्यो बट्टा सुन हुन पाएन।' यस्तै प्रकार ईश्वर र जीव हृदयमा एकै स्थानमा बस्छन् तर दुवैको बीचमा वासनाको पर्दा छ र फलतः दुवैको मिलन हुन पाएन अर्थात् ईश्वरलाई जीवले चिन्न सकेन र जीवको ईश्वरका साथ मिलन हुन पाएन। जीवात्मा बट्टा हो र ईश्वर पारसमणि। दुवैका बीच पर्दा छ, जसलाई हटाउनु आवश्यक छ।

साधना गरेर पनि सिद्धि पाइएन भने साधनाका प्रति साधकको मनमा उपेक्षाको भाव जाग्दछ। जीव साधक हो, सेवा-स्मरण साधन हुन्। श्रीकृष्ण साध्य हुनुहुन्छ। विष्णु भगवान्को भक्ति गर्नु पुरुषहरूको परम धर्म हो।

मानिस भन्छन् भक्तिमार्ग एकदम सजिलो छ। बिहान भगवान्को पूजा गऱ्यो अब छुट्टी भइहाल्यो भन्छन्। सारा दिन भने भगवान्लाई बिर्सिदिन्छन्। यो भक्ति होइन। चौबीसै घण्टा ईश्वरको संझना रह्यो भने भक्ति हुन जान्छ।

भक्तिमा आनन्द छ। मानिस शरीरले मात्र भक्ति गर्छ, मनले गर्दैन। वाणीले भगवान्को नाउँ उच्चारण गर्दैन भने सबै कुरा व्यर्थ हुन्छ।

मन संसारको विषयमा रमिरहोस् र शरीर भगवान्को सेवा गरोस्, तर यस्तो सेवामा कुनै आनन्द हुँदैन। सेवामा क्रिया मुख्य होइन, भाव मात्र प्रधान हो। सबै विषयहरूबाट मनलाई हटायौं भने तब मात्र सेवामा आनन्द आउने छ।

'सर्वेषाम् अविरोधेन ब्रह्मकर्म समारभे।' सेवा गर्न बस्यौं भने पहिले भावना गर। सेवा गरेर पनि भगवान्को दर्शन हुन सकेन भने दोष आफ्नै हो। सेवकलाई सेवा गरिसकें, मेरो पाप गयो, मेरो दुःख हरायो, मेरो दारिद्र्य सकियो, म कृतार्थ भएँ, यस्तो भावना हुनुपर्छ। सेवा गरिसकेपछि यस्तो भाव भएन भने सेवा-पूजाबाट कुनै आनन्द हुँदैन।

संसारका विषयहरूलाई मनबाट हटाऊ। जबसम्म हटाउँदैनौ, तबसम्म सेवामा आनन्द हुने छैन। सेवा भनेको भावना हो। परमात्माको सेवा त्यसैवेला हुन्छ जब संसारका विषयहरूको प्रेम कम भएर जान्छ।

परमात्मासँग प्रेम गर्ने हो भने विषयहरूको प्रेम छाड्नुपर्छ।

**प्रेमगली अति साँकरी,**
**तामें दो न समाहिं।**

प्रेमको साँगुरो गल्लीमा दुवैको निर्वाह हुँदैन। जगत्को बन्धन छोड्नौ भने त्यतिञ्जेलसम्म ब्रह्मसम्बन्ध हुन्यै छैन।

संसारका विषयहरूको मोह बिस्तारै-बिस्तारै छोड़। संसारलाई छोड़ेर कहाँ जान्छौ ? संसार त्यागनुपर्ने आवश्यकता छैन, विषयहरूको मोह छोड्नुपर्ने आवश्यकता छ।

व्रतमा त्याग गर्नु भन्ने छ र त्यो सदाका निमित्त होस्। सदाको त्याग हुन सक्तैन त्यसैले व्रतको विधि बनाइएको छ। बिस्तार-बिस्तार संयम बढ़ाऊ, वैराग्य बढ़ाऊ अनि ईश्वर सेवामा, ध्यानमा अनौठो आनन्द आउने छ।

एक पटक एक जना चतुर्वेदीजी गोकुल जान भनी निस्के। नाउमा बसेर यमुनाजी पारि तर्नु थियो। चतुर्वेदीजी भाङ्गको नशामा चूर थिए। उनी नाउमा बसेर नाउ ख्याउन थाले। आफ्नो बाहुबलमा पूर्णविश्वास भएकाले भन्न लागे नाउ अब गोकुल पुग्ने छ। चतुर्वेदीजीले सारा रात नाउ चलाए। बिहान भयो। उनी विचार गर्न लागे यो मथुरा जस्तो कुन चाहिं गाउँ आयो। यो कुन गाउँ हो भनेर कसैसँग सोधेछन्। जवाफ पाइयो मथुरा हो। त्यही विश्रामघाट र त्यही मथुरा। नशा उत्रिएपछि उनले आफ्नो मूर्खता बुझे। उनले सारा रात नाउ चलाए तर नाउ डोरीद्वारा घाटमा बाँधिएको थियो। नशाले गर्दा उनले नाउ खोल्नै बिर्सिएका रहेछन् र सारा रात नाउ चलाए तापनि जहाँको त्यहीं रहे।

यो कथा हाँस्नका निमित्त भनेको होइन, नहाँस। यो अवस्था चतुर्वेदीको मात्र होइन, हामी सबैको हो। सबै इन्द्रिय-सुखको नशामा चूर छौं। जीवलाई इन्द्रिय-सुख भोग्ने नशा चढ़ेको छ। स्पर्शसुखको, संसारका विषयसुखको नशा चढ़ेको छ। धनको नशामा मानिस मन्दिरमा जान्छ। उसले नशामा भएका कारणले भगवान्को चिन्तन सच्चा हृदयले गर्दैन, त्यसकारण उसलाई भगवान्को दर्शनको आनन्द हुँदैन। दुनियाँका विषय राम्रा छैनन्। केवल परमात्मा मात्र सुन्दर हुनुहुन्छ। वासनारूपी डोरीले विषयमा बाँधिएका इन्द्रियहरूलाई छुटाउनु छ।

वासनाले कसैलाई पनि अगाड़ि बढ्न दिन्न। वासनारूपी डोरीलाई नचुँडाएसम्म अगाड़ि बढ्न सक्ने छैनौ। वासनारूपी डोरीद्वारा यस जीवको गाँठो संसारका साथ बाँधिएको छ, त्यसलाई छोड्नु छ।

हृदयमा कुनै वासना रहेन भने भक्तिद्वारा आनन्द मिल्नेछ।

सर्वोत्तम वस्तुलाई भगवान्मा अर्पण गर्नु मात्र भक्ति हो?

विना वैराग्य भक्ति रुन्छिन्। भोग भक्तिमा बाधक छ। संयम र सदाचार बढ़ायौ भने भक्तिबाट आनन्द पाइएला। सुखी हुनु छ भने संसारका विषयहरूका साथ धेरै प्रेम नगर। घरमै वैराग्यको साधना गर। विना वैराग्यको ज्ञान र भक्तिको शोभा छैन। ज्ञान र वैराग्य सहित भक्ति बढ्दै गयो भने ईश्वरको साक्षात्कार हुन्छ।

ज्ञानमार्गमा इन्द्रियहरूको निरोध गर्नुपर्छ। भक्तिमार्गमा इन्द्रियहरूलाई प्रभु-मार्गमा लैजानुपर्छ।

वासना लिने इच्छा छ भने ठाकुरजीलाई फूल अर्पण गरेपछि त्यसको वासना सुँघ।

ब्रह्मसम्बन्धलाई सदा कायम राख्नाले मात्र जीवात्माको कल्याण हुन्छ। वेद पनि उनै वासुदेव भगवान्को वर्णन गर्छन्। *उत्तमोत्तम तत्त्व अद्वैत तत्त्व हो जसलाई श्रीकृष्ण भगवान् भन्नुहुन्छ—*

लौकिक व्यवहारको ज्ञानमा द्वैत छ, ईश्वरको स्वरूपसम्बन्धी ज्ञानमा अद्वैत छ। व्यवहारको स्वरूपको ज्ञान द्वैतभावले भरिएको छ। व्यावहारिक ज्ञानमा ज्ञाता र ज्ञेय भिन्ना-भिन्नै छ। परमात्माको

ज्ञान भएपछि ज्ञाता र ज्ञेय एउटै बन्दछन्। सेवा-स्मरण गर्नाले तन्मयता हुन्छ। ईश्वरको अपरोक्ष साक्षात्कार हुन्छ। जसले गर्दा त्यो जीव ईश्वरमा मिल्न जान्छ। यसपछि उसले यो भन्न सक्दैन म ईश्वरलाई चिन्दछु वा चिन्दिन।

गोपिनीले सबैमा श्रीकृष्णलाई देखेर जीवभावलाई बिर्सिएका थिए—

लाली मेरे लाल की, जित देखौं तित लाल।
लाली देखन मैं गई, मैं भी हो गई लाल॥

श्रुतिले वर्णन गर्दछ त्यहाँ न म बस्छु र न तिमी। वृत्ति ब्रह्माकार भइहाल्छ।

श्रीकृष्णका स्वरूपको जसलाई राम्ररी ज्ञान हुन्छ त्यो ईश्वरबाट अलग बस्न सक्दैन। सबमा ईश्वरको दर्शन गर्ने मानिस स्वयं ईश्वर बन्न जान्छ।

जीवको जीवभाव नगएसम्म अपरोक्षानुभव हुँदैन। यस प्रकार अद्वैतको ज्ञान हो भनेको छ। जीव र ब्रह्मको अद्वैतपछि सिद्ध होला। त्योभन्दा पहिले जीव र गुरुको अद्वैत हुनुपर्छ। मनबाट एक हुनु छ शरीरबाट होइन। शुद्ध ब्रह्मले मायाको संसर्गविना अवतार लिन सकेन। शुद्ध सुन नरम हुन्छ, त्यसबाट गहना बनाऊँ भने गहना बन्दैन। सिक्री बनाउनु छ भने त्यसमा अर्को धातु सुन कड़ा पार्नलाई मिसाउनुपर्छ। त्यसकारण परमात्मा पनि मायाको आश्रय लिएर प्रकट हुनुहुन्छ, तर ईश्वरलाई यो माया बाधक हुँदैन। जीवलाई माया बाधक हुन्छ। योगी जसलाई परमात्मा भन्छन्, तिनै परमात्मासँग जो मिल्दछ, त्यो जीव कृतार्थ हुन्छ। भगवान्‌का प्रति प्रेम बढ़ाउनु छ भने भगवान्‌का अवतारहरूको कथा सुन। परमात्माका चौबीस अवतारहरूको कथा छ। धर्मको स्थापना गर्न र जीवको उद्धार गर्नलाई परमात्मा अवतार धारण गर्नुहुन्छ। परमात्माको अवतार तिम्रो घरमा हुनुपर्छ, मन्दिरमा होइन, मानव-शरीर यो घर हो।

भागवतमा मुख्यतः कृष्ण-कथा भन्नु छ, तर यो कथा आखिरमा आउँछ। भगवान्‌का अवतारहरूको कथा सुन्नाले जीवन सुध्रन्छ। भगवान्‌को सारा धर्म जीवमा सर्न आउनु अवतार भयो। तेस्रो अध्यायमा चौबीस अवतारहरूको कथा संक्षेपमा वर्णन भएको छ। पहिलो अवतार सनत्कुमारहरूको हो। त्यो ब्रह्मचर्यको प्रतीक हो। सबै धर्ममा ब्रह्मचर्य पहिले आउँछ। ब्रह्मचर्यको पालन विना मन स्थिर हुँदैन। ब्रह्मचर्यले मन, बुद्धि, चित्त, अहङ्कार पवित्र हुन्छ। ब्रह्मचर्यको पालन गर्नाले अन्तःकरण शुद्ध हुन्छ, पहिलो कदम हो ब्रह्मचर्यको। दोस्रो अवतार वाराहको हो। वाराह अर्थात् श्रेष्ठ दिवस कुनचाहिँ हो। जुन दिन सत्कर्म हुन्छ त्यही दिन श्रेष्ठ हुन्छ। वाराह अर्थात् श्रेष्ठ दिवस कुनचाहिं हो। जुन दिन सत्कर्म हुन्छ त्यही दिन श्रेष्ठ हुन्छ। सत्कर्ममा लोभ विघ्न गर्न आउँछ। लोभलाई संतोषले मार। वाराह अवतार सन्तोषको अवतार हो। जुन स्थितिमा छौ सन्तोष मान। लोभलाई मारेर, प्रभुले जुन स्थितिमा राख्नु हुन्छ, त्यसैमा सन्तोष मान। यो वाराह अवतारको रहस्य हो। तेस्रो अवतार हो नारदको। यो भक्तिको अवतार हो। ब्रह्मचर्यको पालन गरेर प्राप्त

स्थितिमा सन्तोष माने त्यसलाई नारद अर्थात् भक्ति पाइने भो। नारदजी भक्तिका आचार्य हुनु हुन्छ।

चौथो अवतार नर-नारायणको हो। भक्ति पाएपछि ऊसँग भगवान्‌को साक्षात्कार हुन्छ। भक्तिद्वारा भगवान् भेटिनुहुन्छ। तर ज्ञान र वैराग्यविना भक्ति दृढ़ हुँदैन। भक्तिमा ज्ञान र वैराग्यको आवश्यकता पर्छ। त्यसकारण पाँचौं अवतार कपिलदेवको भयो, जसमा ज्ञान, वैराग्य पनि आयो। वैराग्यलाई आफ्नो जीवनमा ल्याऊ। ज्ञान-वैराग्यका साथ भक्ति आइन् भने भक्ति सँधैंका निमित्त स्थिर हुन्छिन्। छैटौं अवतार दत्तात्रेयजी हुनुहुन्छ। माथि उल्लेख भएका पाँच गुण ब्रह्मचर्य, संतोष, ज्ञान, भक्ति र वैराग्य तपाईंमा आए भने तपाईं गुणातीत हुनुहुने छ र तपाईं अत्रि हुनुभयो भने भगवान् तपाईंकहाँ आउनुहुनेछ। माथिका छ अवतार ब्राह्मणका निमित्त हो। सातौं अवतार यज्ञ, आठौं ऋषभदेव, नवौं पृथु राजा, दसौं मत्स्यनारायण, यी चार अवतार क्षत्रियहरूका निमित्त हो। धर्मको आदर्श बताउनका निमित्त हो। एघारौं अवतार कूर्मको, बाह्रौं अवतार धन्वन्तरीको, तेह्रौं अवतार मोहिनीरूप नारायणको, यो अवतार वैश्यहरूका निमित्त हो। प्रभुले वैश्यको जस्तो लीला गर्नुभएको छ। चौधौं अवतार नरसिंह स्वामीको छ। नरसिंह अवतार पुष्टिको अवतार हो। भक्त प्रह्लादलाई कृपा गर्नका निमित्त यो अवतार भएको छ। भगवान्‌ले नृसिंह अवतारमा प्रह्लादलाई कृपा गर्नुभएको छ। प्रह्लादको जस्तो दृष्टिले हेर्‍यो भने खम्बामा पनि भगवान्‌को दर्शन हुनेछ। ईश्वर सर्वव्यापक हुनुहुन्छ, यस्तो मुखले भन्ने मात्र होइन त्यसको अनुभव गर। त्यसो भएका खण्डमा तिमीबाट पाप कर्म हुने छैन। सन्त पनि व्यवहार गर्छन्। जबसम्म शरीर छ, तबसम्म व्यवहार गर्नुपर्छ। ईश्वरलाई मानिसले मनशक्ति या बुद्धिशक्ति द्वारा जित्न सकेको छैन, केवल प्रेमद्वारा मात्र जित्न सकेको छ। यशोदाको प्रेमका सामुन्ने श्रीकृष्ण कमजोर बन्नुहुन्छ र बाँधिनु हुन्छ। बालकको प्रेमका सामुन्ने आमाको बल दुर्बल हुन्छ। प्रेमका सामुन्ने शक्ति दुर्बल हुन्छ। तपाईं पनि भगवान्‌मा खूब प्रेम बढ़ाउनुहोस्। भगवान कमजोर भएर तपाईंका नजीक आउनुहुन्छ। पन्ध्रौं अवतार वामनको हो जो पूर्ण निष्काम छ। जसमाथि भक्तिको, नीतिको छत्र छ जसले धर्मको कवच लगाएको छ जसलाई भगवान्‌ले पनि मार्न सकेका छैनन्।

बलि राजाको जस्तै यो हो बामन चरित्रको रहस्य, परमात्मा ठूलो होइबक्सिन्छ तर बलि राजाका अगाड़ि बामन अर्थात् सानु बन्नुहुन्छ। सोह्रौं अवतार परशुरामको भयो। यो अवतार आवेशको अवतार हो। अठारौं अवतार रामजीको भयो। यो मर्यादा पुरुषोत्तमको अवतार हो। रामका मर्यादाको पालन गर जसबाट तिम्रो काम मेटिने छ अर्थात् कृष्ण भगवान् भेटिनु हुनेछ। उन्नाइसौं अवतार कृष्णको भयो। 'कृष्णास्तु भगवान् स्वयम्' श्रीकृष्ण स्वयं भगवान् हुनुहुन्छ। राम र कृष्ण एउटै हुन्। मानिसले दिनमा दुइ पटक भगवान् बिर्सिन्छ। दिउँसोको बाह्र बजे भोकले र रात परे पछि कामसुखको संझनाले। यी दुवै समयमा सम्हालिनुपर्छ। बिहान श्रीरामजीलाई स्मरण गर र रातमा श्रीकृष्णलाई। यी दुवै समयले बचाउने छ। रामजीका मर्यादाको पालन गर्नाले

श्रीकृष्ण पुष्टि पुरुषोत्तम पुष्टि अर्थात् कृपा गर्नुहुने छ। सन्त एकनाथजी महाराजले यी दुवै अवतारहरूको सुन्दर तुलना गर्नुभएको छ। रामजी राजमहलमा सवारी भयो र कृष्ण झ्यालखानामा। एकका नाउँको अक्षर सजिलो र अर्काका नाउँको अक्षर जोल्टिएको। पढाउँदाखेरि सरल अक्षर पहिले पढाइन्छ र जोरिएको अक्षर पछिबाट। राम सरल अक्षर हुन्। श्रीकृष्ण जोरिएका अक्षर हुन्। रामजीको मर्यादाको पालन गर तब श्रीकृष्णावतार हुनेछ। जसका घरमा रामजी आउनु हुन्न त्यहाँ श्रीकृष्ण पनि सवारी हुन्न। रामजीको अवतार अर्थात् रामजीको मर्यादाको पालन। यी दुवै साक्षात् पूर्ण पुरुषोत्तमका अवतार हुन्। बाँकी सबै अवतार अंशावतार हुन्। पूर्णअवतार र अंशावतारको रहस्य यस प्रकार छ :—अल्पकालका निमित्त अल्प जीवहरूका उद्धारका लागि जो अवतार हुन्छ त्यो अंशावतार हो र अनन्त कालका निमित्त तथा अनन्त जीवहरूका कल्याणका निमित्त जो अवतार हुन्छ त्यो पूर्णअवतार हो। यस्तो सन्तहरूले मानेका छन्। भागवतमा कथा त भन्नु छ कृष्णजीको तर क्रमैसंग अरू अवतारहरूको कथा सुनाएर मात्र अधिकार प्राप्त गरेपछि श्रीकृष्णको सवारी हुने। यसपछि हरि, कल्कि, बुद्ध आदि अवतार भए। सबै मिलाएर चौबीस अवतार भएका छन्।

परमात्माका चौबीस अवतार, परमात्मा शब्दभित्रबाटै निस्केको हो। (प-५, र-२, मा-४॥, ते-८, मा-४॥) ब्रह्माण्ड पनि ईश्वरको अवतार हो। कुनै-कुनैले ब्रह्माण्डमा ईश्वर देख्छन् कुनैले संसारका सबै पदार्थहरूमा भागवत स्वरूपको दर्शन पाउँछन्। सारा ब्रह्माण्डलाई भगवत् रूप मान्छन्। सबैका द्रष्टा परमात्मा मायाका कारणले दृश्य जस्तो देखिन्छ। स्थूल र सूक्ष्म शरीर अविद्याद्वारा आत्मामा आरोप हुनाले भएको छ। आत्मामा आत्मस्वरूपको ज्ञान द्वारा यो आरोप हट्न सक्यो भने हट्न सकेका वखत ब्रह्म साक्षात्कार हुन्छ अनि मात्र 'इति तद् ब्रह्म दर्शनम्' को सिद्धान्त बुझ्न सकिन्छ।

भगवान् वेदव्यासजीले भागवत चरित्रहरूबाट परिपूर्ण भागवत नाउँको पुराण बनाउनु भएको छ। भगवान् श्रीकृष्ण धर्म, ज्ञान आदि सहित स्वधाम पाल्नुभयो तर यस कलियुगमा अज्ञानरूपी अन्धकारद्वारा मानिस अन्धा भए। त्यस बखत भागवत पुराण प्रकट भएको छ। यो पुराण सूर्यरूप छ। शुकदेवजीले राजा परीक्षित्लाई यो कथा सुनाउनुभएको छ। त्यस बखत म त्यहाँ हाजिर थिएँ। सोही अनुसार म यो पुराण-कथा तपाइँलाई सुनाउँछु।

शौनकजीले सोध्नुभयो—'व्यासजीले भागवतको रचना कुन अभिप्रायले गर्नुभयो र रचना गरिसकेपछि यसको प्रचार कसरी भयो ? आदि काम मलाई सुनाउनुहोस्।'

अतिशय लोभी प्रतिपल ईश्वरको ध्यान गर्छ त्यस्तै ज्ञानी प्रतिपल ईश्वरको ध्यान गर्छ, स्मरण गर्छ। ज्ञानी एक पल पनि ईश्वरबाट अलग हुन सक्दैन। शुकदेवजीको जन्मदेखिनै ब्रह्माकार वृत्ति छ। उहाँ भागवत पढ्न जानुभयो, यो मलाई आश्चर्य लाग्छ। शुकदेवजीको प्रशंसा खूबै गरिएको छ। शुकदेवजीको देव-दृष्टि थियो, देह-दृष्टि थिएन। जबसम्म देह-दृष्टि रहन्छ तबसम्म दुःख रहन्छ। शुकदेवजी नुहाउन लागेका अप्सराहरूको अगाडिबाट निस्किए तापनि निर्विकार

हुनुहुन्थ्यो। एक पटक यस्तो भयो एउटा सरोवरमा अप्सराहरू स्नान गरिरहेका थिए, त्यहाँबाट शुकदेवजी नग्न अवस्थामा बाहिर निस्कनु भयो। अप्सराहरूले पूर्ववत् स्नान गर्दै रहे, कुनै प्रकारको लज्जा अनुभव गरेनन्। लुगा पनि फेरेनन् केही बेरपछि व्यासजी त्यतैबाट निस्कनु भयो, उहाँले लुगा पनि लाउनु भएको थियो, तर व्यासजीलाई देखेर अप्सराहरूले तुरन्तै आफ्ना लुगाहरू लगाए। व्यासजी यस कुरालाई देखेर आश्चर्यमा पर्नुभयो यस्तो किन गरे ? अप्सराहरूसँग यसो गर्नुको कारण सोध्नु भयो। उनीहरूले भने 'तपाईं वृद्ध हुनुहुन्छ, पूज्य हुनुहुन्छ, पितातुल्य हुनुहुन्छ, तर तपाइँको मनमा यो पुरुष, यो स्त्री, यस्तो भेद छ। उता शुकदेवजीको मनमा कुनै यस्तो भेद छैन। शुकदेवजी केवल ब्रह्मज्ञानी मात्र हुनुहुन्न, ब्रह्मदृष्टि राखेर घुम्नु हुन्छ। शुकदेवजीलाई अभेद दृष्टि सिद्ध भइसकेको छ। उहाँलाई यो थाहै छैन यो स्त्री हो वा पुरुष हो।'

सन्तको दर्शन गर्ने मानिस पनि निर्विकारी बन्दछ। शुकदेवजीको दर्शन गरेर अप्सराहरू पनि निर्विकारी बनेका छन्। निष्काम भएका छन्। हामीलाई धिक्कार छ भन्ने कुरा अप्सराहरूलाई मनमा लागेछ यी महापुरुषलाई हेर। यी महापुरुष प्रभु प्रेममा कस्तो बहुलाहा भएका छन्।

जनक राज्यका दरबारमा एक पटक शुकदेवजी र नारदजी पाल्नु भएछ। शुकदेवजी ब्रह्मचारी हुनुहुन्छ र ज्ञानी हुनुहुन्छ, नारदजी पनि ब्रह्मचारी र भक्तिमार्गका आचार्य हुनुहुन्छ। देवै महापुरुष हुनुहुन्छ। तर यी दुइमध्ये श्रेष्ठ को ? जनक राजाले समाधान गर्न सकेनन्। परीक्षा नगरीकन फैसला कसरी गर्नु ? जनक राजाकी रानी सुनयनाले निश्चय गरिन् म दुवैको परीक्षा गर्ने भएँ। सुनयना रानीले दुवैलाई घरमा बोलाइन् र झूलामा बसाइन्। यसपछि सुनयना रानी सिँगारिएर आइन् र झूलामा दुवैजनाको बीचमा बसिन्। यसले नारदजीलाई केही संकोच लाग्यो म बाल ब्रह्मचारी हुँ। म जस्तो तपस्वीको यस स्त्रीसँग स्पर्श भयो र कहीं मेरा मनमा विकार आयो भने ! यस विचारले उहाँ अलिकता पर सर्नु भयो। तर शुकदेवजीलाई भने को छ त्यहाँ, कोही आएर बसेको छ कि भन्ने यसको भानसम्म भएन। उहाँलाई स्त्री-पुरुषको पनि विचार छैन। उहाँ पर पनि सर्नु भएन। रानी सुनयनाले फैसला गरिदिइन् यी दुइमध्ये श्रेष्ठ शुकदेवजी हुनुहुन्छ। उहाँलाई स्त्रीत्व र पुरुषत्वको पनि ख्याल छैन।' स्त्रीत्व र पुरुषत्वको भान जबसम्म जाँदैन तबसम्म ईश्वर पाइनुहुन्न। स्त्रीत्व र पुरुषत्वको भान बिर्सिएपछि मात्र भक्ति सिद्ध भयो भन्ठान। शुकदेवजीलाई स्त्रीमा स्त्रीत्व देखिँदैन। उहाँलाई सबैमा ब्रह्मभाव भएको छ। सबैमा ब्रह्म देखिन्छ। जबसम्म पुरुषत्व र स्त्रीत्व स्मरण हुन्छ तबसम्म काम रहन्छ। जब यो स्मरण जाला, तब काम पनि जान्छ अर्थात् काम मर्दछ। ब्रह्म चर्चा गर्ने मानिस सजिलैसँग पाइन्छन्। तर ब्रह्मज्ञानी सुलभ हुँदैनन्। शुकदेवजी जस्तो दृष्टि राख्ने मानिस सहजै पाइन्नन्।

ब्रह्मदृष्टि राख्नु कठिन छ। यस्ता पुरुषलाई त भागवत पढ्ने आवश्यकता पनि छैन। फेरि किन भागवत पढ्न गए त ? शुकदेवजी भिक्षावृत्तिका निमित्त जब बाहिर निस्कनु हुन्थ्यो तब एउटा गाई दुहुने समयभन्दा बढ़ी अर्थात् छ मिनेटभन्दा बढ़ी एक थलामा कहीं पनि रोकिनु

हुन्नथ्यो। त्यसो भएकाले उहाँले सात दिनसम्म बसेर यो कथा राजा परीक्षित्‌लाई कसरी सुनाउनु भयो ? मैले सुनेको छु राजा परीक्षित् भगवान्‌को बड़ो प्रेमी भक्त हुनुहुन्थ्यो। उहाँलाई श्राप लाग्यो। किन हो यो हामीलाई भन्नुहोस्।

सूतजी भन्नुहुन्छ—

'लौ सुन—द्वापरको समाप्तिको वेला थियो। बद्रीनारायण जाँदाखेरि बाटामा केशव प्रयाग पर्छ। त्यहाँ व्यासजीको आश्रम छ। व्यासनारायण सरस्वतीको किनारामा व्यासाश्रममा बस्नुहन्थ्यो। एक पटक उहाँले कलियुगको दर्शन पाउनुभयो। ५ हजार वर्षपछि संसारमा के हुने हो त्यसको दर्शन भयो। बाह्रौं स्कन्धमा यसको वर्णन गरिएको छ। व्यासजीले जस्तो देख्नुभयो त्यस्तै लेखिदिनुभएको छ। व्यासजीले विचार गर्नुभएको थियो कलियुगका मानिस विलासी होलान्, बुद्धिहीन होलान्। वेद-शास्त्रहरूको अध्ययन गर्न नसक्लान्। त्यसकारण वेदको चार भाग गरियो। वेदहरूको कहिल्यै अध्ययन गरिहाले पनि वेदको तत्त्वको ज्ञान, त्यसको तात्पर्य बुझिने हुन्न। त्यसकारण सत्र-पुराणहरूको रचना गर्नु भो। वेदहरूलाई संझाउनका निमित्त पुराणहरूको रचना गर्नु भो। पुराण वेदहरूको भाष्य हो।'

स्त्री, शूद्र, पतित, द्विजजाति वेद श्रवणका अधिकारी छैनन्। यिनीहरूको पनि कल्याण होस्, यस्तो विचार गरेर महाभारतको रचना भयो। महाभारत सम्पन्न शास्त्र हो। महाभारत पाँचौं वेद हो। 'भा' को अर्थ हुन्छ ज्ञान, 'रत' अर्थात् रचना। ज्ञानमा र भक्तिमा रम्ने कला जसमा बताइएको छ त्यो ग्रन्थ हो भारत। ज्ञानमा जब मन रमिन तब कौरव विघ्न पार्दछन्। धर्मक्षेत्र र कुरुक्षेत्र यो शरीरक्षेत्र हो। धर्म र अधर्मको यसमा युद्ध हुन्छ। महाभारत प्रत्येकको मनमा वा घरमा चलिरहेछ। सद्‌वृत्तिहरू र असद्‌वृत्तिहरूको युद्ध हो महाभारत। जीव धृतराष्ट्र हो। ( जसको आँखा छैन त्यो धृतराष्ट्र होइन ) जसको आँखामा काम छ त्यो अन्धो धृतराष्ट्र हो। 'को अन्धः यो विषयानुरागी' अर्थात् अन्धो को हो ? जो विषयानुरागी छ त्यही। दुःख रूपी कौरव धेरै पटक धर्मलाई मार्न जान्छन्। युधिष्ठिर र दुर्योधन सधैं झगड़ा गर्छन्। दुर्योधन आज पनि आउँछ। प्रभु भजनका निमित्त बिहान ४ बजे भगवान्‌ले बिउँझाउनुहुन्छ। धर्मराजा भन्नुहुन्छ उठ र सत्कर्म गर। तर दुर्योधन आएर भन्छ बिहानी पखको मिठो निद्रा आइरहेछ। सबेरै उठ्ने के काम ? तिमी अहिले आराम गर। तिम्रो के बिग्रन्छ र? धर्म र अधर्म यस्तै प्रकारले अनादि कालदेखि झगड़ा गर्दै आइरहेछन्। दुष्ट विचाररूपी दुर्योधन मानिसलाई उठ्‌न दिँदैन। निद्रा र निन्दामाथि जसले विजय प्राप्त गर्छन् उनले मात्र भक्ति गर्न सकेका छन्। दुर्योधन भनेको अधर्म हो। युधिष्ठिर भनेको धर्मको स्वरूप हो। धर्म धर्मराजजस्तै भएर प्रभुका नजिक लैजान्छन्; अधर्म दुर्योधन मनुष्यलाई संसारतर्फ लैजान्छ। उसको विनाश गरिदिन्छ। यतिका ग्रन्थहरूको रचना गरेर पनि व्यासजीको मनलाई शान्ति भएन। ज्ञानी पुरुषले आफ्नो अशान्तिको कारण आफूभित्रै खोज्छन्। उद्वेगको कारण आफूमै खोज्दछन्। आफ्नो दुःखको कारण बाहिर छैन। तपाईंको दुःखको कारण तपाईंभित्रै छ।

अज्ञान र अभिमान यी दुःखका कारण हुन्। व्यासजी अशान्तिको कारण भित्रै खोज्नहुन्छ। मैले कुनै पाप गरेको छैन र? अज्ञानी पुरुषले भने अशान्तिको कारण बाहिर खोज्दछ। त्यसले बाहिरकै कारणहरूमा अशान्तिको मूल फेला पार्छ।

गरिएका पुण्यहरूलाई मानिस बारम्बार स्मरण गर्छ। तर गरेको पापलाई कोही संझना गर्दैन। पापको कसैले पनि विचार गर्दैन। व्यासजीलाई चिन्ता भयो मेरो हातबाट त कुनै पाप भएको छैन? छैन, छैन म निष्पाप छु। तर मेरो मनमा कुनै न कुनै काम नटुङ्गिएको जस्तो छ भन्ने लागेको छ। मानिसलाई आफ्नो भूल छिट्टै फेला पर्छ। त्यसैले भनेको छ—''कृपा भई तब जानिए, जब दीखे अपना दोष।'' जगतको कुनै पनि जीवको दोष नहेर। आफ्नो मनलाई सुधार जो कसैले तिम्रो भूल देखाए भने त्यसको उपकार नबिर्सनु। व्यासजी ज्ञानी हुनुहुन्छ र पनि आफूलाई निर्दोष मान्नुहुन्न। मानिसको सबभन्दा ठूलो दोष यो हो आफूलाई निर्दोष मान्दछ। निर्दोष एक परमात्मा नै हुनुहुन्छ। ब्रह्माजीको सृष्टि गुण-दोषहरूले रहित छैन। दैवी सृष्टि आसुरी सृष्टि अनादि कालदेखि चलिआइरहेछ। व्यासजी विचार गर्नुहुन्छ मलाई यस्तो सन्त मिलोस् जसेल मेरो भूल मलाई देखाइदेओस्। सत्संग विना मानिसलाई आफ्ना दोषहरूको भान हुँदैन। सत्सङ्गमा मानिसलाई आफ्नो भूल देखिन्छ। व्यासजीको सङ्कल्पद्वारा परमात्माले नारदजीलाई उनका नजिक जाने प्रेरणा दिनुभयो। कीर्तन गर्दै-गर्दै नारदजी त्यहाँ पुग्नु भो। गङ्गाजीलाई आनन्द भयो। महापुरुषसँग भेट हुनाले कथा-गङ्गा प्रकट हुने भइन्। अनेक जीवहरूको उद्धार हुने भो। आज गङ्गाजी शान्त हुनुहुन्छ जसले गर्दा यी दुइ महापुरुषको सत्संगमा विघ्न नपरोस्। यी महावैष्णवहरूले मेरा कृष्णको कथा भन्नु हुनेछ र त्यस कथाद्वारा अनेक जीवहरूको कल्याण हुनेछ। नारदजीले व्यासजीसँग क्षेम कुशल सोध्नुभयो र भन्नुभयो 'म त तपाईंलाई अभिनन्दन दिन आएको थिएँ तर तपाईंलाई चिन्तामा परेको देखेर आश्चर्य भइरहेछ। मलाई लाग्छ तपाईं कुनै गहिरो चिन्तामा हुनुहुन्छ। तपाईं आनन्दमा हुनुहुन्न।' व्यासजीले भन्नुभयो 'तपाईंको परीक्षा साँचो छ। मेरो केही भूल भइरहेछ तर मेरो त्यो भूल मैले बुझ्न सकेको छैन। कृपा गरेर मलाई मेरो भूल संझाइदिनोस्' 'स्नातस्य मे न्यूनमलं-विचक्ष्व।'

'ममा जो अपूर्णता छ, सो विचार गरिदिनुपर्‍यो अर्थात् मलाई भनिदिनुहोस्। मेरो भूल मलाई देखाइदिनुभएमा ठूलो उपकार हुने थियो।' व्यासजीको विवेक-बुद्धि देखेर नारदजीलाई आनन्द लाग्यो। नारदजीले भन्नुभयो—'महाराज, तपाईं नारायणको अवतार हुनुहुन्छ। तपाईंबाट के भूल हुनसक्छ? तपाईं ज्ञानी हुनुहुन्छ। तपाईंको केही भूल भएको छैन। तैपनि तपाईं आग्रह गर्नुहुन्छ भने एउटा कुरा भन्छु। तपाईंले ब्रह्मसूत्रको भाष्यमा वेदान्तको खूबै चर्चा गर्नुभएको छ। आत्मा-अनात्माको पनि बहुतै विचार भयो। योगसूत्रको भाष्यमा योगको बहुत चर्चा भएको छ। समाधिका भेदहरूको निक्कै वर्णन भएको छ। तर धर्म, ज्ञान र योगका आधार श्रीकृष्ण हुनुहुन्छ, यी सबैका आत्मा श्रीकृष्ण हुनुहुन्छ। उहाँका कथाको तपाईंले प्रेमपूर्वक वर्णन गर्नुभएको छैन। तपाईंले भगवान्‌को निर्मल यश पूर्ण रीतिले प्रेमले वर्णन गर्नुभएको छैन। म मान्दछु जसबाट

भगवान् प्रसन्न नहुनुहोला, त्यस्तो शास्त्र र ज्ञान अपूर्ण हुन्छ। कलियुगका जीवहरूको उद्धार निमित्त तपाईंको जन्म भएको छ। तपाईंको यस अवतारको काम अहिलेसम्म तपाईंको हातबाट पूरा हुन सकेको छैन। त्यसैले तपाईंका मनमा खुटको छ।'

ज्ञानी पुरुषले पनि परमात्माको प्रेममा पागल नभएसम्म आनन्द पाउँदैनन्। प्रभुमिलनका निमित्त जो आतुरिँदैन त्यसको ज्ञान कुन कामको ? कलियुगका भोगी जीवले तपाईंको ब्रह्मसूत्र आदि बुझ्ने छैनन्। कलियुगका विलासी मानिसले तपाईंको गहन सिद्धान्त कसरी बुझ्लान् ? तपाईंले त योग आदिको बहुतै चर्चा गर्नुभएको छ, तर भगवान्‌का लीलाहरू र कथाहरूको तपाईंले प्रेमले विस्तारपूर्वक वर्णन गर्नुभएको छैन।

प्रेमविना ज्ञानको शोभा छैन। परमात्माले जसलाई आफ्नो भनी ठान्नुहुन्छ उसलाई मात्र आफ्नो असली स्वरूप देखाउनुहुन्छ। परमात्माले आफ्नो नाउँ प्रकट राख्नुभएको छ तर आफ्नो स्वरूप भने लुकाउनुभएको छ। जब परमात्माका आफ्ना प्यारा भक्त उहाँको बहुतै भक्ति गर्छन् तब परमात्माले उनलाई आफ्ना स्वरूपको दर्शन दिनुहुन्छ। सामान्य मानिस पनि जहाँ प्रेम हुन्छ त्यहाँ आफ्नो स्वरूप प्रकट गर्छ। बाहिरिया मानिसलाई देखेर कसैले पनि मन खोल्दैन। जोसँग प्रेम हुन्छ त्यसलाई तर नसोधे पनि सबै भनिदिन्छ। मानिस परमात्माका साथ प्रेम गर्दैनन्। त्यसैले उसले प्रभुको अनुभव गर्न पाउँदैन। ठूलो ज्ञानी भए पनि जबसम्म उसले परमात्मासँग प्रेम गर्दैन तबसम्म त्यसलाई परमात्माको अनुभव हुँदैन। जुत्तासँग, लुगासँग, पैसासँग प्रेम गर्दछ त्यो कुनै ज्ञानी भनिन्छ ? आजकाल मानिसहरू, पुस्तकहरू पढ़ेर ज्ञानी बन्दछन् तर उनलाई गुरुको सेवा गर्नुपर्दैन। उनलाई ब्रह्मचर्यपालन गर्ने आवश्यकता पर्दैन। श्रीकृष्णका लीलाहरू र कथाहरूको तपाईंले प्रेमसाथ गाउनुभएन र त्यसैले तपाईंलाई दुःख भइरहेछ। यही तपाईंको अशान्तिको कारण हो। ज्ञानको शोभा प्रेमले हुन्छ, भक्तिले हुँदैन। जबसम्म सबैमा भागवत् भाव जाग्दैन भने त्यस्तो ज्ञान कुन कामको ? श्रीकृष्ण प्रेममा पागल भए शान्ति पाइन्छ। तपाईंले प्रेममा पागल भएर कृष्णकथाको परिपूर्ण वर्णन गर्नुभएको छैन। जीवबाट ईश्वरले अरू कुनै कुरा खोज्दैन, केवल प्रेम चाहन्छ। कलियुगका मानिसलाई नुहाउननिमित्त तातो पानी पाइएन भने त्यो रिसाएर बहुलाउँछ। यस्ता मानिसले के योग सिद्ध गर्लान्। जसको भोगमा आसक्ति छ त्यो तन्दुरुस्त हुँदैन। द्रव्यमा जो आसक्त छ त्यसको मन ठीक रहँदैन। यस्ता मानिसबाट योगसिद्ध हुँदैन। चित्तवृत्तिको निरोधलाई योग भन्छन्। यसलाई सिद्ध गर्न मुश्किल छ। कुरा ब्रह्मज्ञानका गरून्, प्रेम पैसासँग गरून्, त्यस्तालाई परमात्मा पाइनुहुन्न। त्यसले आनन्द पाउँदैन। त्यसकारण अब तपाईंले यस्तो कथाको रचना गर्नुहोस् जसले सबैलाई प्रभुका प्रति प्रेम जागेर आओस्। यस्तो दिव्यकथा गर्नुहोस्, यस्तो प्रेमशास्त्र रच्नुहोस् जसद्वारा सब कृष्णप्रेममा पागल बनून्। कथा सुन्नेहरूलाई कृष्ण प्यारा लागून्। संसारको उपेक्षा गर। यस्तो कथा तपाईंले गर्नुभयो भने तपाईंलाई शान्ति हुनेछ।

महाभारतमा श्रीकृष्ण चरित्र छ। त्यहाँ सदाचारलाई महत्त्व दिइएको छ, त्यहाँ प्रेम गौण छ। यस्तो कथा रच्नोस् तपाईंलाई पनि शान्ति मिलोस् र सबै जीवहरूलाई पनि शान्ति मिलोस्। व्यासजीले पनि जबसम्म भागवतशास्त्रको रचना गर्नुभएन त्यहाँसम्म उहाँलाई शान्ति मिलेन। कलियुगमा कृष्णकथा र कृष्णकीर्तनका सिवाय दोस्रो कुनै उद्धारको उपाय छैन। कलियुगमा मानिसहरूको उद्धार दोस्रो साधनबाट हुन सक्दैन। केवल कृष्णाकीर्तन, कृष्णस्मरणले मात्र कलियुगमा मानिसहरूको उद्धार होला। परमात्माको लीलाकथाको वर्णन तपाईंले अति प्रेमपूर्वक गर्नुहोस्। सबै साधनहरूको फल प्रभुप्रेम हो। तपाईं ज्ञानी हुनुहुन्छ। महाराज, म तपाईंलाई आफ्नो कथा सुनाउँछु। म कस्तो थिएँ र कस्तो भएँ।'

व्यासजीलाई विश्वास दिलाउनका निमित्त नारदजी आफ्नै दृष्टान्त दिनुहुन्छ। आफ्नै पूर्वजन्मको कथा सुनाउनुहुन्छ। कथा श्रवण र सत्सङ्गको फल भन्नुहुन्छ। कथा सुन्नाले, सन्तहरूको सेवा गर्नाले जीवन सुध्रिन्छ। म दासीपुत्र थिएँ, तर मैले चार-चार महीना कन्हैयाको कथा सुनें। मैले सत्संग पाएँ र मेरो जीवन दिव्य बन्यो, कृष्णकथाद्वारा मेरो जीवन सुध्रियो। म दासी पुत्र थिएँ, आचार-विचारको कुनै भान थिएन, तर मैले कथा सुनें। मेरो जीवनले पल्टा खायो। यो मेरो सद्गुरुको कृपा थियो। व्यासजी नारदजीलाई भन्नुहुन्छ—'आफ्ना पूर्वजन्महरूको कथा सुनाऊ। नारदजी भन्नुहुन्छ सुन म सात-आठ वर्षको थिएँ। मेरो बाल्यकालमै मेरा पिताजी स्वर्ग हुनुभयो। मेरी आमा दासीको काम गर्नुहुन्थ्यो। म भिल्ल बालकहरूसँग खेल्थें। मेरा पुण्यहरूको उदय भयो। म जुन गाउँमा बस्थें त्यहाँ घुम्ने-फिर्ने साधु आए। गाउँका मानिसहरूले तिनलाई त्यस गाउँमा चतुर्मासभरि बस्नू भने। यस बालकलाई तपाईंको सेवामा सुम्पन्छौं। यसले पूजाको फूल ल्याउनमा मद्दत गर्नेछ। अरू काम पनि गर्ला। विधवाको छोरा हो, प्रसाद पनि तपाईंबाटै लिनेछ। मलाई सन्तहरूको केवल दर्शन मात्र होइन उनीहरूका सेवाको लाभ पनि भयो, जबसम्म कुनै पुरुषको प्रत्यक्ष गर्दैनौ तबसम्म मन-तनबाट वासना जाँदैन। भित्रको विकार जाँदैन। मेरा गुरुदेव सच्चा सन्त हुनुहुन्थ्यो। प्रभुभक्तिमा रङ्गिनुभएको थियो। मलाई सच्चा सन्तको सेवा गर्ने लाभ भयो। अहिले तर सच्चा सन्तहरूको दर्शन पाइँदैन र दर्शन पाए पनि उनका प्रति सद्भाव जागेर आउँदैन। गुरुदेव अमानी हुनुहुन्थ्यो, त्यसैले अरूहरूलाई मान दिनुहुन्थ्यो। उहाँको सङ्गतबाट मलाई भक्तिको रङ्ग लाग्यो। गुरुले मेरो नाउँ हरिदास राख्नुभयो।'

शुकदेवजीले जन्मिनासाथ व्यासजीलाई भन्नुभएको थियो तपाईंसँग मेरो कुनै सम्बन्ध छैन। तपाईं मेरो पिता होइन। मेरा पिता प्रभु परमात्मा हुनुहुन्छ। मलाई जान दिनोस्। तर यो मार्ग सजिलो छैन। यस बाटोलाई सामान्य मनुष्यले अनुकरण गर्न गाह्रो छ। सजिलो बाटो यो हो सबैका साथ प्रेम गर अथवा एक प्रभुका साथ प्रेम गर। आत्मा र परमात्मा एक हुन्। गुरुदेव प्रेमको मूर्ति हुनुहुन्थ्यो, गुरुजी उठ्नुभन्दा अघि म उठ्थें। गुरुजीको सेवाका समयमा म फूल, तुलसी ल्याइदिन्थें, मेरा गुरुजी दुइ पटक दिनमा कीर्तन गर्नुहुन्थ्यो। बिहान ब्रह्मसूत्रको चर्चा गर्नुहुन्थ्यो तर राती सधैं

कृष्णकथा,कृष्ण-कीर्तन गर्नुहुन्थ्यो, कन्हैया उहाँलाई बहुतै प्यारा थिए। मेरा गुरुदेवका इष्टदेव बालकृष्ण हुनुहुन्थ्यो। यहाँ ऋषिले बालस्वरूपको आराधना गर्नु हुन्थ्यो। बालकहरू अति चाँडै प्रसन्न हुन्छन्। बालकृष्ण छिट्टै प्रेम गर्दछन् र चाँडै प्रसन्न हुन्छन्। कन्हैयाका कोही भक्तले उनलाई बोलाउँदा भने कन्हैया कुदेर जान्छन्। म कीर्तनमा जान्थें र कथा सुन्थें। म बहुतै कम बोल्थें। धेरै बोल्ने बानी सन्तहरूलाई मन पर्दैन। वाणीले शक्तिको खर्च नगर अर्थात् कम बोल। मौन होऊ।

सेवा गर्नेलाई सन्त कृपा गर्नुहुन्छ। यी तीनै गुण नारदजी भन्नुहुन्थ्यो ममा थियो। म कोल र भिल्ल बालकहरूका साथ खेल्थें। एक दिन म कथा सुन्न भनी गएँ। मेरा गुरु कृष्णकथाको वर्णन गर्नुहुन्थ्यो, मैले कथामा बाल-लीला सुनें। साना-साना बालक कन्हैयालाई बहुतै प्यारा लाग्छन्। कथा सुनेर प्रभुका प्रति मेरो सद्‌भाव जाग्यो। कृष्णकथा त्यो प्रेमकथा हो। कृष्णकथामा गोपिनीहरूलाई, स्वास्नीमानिसहरूलाई, बालकहरूलाई, सबैलाई आनन्द आउँछ। श्रीकृष्णको कथा यस्तो दिव्य छ जसले सबैलाई आनन्द दिन्छ। श्रीकृष्ण कथामा यस्तो आनन्द आउन लाग्यो जसले मेरो खेल्नु पनि छुटायो।

श्रीकृष्ण कथामा गुरुदेव पागल बंन्नुभएको छ। मनुष्य संसारका पछि पागल हुन्छन् र त्यस दशाबाट मुक्त हुन सक्दैनन्। भगवान्‌का पछि जीव पागल भयो भने जीव शिव एक हुन्छन्। सन्तका आँखाहरू शुद्ध हुन्छन्, पवित्र हुन्छन्। सन्त आँखामा पाप गर्दैनन्। सन्तको आँखामा श्रीकृष्ण विराजनु हुन्छ। सन्तले तीन प्रकारबाट कृपा गर्नुहुन्छ। सन्त जसका पट्टि पटक-पटक दृष्टिपात गर्नु हुन्छ त्यसको जीवन सुध्रिन्छ। माला जपा जुन शिष्यको संझना हुन्छ त्यसको जीवन सुध्रिनेछ। मेरा गुरुले मलाई पटक-पटक हेरिरहनुहुन्थ्यो। गुरुजी भन्नुहुन्थ्यो—यो केटो बड़ो समझदार छ। गुरुजीलाई आनन्द हुन्छ। उहाँ ज्यादै प्रसन्न हुनुहुन्थ्यो।

यो जीव जातिहीन छ तर कर्महीन छैन। सन्तले जसमाथि प्रेमको नजर फिराइदिन्छन् त्यसको कल्याण हुन्छ। एक दिन प्रसाद लिइसकेपछि मैले उहाँको जूठो टपरी उठाउँदै थिएँ। म दासीपुत्र थिएँ। नभनी कसले मलाई खान दिने। गुरुजीले मलाई यस किसिमबाट सेवा गरिरहेको देख्नुभयो। सन्तको हृदय पग्लियो। गुरुजीले सोध्नुभयो 'हरिदास, तिमीले भोजन गऱ्यौ ?' मैले 'अहँ' भनें। गुरुदेवलाई मेरा उपर दया आयो। यो बालक कति बुद्धिमान छ। गुरुदेवले मलाई आज्ञा दिनुभयो टपरीमा मैले महाप्रसाद राखिदिएको छु त्यो तिमी खाऊ। मैले त्यो प्रसाद खाएँ। शास्त्रको आज्ञानुसार गुरुजीको आज्ञा विना उनको पूरा खानुहुन्न। सन्तले जब कल्याणको भावनाले प्रसाद दिनुहुन्छ तब कल्याण हुन्छ। सन्त हृदय पग्लिएपछि बोलाएर दिनुहुन्छ। तब भन्ठान्नु उहाँ प्रसन्न हुनुभयो। मैले प्रसाद लिएँ। मेरा सब पाप नष्ट भए। मलाई भक्तिको रङ्ग लाग्यो। मलाई कृष्णप्रेमको रङ्ग लाग्यो। त्यस दिन म कीर्तनमा गएँ। मलाई नयाँ अनुभव भयो। कीर्तनमा एउटा आनन्द आयो, आनन्दमा म थै थै गरेर नाच्न थालें। अति आनन्दमा देहाध्यास छुट्छ। कीर्तनभक्ति श्रीकृष्णजीलाई अतिशय प्रिय छ। भक्तिको रङ्ग मलाई त्यसै दिन लाग्यो। मलाई राधाकृष्णको अनुभव भयो।

शुकदेवजी भन्नुहुन्छ, नारदजी व्यासजीलाई आफ्नो जीवन-चरित्र सुनाउनु हुन्छ। म कम बोल्थें, त्यसैले मउपर सन्तहरूको कृपा भयो। सेवा गर्दा सावधान हुन्थें। सन्त सेवामा सद्भाव राख्छन्। तर गुरुदेवको मउपर खास कृपा थियो। मलाई वासुदेव-गायत्रीको मन्त्र दिनुभयो। पहिलो स्कन्धको पाँचौं अध्यायको ३७सौं श्लोक यो नै वासुदेव-गायत्री मन्त्र हो। यस वासुदेव-गायत्रीको सदा जप गर।

नमो भगवते तुभ्यं वासुदेवाय धीमहि।
प्रद्युम्नायानिरुद्धाय नमः संकर्षणाय च॥

चार महिना यस्तै प्रकारले गुरुदेवको सेवा गरें। गुरुजीले त्यो गाउँ छोड़ेर जाने दिन आयो। गुरुदेवजी अब पाल्नुहुन्छ भनेर मलाई दुःख लाग्यो। मैले गुरुजीलाई भनें—गुरुजी, तपाईंले मलाई साथै लिएर हिँड्नुहोस्। मलाई नछोड्नोस्। म हजूरको शरणमा आएको छु। म हजूरको भान्सामा सुत्ने गर्नेछु। म हजूरको सानोभन्दा सानो काम पनि गर्नेछु। मलाई आफ्नो सेवामा लिएर हिँड्नोस्। मेरो बेवास्ता नगरिदिनुहोस्। गुरुदेवले भावीले लेखेको कुरा पढेर मलाई भन्नुभयो तिमी आफ्नी आमाको ऋणी छोरा हौ। यस जन्मद्वारा तिमीले उनको ऋण चुकाउनुपर्छ, त्यसकारण आमालाई नछोड़। यदि तिमीले आमालाई छोड़ेर गयौ भने तिमीले अर्को जन्म लिनुपर्नेछ। तिम्री आमाको करुण पुकारले हाम्रो भजनमा बाधा पार्नेछ। तिमी घरमै बस। घरमा बसेर पनि प्रभुको भजन हुनसक्छ। नारदजी भन्नुहुन्छ, तपाईंले कथामा भन्नुभएको थियो प्रभु भजनमा जसले साथ दिन्छ त्यसको मात्र सङ्गत गर। ईश्वरको बाटामा लैजानै सच्चा स्नेही हो। मेरी आमा जो मेरो भजनमा विक्षेप गर्नुहुन्छ भने के मैले आफ्नी आमालाई त्याग्नुभएन ? संसारी आमा-बाबुको यही इच्छा हुन्छ मेरो छोराले बिहा गरोस् र सन्तानको वृद्धि गरोस्। उनलाई यो इच्छा हुँदै हुँदैन जो छोरो ईश्वरमा तन्मय होस्। मेरी आमाले मेरो भजनमा बाधा पार्नुहुन्छ। तपाईंले एक दिन कथामा भन्नुभएको थियो आफ्ना स्नेही जो कथामा विक्षेप गर्छन् त्यस्ता स्नेहीहरू पनि त्याग गरोस्। मीराबाईलाई मानिसहरूले बहुतै त्रास दिए र मीराबाईले आत्तिई सन्त तुलसीदासलाई पत्र लेखिन् म तीन वर्षकी भएदेखि मैले गिरिधर गोपालका साथ बिहे गरेकी छु। यी मेरा सम्बन्धी मलाई दुःख दिन्छन्। मैले अब के गर्नुपर्‍यो ? तुलसीदासले चित्रकूटबाटै पत्र लेख्नुभयो कसौटी सुनको हुन्छ, पित्तलको हुँदैन। तिम्रो यो कसौटी भइरहेछ। ''जाके प्रिये न राम वैदेही, सो छाड़िए कोटि वैरी सम जद्यपि परम सनेही'', जसलाई सीताराम प्यारो लाग्दैन, जसलाई राधाकृष्ण प्यारो लाग्दैन यस्तो यदि साख्खे भाइ छ भने पनि त्यसको सङ्ग छोड़िदिनुपर्छ। दुःसङ्ग सर्वथा त्याग्नै योग्य छ, दुःसङ्ग सर्वथा त्याज्य।

मीराबाईले यो पत्र पढ़ेर मेवाड़ त्यागिदिइन् र वृन्दावन आइन्। भक्ति बढ़ाउनु छ भने मीराबाईको चरित्र बारंबार पढ़। संसारी आमाबाबुले पनि पुत्रलाई संसारकै, ज्ञान दिन्छन्—आमाको सङ्गमा बसें भने भजनमा विक्षेप होला। गुरुजीले भन्नुभयो—तिमीले आमालाई त्याग्छु भनेको कुरा

मलाई ठीक लागेन। भगवान् सबै जान्नुहुन्छ। तिम्री आमाले तिम्रो भजनमा विघ्न गरिन् भने ठाकुरजीले कुनै लीला गर्नु हुनेछ। संभव छ उहाँले तिम्री आमालाई लैजानु हुनेछ वा तिम्री आमाको बुद्धिलाई भगवान्ले सुधारिदिनुहोला। घरमा बस र यस महामन्त्रको जप गर। आमाको अनादर गर्नुहुन्न। जप गर्नाले प्रारब्ध बद्लिन्छ। जपको धारा नटुटोस्, यस कुराको ध्यान राखे। मैले गुरुजीलाई भनें— तपाईं जप गर भन्नुहुन्छ तर म अपढ़ दासीपुत्र हुँ। मैले जप कसरी गर्ने? जपको गन्ती कसरी गरूँला? गुरुदेवजीले भन्नुभयो जप गर्ने काम तिमी गर र जप गन्ने काम श्रीकृष्ण गर्नुहुनेछ। जप तिमीले गरे, गन्छन् कन्हैयाले। जो प्रेमले भगवान्को स्मरण गर्दछन्, उनका पछि पछि भगवान् लाग्नुहुन्छ। मेरा प्रभुलाई अरू कुनै काम छैन। जगत्को उत्पत्ति र संहारको सारा काम मायालाई सुम्पिदिएको छ। परमात्माका नाउँको जसले जप गर्छ, परमात्मा त्यसका पछि-पछि लाग्नुहुन्छ। जप गन्नुपर्ने त होइन। जप गर्‍यौ भने कसैलाई भन्न मन लाग्छ। कसैलाई जपको संख्या भन्यौ भने अलिकता पुण्य गइहाल्छ। पुण्य क्षय हुन्छ। गुरुजीले मलाई वासुदेव गायत्री मन्त्रको बत्तीस लाख जप गर्नू भन्नुभएको छ। बत्तीस लाख जप भयो भने भावीले लेखेको पनि मेटिन्छ। पापको नाश हुनेछ। बाबु, यस मन्त्रको सदा जप गरे। मन्त्रको जप गर्नाले ईश्वरका साथ जीवको सम्बन्ध हुन्छ। रुद्रसँग सम्बन्ध पहिले हुन्छ। यसका विना ब्रह्मको साथ सम्बन्ध हुँदैन। फेरि ब्रह्म साक्षात्कार हुन्छ। रोज यही भावना राख्नु श्रीकृष्ण मेरा साथमै हुनुहुन्छ। श्रीकृष्ण प्रेमको स्वरूप हो। तिम्रो कल्याण गर्नुहुनेछ, बाबु, तिमीले बालकृष्णको ध्यान गर्नू। श्रीकृष्णको बालस्वरूप अति मनोहर छ. बालकलाई थोरै दिए पनि ऊ राजी हुन्छ। त्यसैले गुरुदेवले बाल-उपासना गर्नुभयो। बालस्वरूपको ध्यान गर्ने आज्ञा दिनुभयो। भावनाद्वारा बालस्वरूपको ध्यान गर। मेरा गुरुजीले मलाई छोड़ेर जानुभयो। मलाई बहुतै दुःख लाग्यो। पूर्वजन्मको गुरुको नाउँ लिनासाथ नारदजी रुन थाल्नुभयो।

सच्चा सद्गुरुलाई कुनै स्वार्थ हुँदैन। मैले निश्चय गरें र जप शुरू गरिदिएँ। म लगातार जप गर्थें। जप नगरिकन मलाई शान्ति मिल्दैन थियो। घुम्दै-फिर्दै र स्वप्नमा पनि जप गर्दथें। बिछौनामा सुत्न जानुअघि सधैं जप गर। जपको धारा नटुटोस्। एक वर्षसम्म वाणीले जप गर। तीन वर्ष कण्ठबाट जप गर। तीन वर्षपछि मनबाट जप हुन्छ। यसपछि अजपा जप हुन्छ।

आमालाई यो मन पर्दैन थियो तैपनि मैले बाह्र वर्षसम्म सोह्र अक्षरी महामन्त्रको जप गरें। मानिस जप गर्दा पनि छलकपट थैरै गर्छन्। यसले पुण्यहरू नाश हुन्छन्। आमाको बुद्धि भगवान्ले बद्लिदिनुहुन्छ, यो विचार गरेर आमालाई मैले केही भनिनँ। मैले आफ्नी आमाको कहिल्यै पनि अनादर गरिनँ। त्यसपछि आमा एकदिन गोठमा जानुभयो। त्यहाँ उहाँलाई सर्पले डसिदियो। सूतजी सावधान गराउनुहुन्छ। सर्पले अपराधीलाई टोक्छ। आमाले शरीरलाई त्याग्नुभयो। प्रभुले कृपा गर्नुभयो। 'अनुग्रहं मन्यमानः।' मैले मानें मेरा भगवान्को ममाथि अनुग्रह भएछ। आमाको शरीरको अग्नि संस्कार गरें। मलाई आनन्द भयो। म मातृऋणबाट मुक्त भएँ। घरमा जे-जति थियो मैले

आमाको काममा लगाइदिएँ, मलाई प्रभुमा श्रद्धा थियो। त्यसकारण मैले केही संग्रह गरिनँ। जन्मनुभन्दा पहिलेदेखि मेरा निमित्त आमाको स्तनमा दूध उत्पन्न गरिदिने दयालु भगवान्ले मेरो पोषणको व्यवस्था गरिदिनुहोला। उहाँले किन नगरिदिनुहोला ? परमात्मा विश्वम्भर हुनुहुन्छ। म आफ्नो भगवान्को भएपछि के भगवान्ले मेरो पोषण नगरिदिनुहोला ? मैले केही पनि लिइनँ। लगाएको लुगाले घर त्यागिदिएँ। जसको जीवन केवल ईश्वरका निमित्त छ, त्यसले कहिले पनि संग्रह गर्ने छैन; भगवान् नास्तिकको पनि पोषण गर्नुहुन्छ। नास्तिक भन्दछ म ईश्वर मान्दिनँ; तर मेरा परमात्मा भन्नुहुन्छ—बाबु, तिमीले मलाई नमाने पनि म तिमीलाई मान्दछु। उसको को हुने ? जीवले अज्ञानमा भलै जे चाहोस्, भनोस् तर ठाकुरजी भन्नुहुन्छ तिमी भगवान्का अंश हौ! जो ईश्वरको नियम पालन गर्दैन, धर्मलाई जो मान्दैन यस्ता नास्तिकको पनि परमात्मा पोषण गर्नुहुन्छ। के कन्हैयाले मेरो पोषण नगर्नु होला ?

मैले कहिल्यै भिक्षा मागिनँ तर आफ्ना प्रभुका कृपाले म कहिल्यै भोकै परिनँ, मैले कुनै चीजको संग्रह गरिनँ, तर मेरा भगवान्ले कुनै दिन पनि मलाई भोकै राख्नु भएन। भगवत्-स्मरण गर्दै म घुम्थें। बाह्र वर्षसम्म त मैले अनेक तीर्थहरूको भ्रमण गरें, यसपछि म घुम्दै-फिर्दै गङ्गा नदीको तटमा पुगें। गङ्गा स्नान गरें। यसपछि एउटा पीपलको रूखमुनि बसी म जप गर्न थालें। जप ध्यानका साथ गर्थें, गुरुदेवले आज्ञा गर्नुभएको थियो खूब जप गर्नू। मैले जप छोड़िनँ। गुरुले भन्नुभएको थियो प्रभुले दर्शन दिनुभए पनि जप गर्न नछोड्नु। गङ्गा किनारमा यसरी बाह्र वर्ष बसें।

कन्हैया मेरा साथमा हुनुहुन्छ भनेर चौबीस सालदेखि भावना गर्दै थिएँ। मेरा पूर्वजन्मका पाप धेरै होलान्, यसैले मलाई प्रभुको दर्शन भइरहेको छैन। तर श्रद्धा सम्पूर्ण भएको हुनाले एक दिन प्रभु मलाई दर्शन अवश्य दिनुहुनेछ। भावनामा भावद्वारा मलाई श्रीकृष्ण देखिनुहुन्थ्यो। तर मलाई बालकृष्णको प्रत्यक्ष दर्शन भइरहेको थिएन। आफ्नो श्रीकृष्णको मलाई प्रत्यक्ष दर्शन गर्नु थियो। श्रीकृष्णले मलाई आफ्नो कैले सम्ममा तुल्याउनुहुने हो। कैले मसँग भेट हुने हो। मलाई श्रीकृष्ण-दर्शनको तीव्र इच्छा जागेर आयो। कस्तो असल हुँदो हो मलाई श्रीकृष्णको दर्शन होस्।

मेरो प्रभुले कृपा गर्नुभयो। एक दिन ध्यानमा मलाई सुन्दर नीलो प्रकाश देखियो। प्रकाशलाई हेर्दै म जप गर्थें। त्यहाँ प्रकाश भित्रबाट बालकृष्णको स्वरूप प्रकट भयो। मलाई बालकृष्णको मनोहर स्वरूपको झाँकी भयो। मेरा कृष्णले कस्तूरीको तिलक लाउनुभएको थियो। वक्षस्थलमा कौस्तुभमणिको माला धारण गर्नुभएको थियो। नाकमा मोती फुली थियो। आँखा प्रेमले रसाएको थियो, मलाई जो आनन्द भयो त्यसको वर्णन गर्ने शक्ति सरस्वतीमा पनि भएन। मलाई यस्तो भयो म दौड़िँदै जाऊँ र श्रीकृष्णका पाउमा वन्दना गरूँ। म जसै वन्दना गर्न भनेर गएँ तब श्रीकृष्ण अन्तर्ध्यान हुनुभयो। मलाई लाग्यो मेरा श्रीकृष्णले मलाई किन छोड़ेर जानु भयो ? त्यहाँ मलाई आकाशवाणीबाट आज्ञा भयो, तेरा मनमा सूक्ष्म वासना छँदै छ। जसका मनमा सूक्ष्म वासना रहन्छ, त्यस्ता योगीलाई म दर्शन दिन्नँ। यस जन्ममा अब मेरो दर्शन तिमीलाई हुने छैन। तर तिम्रो

भक्तिबाट म प्रसन्न छु। तिम्रो प्रेमलाई, भक्तिलाई पुष्ट गर्नका निमित्त तिमीलाई दर्शन दिएको हुँ। तर तिमीलाई अझै एक जन्म अरु लिनुपर्ने छ। अहिले तिम्रो धेरै जप बाँकी छ। आगामी जन्ममा तिमीलाई मेरो दर्शन हुनेछ। दृष्टि र मनलाई सुधार। सधैं विचार गर म तिम्रै साथ छु। जीवनको अन्तिम साससम्म जप गर। भजन विनाको भोजन पाप हो। सत्कर्मको समाप्ति हुँदैन। जुन दिन जीवको समाप्ति हुन्छ त्यही दिन सत्कर्मको समाप्ति हुन्छ। त्यसपछि म गङ्गाकिनारामा बसें। मर्नुभन्दा अघिबाट मलाई अनुभव हुनथाल्यो यस शरीरमा म अलग्गै रहेछु। जड़-चेतनको गाँठो फुक्यो। जड़ र चेतनको, शरीर र आत्माको जो गाँठो परेको छ, त्यो गाँठो भक्तिविना फुस्कँदैन, शरीरबाट आत्मा भिन्न छ यो सबै जान्दछन् तर त्यसको अनुभव कसले गर्छ ?

ज्ञानको अनुभव भक्तिद्वारा हुन्छ। सन्त तुकाराम महाराज भन्नुहुन्छ मैले आफ्नै आँखाबाट आफ्नो मरण देखेको छु। आफ्नो आत्मस्वरूपलाई नियालेर हेरेको छु। मन ईश्वरमा लागिरहेर ईश्वर स्मरण गर्दागर्दै शरीरले छोड्यो भने मुक्ति पाइन्छ। मनलाई ईश्वरको स्मरण गराउनलाई जपबाहेक कोही साधन छैन। जब जिब्रोले जप गर्छौं तब मनद्वारा स्मरण गर्नुपर्छ। सारा जीवन जसका पछि लागेको हुन्छ त्यही अन्त्यकालमा संझना हुनेछ। अन्त्यकालसम्म मेरो जप चलिनै रह्यो। जपको पूर्णाहुति हुँदैन, भजनको समाप्ति हुँदैन। शरीरको समाप्तिको साथै भजनको समाप्ति हुन्छ। जीवनको अन्त्यसम्म भजन गरिरहनू। अन्त्यकालमा राधाकृष्णको चिन्तन गर्दै मैले शरीर त्याग गरें। आफ्नो मृत्यु मैले प्रत्यक्ष देखें। मलाई मृत्युको कष्ट भएन। यसपछि म ब्रह्माजीकहाँ जन्में। पूर्वजन्मको कर्मको फल मलाई यस जन्ममा पाइयो। मेरो नाउँ नारद राखियो। पूर्वजन्ममा गरेको भजनले मेरो मन स्थिर भएको छ। मेरो मन संसारपट्टि जाँदै-जाँदैन। अब मेरो मन चञ्चल हुँदैन। अब म सदा परमात्माको दर्शन गर्दछु।

एक दिन म गोलोकधाम गएँ, जहाँ सदा रामलीला हुन्छ। त्यहाँ मैले श्रीराधाकृष्णको दर्शन पाएँ। म कीर्तनमा तन्मय भएँ। श्रीकृष्ण कीर्तनमा मलाई अति आनन्द आयो। प्रसन्न भएर राधाजीले मेरा निमित्त प्रभुसँग सिफारिश गर्नुभयो 'नारदजीलाई प्रसाद दिनुपर्‍यो।' श्रीकृष्णजीले मलाई प्रसाद दिनुभयो। व्यासजीले सोध्नुभयो—'प्रसादमा प्रभुले तपाईंलाई के दिनुभयो ?' नारदजीले भन्नुभयो—'प्रसादमा प्रभुले मलाई यो वीणा दिनुभयो। प्रभुले मलाई भन्नुभयो कृष्ण-कीर्तन गर्दै गर्दै जगत्मा भ्रमण गर र मसँग छुट्टिएका अधिकारी जीवहरूलाई मेरा पास ल्याऊ। संसारप्रवाहमा बगिरहेका जीवहरूलाई मपट्टि ल्याऊ।'

भगवान्लाई कीर्तन-भक्ति अति प्रिय छ। यो वीणा लिई म जगत्मा भ्रमण गर्दछु। नारदका साथ कीर्तन गर्छु। अधिकारी जीवहरूलाई या कोही योग्य शिष्य मिले तिनलाई प्रभुको धाममा लैजान्छु। मलाई बाटामा ध्रुव भेटिए, उनलाई प्रभुछेउ लिएर गएँ। मलाई प्रह्लाद भेटिए, उनलाई पनि प्रभुका पास लगें। यस्ता भक्त भेटिएमा तिनलाई मैले प्रभुकहाँ पुर्‍याएँ। जो कोही भक्त भेटिन्छन् उनलाई प्रभुका सामु लैजान्छु।

सत्संगमा मैले भागवत-कथा सुनें। श्रीकृष्ण कथा सुनें, फेरि मैले कीर्तन गरें र प्रेमलतालाई पुष्ट गरें। अब म जब इच्छा गर्छु तत्क्षणै कृष्ण मलाई झाँकी दिनुहुन्छ। मेरा साथ कृष्ण नाच्नुहुन्छ। सन्त नामदेव जब कीर्तन गर्दथे त्यस समय श्रीविठ्ठलदासजी नाच्दथे। म आफ्नो ठाकुरजीको काम गर्थें। त्यसकारण म उहाँको अति प्रिय थिएँ। कीर्तनमा संसारको भान बिर्सियो भने अनि मात्र आनन्द आउँछ। कीर्तनमा तन्मय भएको मानिस संसारलाई बिर्सिन्छ। कीर्तनले संसार सम्बन्ध छुट्दछ र प्रभुका साथ सम्बन्ध बाँधिन्छ। संसारको ध्यान छोड्ने कोशिश गर। कीर्तनमा आनन्द कहिले आउँछ ? जब जिब्रोले प्रभुको कीर्तन, मनले प्रभुको चिन्तन गरौंला र दृष्टिले प्रभुकै स्वरूप देखौंला अनि आनन्द आउँछ। कलियुगमा नामकीर्तन गर्नाले पाप डढ्दछ, हृदय शुद्ध हुन्छ। परमात्मा हृदयमा अटाउनुहुन्छ। परमात्माको प्राप्ति हुन्छ। त्यसकारण कथामा कीर्तन हुनुपर्छ। कीर्तनविना कथा परिपूर्ण हुँदैन। कलियुगमा स्वरूप-सेवा चाँड़ो फल्दैन। स्मरण-सेवा अथवा नाम-सेवा तुरुन्त फल्दछ। हे व्यासजी! यी सबको मूल संत्सङ्ग हो, सत्सङ्गको ठूलो महिमा छ। जो सत्सङ्ग गर्छ उही सन्त बन्दछ।

श्रीकृष्ण कथाद्वारा मेरो जीवन सुध्रिएको छ। कृष्णकथा सुनेर मलाई सच्चा जीवन पाइएको छ। कथा सुनेर वैराग्य गरी स्वभावलाई सुधार्नू। संयम बढ़ाएर धेरै भजन गरेमा सफलता अवश्य पाइने छ। नारदजी व्यासजीलाई भन्नुहुन्छ ''तपाईं जो मलाई मान दिनुहुन्छ, त्यो सत्सङ्गको मान हो। सत्सङ्गबाटै म मानको योग्य भएको छु। भिल्ल बालकहरूका साथ आवारा घुमनेवाला म सत्सङ्गद्वारै देवर्षि बनेको छु।''

नारदजी दासीपुत्र थिए। साँचो साधु-सन्तको सेवाबाट उनको जीवन सुध्रियो। सन्त स्वयं तीर्थरूप हुन्। सन्त जङ्गम तीर्थ हुन्। पारसमणि फलामलाई सुन बनाउँछ। तैपनि फलामलाई आफू जस्तो बनाउँदैन, तर सन्त आफ्ना संसर्गमा आएकालाई आफैं जस्तो बनाउँछन्—'सन्त करे आपु समाना।' मानिस देव हुनलाई बनाइएको हो। मानिसलाई देव हुनका निमित्त चार गुणहरूको आवश्यकता छ—( १ ) संयम, ( २ ) सदाचार, ( ३ ) स्नेह र ( ४ ) सेवा। यी चार गुण सत्सङ्ग विना आउँदैनन्। सत्सङ्गको फल भागवतमा बताइएको छ।

सत्सङ्गबाट नारदजी दासीपुत्रबाट देवर्षि भए। मनुष्य मायाको दास बनेको छ। सत्सङ्गबाट ऊ यसबाट छुट्कारा पाउन सक्छ। साँचो भक्तिको रङ्ग लाग्छ। फेरि यसलाई प्रभुविना सुख मिल्दैन। नारदजीको यो चरित्र भागवतको बीजारोपण हो। सत्सङ्ग र सेवाको फल देखाउनु यस चरित्रको उद्देश्य हो। त्यसकारण विस्तार गरिएको हो। हामीले यो देखिसक्यौं जपविना जीवन सुध्रिँदैन। दानबाट धनको शुद्धि हुन्छ, ध्यानबाट मनको शुद्धि हुन्छ र शुद्धि स्नानबाट शरीरको हुन्छ। परोपकारबाट पनि मनको मलीनता पूर्णतः धोइँदैन, त्यसकारण ध्यान र जपको आवश्यकता छ।

जप गर्नेवालाको स्थिति कस्तो हुनुपर्छ ? श्रीब्रह्म चैतन्य स्वामीले भन्नुभएको छ 'सहजसुमिरन होतहै, रोम रोम में राम' जपको प्रशंसा गर्दै गीतामा भगवान्‌ले भन्नु भएको छ 'यज्ञानां जपयज्ञोस्मि' ( अ० १९ श्लोक २५ । ) रामदास स्वामीले दासबोधमा लेख्नुभएको छ 'जप गर्नाले चिनाको ग्रह पनि सुध्रिन्छ। एक करोड़ जप गर्नाले तन सुध्रिन्छ अर्थात् आरोग्यता प्राप्त हुन्छ। दुइ करोड़ जप गर्नाले द्रव्य-सुख पाइन्छ अर्थात् धन प्राप्ति हुन्छ। तीन करोड़ जप गर्नाले पराक्रम सिद्ध हुन्छ। यश-कीर्ति पाइन्छ। चार करोड़ जप गर्नाळे सुख प्राप्ति हुन्छ। पाँच करोड़ जप गर्नाले ज्ञान प्राप्ति हुन्छ। छः करोड़ जप गर्नाले भित्रका शत्रुहरूको विनाश हुन्छ। सात करोड़ जप गर्नाले स्त्रीलाई सौभाग्य-सुख पाइन्छ। स्त्रीलाई पति सुख र पतिलाई पत्नीसुख पाइन्छ। आठ करोड़ जप गर्नाले मरण सुध्रिन्छ। अपमृत्यु टर्दछ। मृत्युस्थान सुध्रिन्छ। नौ करोड़ जप गर्नाले इष्टदेवीको झाँकी पाइन्छ। अपरोक्षानुभूति हुन्छ। जुन देवको जप गर्छौं ती देवका सगुण स्वरूपको साक्षात्कार हुन्छ। दस, एघार, बाह्र करोड़ जप गर्नाले संचित प्रारब्ध र क्रियमाण कर्म डढ़ेर जान्छ। यी कर्महरूको नाश हुन्छ। तेह्र करोड़ जप गर्नाले भगवान्‌को साक्षात्कार दर्शन पाइन्छ।'

नारदजी व्यासजीलाई भन्नुहुन्छ 'अब तपाईं यस्तो कथा रच्नुहोस् जसले सुन्नेवालाहरूको पाप डढ़ोस्। उनको हृदय पग्लियोस्। तपाईंले अहिलेसम्ममा ज्ञान-प्रधान धेरै कथा लेख्नुभएको छ। तर अब प्रेम-प्रधान कथा गर्नुहोस् जसले सबका हृदयमा कृष्णप्रेम प्रकट होस्।' कथाको तात्पर्य नारदजीले भन्नुभएको छ—'कथा सुन्नाले प्रभुका प्रति प्रेम जागोस् र संसारका विषयहरूका प्रति विराग जागेर आयो भने कथा सुनेको भन्नु।' नारदजीले व्यासजीलाई यस्तो आज्ञा दिनुभयो 'कृष्ण-प्रेममा लीन भएर कथा रच्नुभयो भने तपाईंको र सबैको कल्याण हुनेछ।' व्यासजीले भन्नुभयो 'तपाईंले मलाई त्यस्तो कथा भन्नुहोस्' नारदजी भन्नुहुन्छ—'तपाईं ज्ञानी हुनुहुन्छ, तपाईंले आफ्नो स्वरूप त बिर्सनुभएको छैन ? तपाईं समाधिमा बस्नुहोस् र समाधिमा जो देखिएला सोही लेख्नुहोस्। बहिर्मुखी इन्द्रियहरूलाई अन्तर्मुखी गर्नाले समाधिले ईश्वरका नजिक पुऱ्याइदिन्छ। ईश्वरका साथ एक हुनु समाधि हो। ईश्वरमा लीन हुनु भनेकै समाधि हो। नारदजी जबसम्म भेटिनुहुन्न, नारायणको दर्शन पाइँदैन। संसारमा आएपछि यो जीवले आफ्नो स्वरूप बिर्सिन्छ। कुनै सन्तले कृपा गरेदेखि जीवलाई आफ्नो स्वरूपको भान गराइदिनुहुन्छ। व्यासनारायणलाई पनि नारदको आवश्यकता परेको थियो। यसपछि नारदजी ब्रह्मलोक जानुभयो। व्यासजीले प्राणायामद्वारा दृष्टि अन्तर्मुख गर्नुभयो। उहाँका हृदय गुफामा बालकृष्णको दर्शन भयो। व्यासजीलाई सबैं लीलाहरूको दर्शन भयो। व्यासजीलाई नारदजीले स्वरूपको भान गराउनुभयो। यसको परिणामस्वरूप व्यासजीले श्री मद्‌भागवतको रचना गर्नुभयो। भागवतमा तत्त्व ज्ञान पनि धेरै छ, तर यसको प्रधान विषय प्रेम हो। अरू पुराणहरूमा ज्ञान, कर्म, आचार, धर्म आदि प्रधान छन्, तर भागवत पुराणमा प्रेम प्रधान छ, भक्ति प्रधान छ।' वाल्मीकि रामायण आचार धर्म-प्रधान ग्रन्थ हो, जबकि तुलसी रामायण भक्ति-प्रधान ग्रन्थ हो। वाल्मीकिजीलाई आफ्नो जन्ममा कथा भन्नलाई तृप्ति भएन। भगवान्‌को मङ्गलमय लीला-कथाको भक्तिपूर्वक वर्णन गर्न बाँकी रहेको हुनाले उहाँले कलियुगमा तुलसीदासजीको रूपमा जन्म लिनुभयो।

'कलि, कुटिल जीव, निस्तार हित वाल्मीकि तुलसी भयो।' वेद स्वीकृत भागवतको यो फल हो। यो त सबैलाई थाहा भएको कुरा हो रूखको बोक्रा तथा पातहरूमा जो रस हुन्छ त्यो भन्दा वृक्षको फलमा विशेष रस हुन्छ। रसपूर्ण यस श्रीमद्‌भागवतरूप फलको मोक्ष नपाएसम्म तपाईंले बारम्बार पान गर्नुहोस्। 'पिवत भागवतं रसमालयं।' ( भा० १. १. ३. ) जबसम्म जीव र ईश्वरको मिलन हुँदैन तबसम्म यस प्रेमको पान गर। ईश्वरमा जबसम्म तिम्रो लय हुँदैन तबसम्म यस प्रेमरसको पान गर। भागवतको आस्वादन गर्ने गर। भागवत रसको पान गर। वेदान्त अधिकारीका निमित्त हो, सबका निमित्त सजिलो छैन। वेदान्तले त्यागको आज्ञा गर्छ। वेदान्त भन्दछ सबै कुरा त्यागेर भगवत्पछि लाग। जब संसारीहरूद्वारा केही पनि छोड़िँदैन। यस्ताहरूको उद्धारका निमित्त कुन उपाय होला ? अँ, छ उपाय। त्याग गर्न सकेनौ भने केही हानि छैन, तर आफ्नो सर्वस्व त ईश्वरलाई समर्पण गर र अनासक्त भएरै त्यसलाई भोग। व्यासजीले ब्रह्मसूत्र बनाउनु भो, योगदर्शनमा भाष्य रच्नु भो, तर उहाँलाई लाग्यो कलियुगका मानव भोग-परायण होलान् र त्यसै कारण उनीबाट यस योगमा प्रवृत्ति हुन नसक्ला। उनका निमित्त करुणा गरेर यो भागवतशास्त्र रच्नु भो। परीक्षित्‌लाई निमित्त बनाएर संसारमा फँसेका मानिसहरूका निमित्त व्यासजीले यो भागवतको कथा रच्नु भयो। भागवत खास गरेर संसारीहरूका निमित्त हो।

संसारीहरूमाथिको करुणाको कारणले गर्दा यस भागवत पुराणको वर्णन शुकदेवजीले गर्नुभएको छ। प्रभु प्रेमको विना सुख्खा ज्ञानको शोभा छैन। भागवतको उद्देश्य नै यही बताउने हो। भक्तिको ज्ञानको शोभा छैन। जब ज्ञान-वैराग्यद्वारा दृढ़ गरिएको हुँदैन तब यस्तो ज्ञानले मरण सुधार्नको साटो संभव छ मरण बिगारोस्। संभव छ यस्तो ज्ञानले अन्त्यकालमा धोका देओस्। मरणलाई भक्तिले सुधार्छ। भक्तिविना ज्ञान शुष्क छ। त्यसले मरण बिगार्दछ। विधि-निषेधको मर्यादा त्यागेका बड़ा-बड़ा ऋषिहरू पनि भगवान्‌को अनन्त कल्याणमय गुणहरूका वर्णनमा सधैं रत्तिइरहन्छन्। यस्तो छ भक्तिको महिमा।

**नैर्गुण्यस्था रमन्ते स्म गुणानुकथने हरेः।**

( भा० २.१.७ )

ज्ञानीलाई अभिमानले सताउँदछ, भक्तलाई होइन। भक्ति अनेक सद्‌गुणहरूलाई ल्याउँछिन्, भक्ति सबै गुणहरूकी जननी हुन्। भक्त नम्र हुन्छ, भक्त विनीत बन्दछ। भागवत्-कथा जुन कथाले पाप पन्साइदिन्छ र प्रभुका प्रति प्रेम जाग्रत गराइदिन्छ त्यही साँचो भागवत-कथा हो। भगवान्‌को कथा र भगवान्‌का स्मरणले हृदयलाई पगाल, उसको मङ्गलमय नामको जप गर। यही मात्र कलियुगमा मुक्ति पाउने बाटो हो। विषयहरूको बन्धन मानिसले छोड्यो भने अनि उसलाई साँच्चिकै आनन्द र सुख पाइन्छ। संयम र सदाचारलाई बिस्तार-बिस्तार बढाउँदै लग्यौं भने भक्तिमा आनन्द पाइने छ। वैराग्यविना भक्ति सफल हुँदैन। आचार-विचार शुद्ध भयो भने भक्तिले पुष्टि पाउनेछ। जीवन विलासमय भयो भने मानिलेऊ भक्तिको विनाश भएको छ।

भागवतशास्त्रले मानिसलाई कालको मुखबाट बचाउँछ। यसले मानिसलाई सावधान गराउँछ। कालको मुखबाट बाँच्नु छ भने कालको पनि काल श्रीकृष्णको शरणमा जाऊ। जसले सर्वस्व भगवान्माथि छोड्छन् उनको चिन्ता भगवान् स्वयं गर्नुहुन्छ। महाभारतको युद्धमा दुर्योधनले छोड़ेपछि भीष्मपितामहले प्रतिज्ञा गर्नुभएको थियो—भोलि म अर्जुनलाई मार्नेछु वा म मर्नेछु। यस प्रतिज्ञाबाट सबै जना आत्तिए, किनभने यो भीष्मपितामहको प्रतिज्ञा थियो। यो सुनेर श्रीकृष्णभगवान्लाई छट्पटी पर्‍यो। राती निद्रा परेन। भीष्मको प्रतिज्ञा सुनेर अर्जुनको दशा के भयो होला भन्ने विचार गरी भगवान् अर्जुनको स्थिति हेर्न आउनुभयो। गएर के देख्नुहुन्छ भने अर्जुन शान्तिपूर्वक गाढ़ा निद्रामा सुतिरहेका छन्। भगवान्ले सोच्नुभयो भीष्मले यस्तो प्रतिज्ञा गरेको छ, भीषण प्रतिज्ञा गरेको छ, तैपनि यिनी शान्तिपूर्वक सुतिरहेका छन्। उहाँले अर्जुनलाई ब्यूँझाउनुभयो र सोध्नुभयो—'तिमीले पनि भीष्मको प्रतिज्ञा सुनेका छौ ?' अर्जुनले भने—'अँ, सुनेको छु।' श्रीकृष्णले भन्नुभयो—'तिमीलाई मृत्युको डर छैन ? चिन्ता छैन ?' अर्जुनले भने—'मेरो चिन्ता गर्ने मेरा स्वामी हुनुहुन्छ। उहाँ जागा हुनुहुन्छ अनि म सुत्दछु। उहाँले मेरो चिन्ता गर्ने हुनाले म किन चिन्ता गरूँ।' यस प्रकार सबै ईश्वरमा छोड़िदेऊ। मानिसको चिन्ता जबसम्म ईश्वरलाई हुँदैन तबसम्म ऊ निश्चिन्त हुँदैन।

प्रथम स्कन्धको यो अधिकार लीला हो। अधिकारविना सन्त भेटिए भने उनीपट्टि सद्भाव जाग्दैन। सन्तहरूलाई खोजी गर्ने आवश्यकता छैन। खोजी गर्नाले सन्त भेटिने होइनन्। केवल प्रभुकृपाबाटै सन्त पाइन्छन्। आखिर जबसम्म मन शुद्ध हुँदैन, तबसम्म प्रभुको कृपा हुँदैन। तबसम्म मन दुर्जन हुनेछ जबसम्म सन्त भेटिँदैनन्। सन्त बन्यौ भने सन्त भेटिने छन्। सन्तले हेर्ने दृष्टि दिन्छन्। संसारका पदार्थहरूलाई हेर्नमा आनन्द छ। तिनको उपभोगमा आनन्द छैन। संसार यो ईश्वरको स्वरूप हो। यस कारण जगत्लाई ईश्वरमय देख।

शुकदेवजी र अप्सराहरूको प्रसंग पहिल्यै भनी सकिएको छ। महाप्रभुजीले वैष्णवको लक्षण बताएका छन्। जसको दर्शनले कृष्णको सम्झना हुन्छ त्यो वैष्णव हो। जसको सङ्गतमा आएपछि प्रभु स्मरण हुनुहुन्छ त्यो वैष्णव हो। अप्सराहरूलाई शुकदेवजीको दर्शनले वैराग्यको उत्पत्ति भयो, कृष्णकथापछि उनीहरू पागल बनेका छन्। जगत्मा सन्तहरूको अभाव छैन तर सत् शिष्यहरूको अभाव छ। जसको अधिकार सिद्ध भएको छ, उसलाई सन्तपुरुष भेटिन्छन्। मानिस जब सन्त बन्छ अनि सन्त भेट्टिइन्छन्। सन्त बन्नुभन्दा अघि सन्त भेटिए भने उसमा सद्भाव बन्दैन। जसको आँखामा ईश्वर छ उसले सबैमा ईश्वरको अनुभव गर्छ। यस जगतमा निर्दोष एक परमात्मा मात्रै हुनुहुन्छ। ईश्वरका सिवाय अरू कोही निर्दोष छैन। सन्तहरूमा कोही एकाध दोष होलान्, किनभने पूर्ण सत्ययुग प्रकट भएपछि यो जीव यस शरीरमा रहन सक्दैन। ईश्वरबाट यो अलग्ग रहन सक्दैन। यो ब्रह्माजीको सृष्टि गुण-दोषले भरिएको छ। जगत्मा सबै प्रकारबाट कोही सुखी हुन सकेका छैनन्। यदि सर्वप्रकारबाट कोही सुखी भयो भने सुखको भान पनि बिर्सिने छ। 'जगे सर्व सुखी असा कोण आहे विचारी मना तुज शोधोनी पाहे।'

संसारका प्रत्येक पदार्थमा दोष छ, र गुण पनि छ। दृष्टिलाई यस्तो गुणमयी बनाऊँ जसले कसैको दोष देख्न नसकौं। जबसम्म तिम्रो दृष्टि गुण-दोषहरूले भरिएको हुन्छ तबसम्म सन्तमा पनि तिमी दोष देख्नैछौ। त्यसकारण 'दृष्टि ज्ञानमयीं कृत्वा पश्येत् ब्रह्ममयं जगत्।' जसको दृष्टि गुणमयी छ त्यही सन्त हो। अभिमान आयो भने पतन हुन्छ। सदा दीनता आओस् त्यसको खाँचो छ। संभव छ ईश्वरले पनि सन्तमा एकाध दोष आफ्नो कामका निमित्त राख्ता हुन्। संभव छ ईश्वरले पनि एकाध दोष आफ्ना भक्तमा रहन दिँदा हुन् जसले गर्दा आफ्ना भक्तहरूमा कसैको आँखा नलागोस्। बालकको शृंगार गरेर अरूको नजर नलागोस् भनेर गालामा गाजलको टीका जस्तो लाइदिन्छन्। मानिसमा जब कुनै दोष हुँदैन उसका मनमा अभिमान आउँछ ( अब मेरो दोष सिद्धियो )। आफ्नो दृष्टिलाई गुणमय बनाऊ। कसैको दोषलाई नहेर। कसैको पापको विचार नगर या वाणीद्वारा ती पापहरूको उच्चारण नगर्नु। सन्त हुन, के घर छोड्नु छ? घर छोड्ने आवश्यकता छैन। घर छोड्नाले मात्र कोही सन्त बन्दछ—यस्तो होइन। घरमा बसेरै महाराज सन्त एकनाथ, गोपिनीहरू आदिले प्रभुलाई प्राप्त गरेका हुन्। गेरुवा-लुगा लाएर मात्र कोही सन्त भएका छैनन्। लुगा फेर्ने काम छैन। कलेजा बदल्नुपर्ने जरूरी छ। त्यसका निमित्त मनलाई बदल्नु आवश्यक छ।

मनको नोकर नबन, मनलाई नोकर बनाऊ। परीक्षित् राजाले मनलाई सुधारे। त्यसकारण उनलाई शुकदेवजी भेटिनुभयो। सबै छोड्ने आवश्यकता छैन। सबै छोड्दाखेरि निवृत्तिका समयमा इन्द्रियहरूले धेरै कष्ट दिन्छन्। संसारमा जसले लक्ष्यलाई याद राख्छ त्यही सन्त हो। मनुष्य जीवनको लक्ष्य हो परमात्मासँगको मिलन। यो 'यस' लक्ष्यका निमित्त प्रतिक्षण सावधान हुन्छ त्यही सन्त हो। आत्मा यो मनको साक्षी हो, द्रष्टा हो। जसले आफ्नो मन सुधारेको छ त्यो सन्त हो। मनलाई सुधार्‍यौ भने तिमी सन्त बन्नेछौ। मनलाई सुधार्ने आवश्यकता छ। जगत् बिग्रिएको छैन। आफ्नो मन बिग्रिएको छ। मनमाथि विश्वास नगर। मनमा अंकुश राख। जुन दिन मन शुद्ध छ, चरित्र पनि शुद्ध छ। यस्तो साक्षी तिम्रो आत्माले दियो भने मान तिमी सन्त हौ। मनलाई सुधार्ने अनेक उपाय छन् जो शास्त्रहरूले बताएका छन्। मनलाई मृत्युको डर देखायौ भने मन सुध्रिन्छ। मृत्युको स्मरणले मन सुध्रन्छ। मृत्युलाई बिर्सिएमा मन बिग्रन्छ। परीक्षित् राजाले जब सुने सातौं दिन मर्ने भएको छु भनेर, सुन्नासाथ तुरुन्त विलासी जीवनको अन्त्य आइहाल्यो। अब विलासी जीवन विरक्त जीवन भएको छ। परीक्षित्‌लाई मृत्युको डर लाग्यो, अनि उनको जीवन सुध्रियो। मृत्युको दुःख भयंकर हुन्छ। जीवले शरीर छोड्छ त्यस समयमा हजारौं बिच्छीले एकसाथ टोके जस्तो वेदना हुन्छ।

जन्म दुःखं जरा दुःखं जाया दुःखं पुनः पुनः।
अन्त कालं महादुःखं तस्मात् जागृहि जागृहि॥

जन्म दुःख हो, वृद्धावस्था दुःखमय हो र स्त्री ( स्त्री-पुत्रादि कुटुम्बजन ) दुःखरूप हुन् र अन्त्यकाल पनि बड़ो दुःखद हो। त्यस कारण 'जाग'—'जाग'। यस अन्त्यकाललाई सधैं स्मरण गर। नित्य विचार गर यदि आज यमदूत मलाई समात्न आए भने म कहाँ जाउँला, नरकमा, स्वर्गमा या बैकुण्ठमा। मृत्युको निवारण शक्य छैन भने पाप केका निमित्त गर्छौ ? कोही-कोही त बहुतै बुद्धिमान बन्दछन्। दुइ किलो सागपात लिनुपर्‍यो भने सारा बजार घुम्छन्, विचार गर्छन् करेला लिउँ कि घिरौंला ? जसको विचार गर्नुपर्ने आवश्यकता थियो त्यसको त विचार भएन र साग-पातको विचार गरिरहेछन्। मृत्युलाई सधैं संझ, मृत्युको भय भयो भने तिम्रो पाप दूर हुनेछ र जुन दिन तिम्रो पाप दूर हुनेछ तब संझ तिमी सन्त भयौ।

पाप-पुण्यका अनेक साक्षी छन्। सूर्य, चन्द्र, पृथ्वी, वायुदेव सब साक्षी हुन्। मेरा भगवान्‌का अनेक सेवक छन्। तिमी जहाँ जान्छौ, ती साथै आउँछन्। मनुष्य यो भन्ठान्दछ जो म पाप गर्छु त्यसलाई कसैले देख्दैन। हे भाइ ! एकान्त जस्तोसुकै भए पनि त्यहाँ वायु छ र वहाँ पनि तिमीभित्र परमात्मा विराजमान छन्। ''यद्यपि लोके मरणं शरणं तदपि न मुञ्चति पापाचरणम्।'' आखिर मानिस यस लोकमा मरणको शरणमै जान्छ भने फेरि किन पापको आचरण छोड्दैन। शङ्कराचार्य स्वामी भन्नुहुन्छ मानिस यो जान्दछ एक दिन मर्नु छ, यो सबै छोड़ेर एक दिन जानु छ, यस्तो भएर पनि ऊ पाप किन गर्छ। मलाई यस कुराको आश्चर्य लाग्छ; त्यसकारण आफ्नो जीवलाई सम्हाल।

परीक्षित्‌को अधिकार सिद्ध भएपछि शुकदेवजी त्यहाँ आउनुहुन्छ। शुकदेवजीलाई निम्ता दिनु परेन। शुकदेवजी यस्तो हुनुहुन्थ्यो कसैले निम्ता दिएमा आइहाल्ने। राजाको जीवन बदि्लएको छ। शुकदेवजीले जब यो थाहा पाउनु भयो परीक्षित् राजा अब राजा रहेनन्, महर्षि भएका छन् अनि वहाँ आउनुभयो। राजर्षि र ऋषि एक हुन्। राजा जबसम्म महलहरूमा विलासी जीवन बिताउँथे तबसम्म शुकदेवजी आउनु भएन, तर तक्षकका डरले संसार छुट्यो भने तुरुन्त शुकदेवजी आउनुभयो। राजा भएका वेलामा शुकदेवजी कथा भन्न जानुभएको भए राजाले भन्थे—'तपाईं आउनु भएछ ठीक गर्नुभयो। एक घण्टा कथा भन्नुहोला र विदा लिनुहोला। मेरो धेरै काम छ।' परीक्षित् राजालाई विश्वास थियो अब सात दिनपछि, मलाई मर्नु छ। मलाई आफ्नो यो खबर पनि छैन। जीवन पानीको फोका हो। पानीको फोकालाई फुट्न बेर लाग्दैन। यस्तै प्रकारले जीवनको अन्त्य आउन पनि बेर लाग्दैन।

प्रथम स्कन्ध अधिकार लीलाको हो। श्रीमद्‌भागवतको संपादनको अधिकारी को ? यो ज्ञान दिने अधिकारी को ? इत्यादि बताइएको छ। पहिला स्कन्धमा तीन प्रकरण छन्—उत्तमाधिकार, मध्यमाधिकार र कनिष्ठाधिकार। शुकदेवजी र परीक्षित् उत्तम वक्ता-श्रोता, नारद र व्यास मध्यम वक्ता-श्रोता र सूत-शौनक कनिष्ठ वक्ता तथा श्रोता हुन्। समाजलाई सुधार्ने इच्छा गर्दा अनेक पटक प्रभुभजन, प्रभुमिलनमा बाधक हुन्छ। अरूलाई सुधार्ने भावना गर्दा प्रभुभजनमा विघ्न पर्न आउँछ। अरूलाई सुधार्ने झंझटमा तिमी नपर, तिमी आफ्नो जीवन सुधार। कथा भन्दाखेरि शुकदेवजीलाई थाहै थिएन कि मेरो कथा सुन्नलाई सामुन्ने को बसेका छन्। शुकदेवजीको कथाले

धैरैको जीवन सुध्रिन्छ, तर यसको विचार शुकदेवजी गर्नुहुन्न। शङ्कराचार्यजीले भन्नुभएको छ ब्रह्मज्ञानी महात्माले एक क्षण पनि ब्रह्मचिन्तन छोड्न सकेकै हुँदैनन्। यस्तो दशा शुकदेवजीको छ। सोह्र आना वैराग्य भएन भने दृष्टि ब्रह्माकार हुँदैन। जगत्मा ब्रह्मज्ञानी पाउन सकिन्छ तर ब्रह्म दृष्टि राखेर विचार गर्ने शुकदेवजी जस्तो पाइँदैन।

भन्नु र गर्नु एक नभएसम्म र आचरण पनि एक नभएमा शब्दमा शक्ति आउँदैन। ''आँधीं केलें मग सांगितले'' रामदास स्वामीले भन्नुभएको छ—मैले गरेको छु, मैले अनुभव गरेको छु अनि तपाईंलाई भनेको हुँ। शुकदेवजी महाराजले भन्नुभएको छ उहाँले जीवनमा लागू गराएर भनेको छ। शुकदेवजी उत्तम वक्ता हुनुहुन्छ किनभने उहाँको वाणी र आचरण एक छ। त्यसैले कुनै सन्तले भनेका छन् ''बोले तैसा चाले, त्याची वन्दाविता पाउलै।'' यस्तो व्यक्ति वन्दनीय छ। एक पटक एउटी आमाले आफ्नो छोरालाई सन्त एकनाथकहाँ लगिन् र भनिन् 'मेरो छोरालाई सख्खर खाने बानी बहुतै बढ्यो। अब उसले यो बानी छोड्दैन। यसले सख्खर खान छोड़िदेओस्, यस्तो आशीर्वाद बक्सियोस्।' महाराजले त्यसवेला आशीर्वाद दिनुभएन, कारण उहाँ स्वयं सख्खर खानुहुन्थ्यो। ऊहाँले ती आमालाई भन्नुभयो 'केही दिनपछि छोरालाई लिएर आउनू। त्यसवेला आशीर्वाद दिनेछु, आज होइन।' उहाँले स्वयं सख्खर खान छोड़िदिनुभयो। विट्ठलनाथ कृपा गर्नुहोस्। आजदेखि मैले सख्खर खान छोड़िदिएँ, जसले गर्दा मेरा कुरामा शक्ति आओस्।'' फेरि केही दिनपछि ती माता आफ्नो छोरो लिएर आइन्। महाराजले त्यसवेला त्यो बालकलाई आशीर्वाद दिनुभयो।

प्रसादको प्रसादी बनाउँछन्, अजीर्ण होउञ्जेल प्रसाद लिनुहुँदैन। भगवान् योगी र भोगी पनि हुनुहुन्छ तर यो जीव भोगी छ योगी छैन। त्यसकारण भगवान्ले छप्पन्न भोगको भोग लगाए पनि केही हर्जा छैन, तर हामीबाट भने यस्तो हुँदैन। त्यागबाट अलौकिक शक्ति आउँछ। विषय-भोग हाम्रो हातबाट निस्कियोस्, छुटेमा नता दुःख हुन्छ न विषय प्राप्त हुन्छ। हामीले त्यसलाई छोड़िदियौं भने आनन्द हुन्छ। शुकदेवजीमा सोह्र आना वैराग्य छ, उहाँ उत्तम हुनुहुन्छ।

महाप्रभुजीले भन्नुभयो भागवतमा समाधिभाषा मुख्य हो, ईश्वरको ध्यानमा जसलाई अलिकति पनि आनन्द हुन्छ उसलाई भागवतको अर्थ छिटै नै बुझिने हुन्छ। व्यासजीले एक-एक लीलाको प्रत्यक्ष दर्शन गर्नुभएको छ। व्यासजीले अन्तर्दृष्टिबाट यो सबै देख्नुभएको छ। भगवान्को स्वरूप अलौकिक छ, हाम्रो आँखा लौकिक छ। त्यसकारण लौकिक आँखाले अलौकिक ईश्वरलाई देख्न सक्तैन। बाहिरको आँखा चिम्लिएपछि भित्रको आँखा खुल्दछ, तब परमात्माको दर्शन हुन्छ।

सूतजी भन्नुहुन्छ—'व्यासजीले अठार हजार श्लोकहरूको यो भागवत ग्रन्थ बनाउनुभयो। व्यासजीलाई लाग्यो अब मेरो अवतार काम पूर्ण भयो, जो मेरो भागवतको आश्रय लेला त्यसलाई कलिको डर हुने छैन। तर व्यासजीलाई एउटा चिन्ता पर्न गयो ग्रन्थ त मैले बनाइदिएँ, तर यसको प्रचार कसले गर्ला? यस ग्रन्थमा मैले सबै कुरा भरिदिएको छु। यो भागवत-प्रेम शास्त्र हो।

मायाका साथ, संसारका साथ गर्नेले भागवतशास्त्रको प्रचार गर्न सक्तैन। जन्मदेखि नै जसलाई मायाको संसर्ग भएको छैन त्यसैले यो ग्रन्थको प्रचार गर्न सक्नेछ। भागवत् परमहंसको संहिता हो। श्रीकृष्ण त महापरमहंस हुनुहुन्छ। प्रह्लाद, भरत, ऋषभदेव आदि सबै परमहंस हुन्।' 'त्यस कारण निर्विकारीले मात्र यस ग्रन्थको प्रचार गर्न सक्छ। धेरै विचार गरेपछि व्यासजीलाई लाग्यो यस्तो योग्य त मेरो छोरो नै छ। शुकदेवजीलाई रम्भाले पनि विचलित गर्न सकिनन्।'

नारीहरूमा श्रेष्ठ रम्भा मात्र हुन्। यस्ती रम्भाले शुकदेवजीलाई चलायमान गर्न आइन्। 'वृथा गतं तस्य नरस्य जीवनम्।'

शुकदेवजीले भन्नुभयो—विषयभोगीको जीवन वृथा हुँदैन। तर सुन देवी, कसको जीवन वृथा हुन्छ—

नारायणः पंकज लोचनः प्रभुः
केयूरहारं परिशोभमानः।
भक्त्या युतो-येन सुपूजितो नहि
वृथा गतं तस्य नरस्य जीवनम्॥

नीलकमल जस्तो सुन्दर जसको आँखा छ, जसका आकर्षण अङ्गहरूमा केयूर, हार आदि अलङ्कार शोभायमान छन्, यस्ता सर्वान्तरयामी नारायण प्रभुका चरण-कमलमा, जसले भक्तिपूर्वक स्वयंलाई अर्पण गरेर यस आवागमनको चक्रलाई नष्ट गरेको छैन, यस्ता मानिसहरूले मनुष्य-देह धारण गर्नु व्यर्थ नै छ।

श्रीवत्सलक्ष्मीकृतहृत्प्रदेशस्तार्क्ष्यध्वजश्चक्रधरः परात्मा।
न सेवितो येन क्षणं मुकुन्दो वृथा गतं तस्य नरस्य जीवनम्॥

जसको वक्षस्थलमा लक्ष्मीजी शोभायमान हुनुहुन्छ, जसको ध्वजामा गरुड़जी राज गर्नु भएको छ, जो सुदर्शनचक्रधारी हुनुहुन्छ यस्ता परमात्मा मुकुन्द भगवान्‌को जसले क्षणमात्र पनि स्मरण गरेको छैन, यस्ता मानिसहरूको जीवन वृथा भन्ठान।

रम्भाले जब नारीदेहको अतिप्रशंसा गरिन् तब शुकदेवजीले रम्भालाई भन्नुहुन्छ—'स्त्रीको शरीर यति सुगन्धमय र सुन्दर हुन्छ भनेर मैले आज मात्र थाहा पाएँ। मलाई पहिले थाहै थिएन स्त्रीको शरीर यति सुन्दर हुन्छ। परमात्माको प्रेरणाले यदि अब मलाई जन्म लिनुपऱ्यो भने म तिमीजस्तै आमा रोज्ने छु।'

शुकदेवजी जन्मैदेखि निर्विकारी हुनुहुन्छ। जुन पुत्रले जन्मको समयमा पितालाई भनेका थिए 'तपाईं मेरो पिता हुनुहुन्न र म पनि हजूरको छोरो होइन।' यस्ता शुकदेवजी ( पुत्र ) घर आउन् पनि कसरी ? शुकदेव जन्मसिद्ध योगी हुनुहुन्छ। जन्म भयो, तुरुन्तै तपश्चर्याका निमित्त वनतर्फ

उहाँले प्रयाण गर्नुभयो। शुकदेवजी सदा ब्रह्मचिन्तनमा लीन रहनुहुन्थ्यो। 'उनलाई वनबाट बोलाऊँ कसरी, उनी वनबाट घर आए भने म उनलाई भागवत शास्त्र पढाउँथें र फेरि उनले यसको प्रचार गर्ने थिए'—व्यासजीलाई यस्तो विचार आयो। श्रीकृष्णाका स्वरूपको वर्णन हुन सक्तैन। भगवान्का स्वरूपको कसले पार पाएको छ? योगीहरूका मनले ती प्रभुको केही अनुभव गर्न सकेको छ। कारण यो हो—

यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह।
आनन्दं ब्राह्मणो विद्वान् न विभेति कदाचन॥

अर्थात् त्यसको पार पाउनलाई जाने मन पनि वाणीसहित फर्केर आउँछ। श्रीकृष्णाको स्वरूप अद्‌भुत छ। योगीहरूको चित्तलाई पनि आकर्षित गर्छ। यस्तो त्यो स्वरूप छ। ती कृष्णले शुकदेवजी जस्तो योगीलाई किन खिँच्नुहुन्थ्यो? शुकदेवजी निर्गुण ब्रह्मको चिन्तनमा लीन हुनुहुन्थ्यो। त्यसबाट उहाँको चित्तलाई हटाउन, सगुण ब्रह्मका तर्फ त्यसलाई खिँचेर ल्याउन श्रीकृष्णलीलाको श्लोक सुनाउनुपर्छ। ती श्लोकहरूद्वारा कोही अरू जादूको प्रभाव पर्ला भनी श्री व्यासजीले स्वीकार गर्नुभयो। व्यासजीका शिष्यहरूलाई जङ्गलमा, जब तिनीहरू कुश र समिधा लिन जान्थे, तब हिंस्रक पशुहरूको डर लाग्थ्यो। उनीहरूले यो कुरा व्यासजीलाई भने। व्यासजीले भन्नुभयो—'जब तिमीहरूलाई डर लाग्ला त्यस वेलामा यस भागवतका श्लोकहरूको पाठ गर्ने गर्नू, श्रीकृष्ण मेरा साथै हुनुहुन्छ, यस्तो विचार गर्नू। ईश्वर सदा हाम्रा साथमा हुनुहुन्छ यस्तो विचार गरेर अनुभव गर्‍यौ भने तिमीहरू निर्भय बन्नेछौ। राधारमण श्रीकृष्णको स्मरण गर।' यसपछि जब ऋषिकुमार वनमा जान्थे 'बर्हापीड़म्' आदि श्लोक भन्थे। यो सुनेर वनमा हिंस्रक-बाघ आदि सबै पशुले वैमनस्य बिर्सिदिन्थे र शान्त हुन्थे। पशुहरूका मनमा पनि यी श्लोकहरूको प्रभाव पर्दछ। तर दुःखको कुरा यो छ आज मानिसहरूमा पनि यसको प्रभाव पर्दैन। जुन मन्त्रहरूले पशुहरूको आकर्षण गर्‍यो भने तिनै मन्त्रहरूले शुकदेवजीलाई आकर्षण कसरी नगर्ला? देहको भान जबसम्म बिर्सिंदैन तबसम्म देवको दर्शन हुँदैन। शुकदेवजी ज्योतिर्मय ब्रह्मको चिन्तन गर्नुहुन्छ। उहाँलाई देहाभिमान छैन। शुकदेवजी परमहंसहरूका आचार्य हुनुहुन्छ। त्यसैले ब्रह्मचिन्तन गर्नुहुन्छ। उहाँको मनलाई आकर्षण गर्नका निमित्त व्यासजीले युक्ति सोच्नुभयो। व्यासजीले शिष्यहरूलाई भन्नुभयो 'शुकदेवजी जुन वनमा समाधिमा बस्नुभएको होला, त्यहाँ तिमीहरू जानु र उहाँले सुन्ने गरेर यी दुइ श्लोकहरूको गीत गाउनू। यी दुइ श्लोक उहाँलाई सुनाउनू।' शुकदेवजीको हृदय गंगाजल जस्तो शुद्ध छ। जल शुद्ध र स्थिर भयो भने त्यसमा शुद्ध प्रतिविम्ब पर्छ। हाम्रो हृदयरूपी भित्तामा धेरै फोहोर लागेको छ। यसलाई बिलकुल सफा गर्नु जरूरी छ। यसलाई सफा गर अनि परमात्माको प्रतिविम्ब त्यसमा पर्नेछ। आफ्ना हृदयमा हजारौं जन्महरूको मैलो भरिएको छ। त्यसकारण हृदयको भित्तालाई खूब माझ अनि यस मैलोलाई हटाऊ। मैलोलाई हटाएपछि परमात्माको प्रतिविम्ब त्यसमा पर्नेछ। त्यसकारण शुद्ध बन। शब्दबाट रूपको दर्शन हुन्छ। नाम सृष्टि पहिले अनि रूप

सृष्टि त्यसका पछि। शिष्य आज्ञा पाएर त्यस वनमा गए। शुकदेवजीको चित्त आकर्षित गर्नलाई शिष्य श्लोकहरूको गाना गर्न थाले। शुकदेवजी स्नान-सन्ध्या गरेर समाधिमा बस्ने तयारीमा हुनुहुन्थ्यो। समाधिमा बसिसकेपछि समाधि लागेका खण्डमा उहाँले यो श्लोक सुन्नुहुन्न भन्ठानेर शिष्यहरूले तुरुन्तै गाउन थाले—

> बर्हापिडं नटवरवपुः कर्णयोः कर्णिकारं
> विभ्रद्वासः कनककपिशं वैजयन्तीं च मालाम्।
> रन्ध्रान् वेणोरधरसुधया पूरयन् गोपवृन्दैः
> वृन्दारण्यं स्वपदरमणं प्राविशद् गीतकीर्तिः॥
>
> भा. १० - २१ - ५ ( वेणुगीत )

श्रीकृष्ण गोपालहरूका साथ वृन्दावनमा प्रवेश गरिरहनुभएको छ। उहाँले मस्तकमा मुजुरको प्वाँख धारण गर्नुभएको छ। कानमा कर्णिका पहेंला-पहेंला फूल, शरीरमा पहेंलो पीताम्बर र गलामा पाँच प्रकारका सुगन्धित पुष्पहरूले बनेको वैजयन्ती माला पहिरनुभएको छ। रङ्गमंचमा अभिनय गर्ने श्रेष्ठ नटजस्तै क्या सुन्दर वेष छ ! बाँसुरीका छिद्रहरूलाई तिनीले आफ्नो अधरामृतद्वारा भरिरहेछन्। उनका पछि-पछि गोपबालक यिनको लोकपावन कीर्तिको गान गरिरहेछन्। यस प्रकार बैकुण्ठभन्दा पनि श्रेष्ठ यो वृन्दावन धाम यिनका चरण चिह्नहरूले ज्यादै स्मरणीय बनेको छ। मयूर श्रीकृष्णलाई प्यारो लाग्छ। मयूर कामसुख इन्द्रियहरूद्वारा भोग्दैन। संसारको काम सुखलाई बिर्सनेले नै ईश्वरको दर्शन गर्न सकेको छ। प्रभुका साथ मैत्री गर्नु छ भने 'काम' सँगको मैत्री छाड्नुपर्छ। ज्ञानी निधारमा दृष्टि स्थिर गरेर त्यहाँ ब्रह्मको दर्शन गर्छन् र वैष्णव हृदयमा श्रीकृष्णको दर्शन गर्छन्। शुकदेवजीले श्लोक सुन्नुभयो। श्रीकृष्णको स्वरूप मनोहर लाग्यो। शुकदेवजीलाई ध्यानमा अति आनन्द आयो आहा ! मेरा प्रभु ! उहाँले तुरुन्तै निश्चय गर्नुभयो निराकार ब्रह्मको चिन्तन नगर्ने। अब सगुणसाकारको चिन्तन गर्ने, तर विचार गर्नुभयो सगुण ब्रह्मको सेवामा सबै वस्तुहरूको आवश्यकता पर्छ। कृष्णले मिस्त्री-नौनी माग्लान्। म यो कहाँबाट ल्याउँला ? मसँग केही छैन। म निर्गुण ब्रह्मको उपासक हुँ। मैले त लँगौटीलाई पनि त्यागिदिएको छु। यी कृष्णले धेरै माग्न थाले भने म ती सबै कहाँबाट ल्याउँला ? यशोदाको घरमा नौनीको के कमी थियो ? तैपनि कृष्ण भन्दथे—'आमा, मलाई घरको नौनी मीठो लाग्दैन। मलाई बाहिरको नौनी मीठो लाग्छ।' गोपिनीहरूको नौनीमा होइन, गोपिनीहरूको प्रेममा मीठोपन थियो। गोपिनीहरूको प्रेममा स्वाद थियो। यी कृष्ण तर मागेर प्रेमसहित भोग लाउँछन्। उनले मलाई नौनी ल्याऊ, मिस्त्री ल्याऊ भन्लान् तब म ती सबै कहाँबाट ल्याऊँला ? त्यसकारण साकार ब्रह्मको चिन्तन गर्दिनँ। यस निर्गुण ब्रह्मको मात्र चिन्तन गर्छु। निराकार ब्रह्मलाई केही दिनु पर्दैन, त्यसकारण मलाई यही उत्तम छ। केही वस्तुको आवश्यकता छैन ?' यस प्रकार शुकदेवजी विचार गरिरहनुभएको थियो त्यहाँ व्यासजीका शिष्यहरूले दोस्रो श्लोक गाउन शुरू गरे।

**अहो बकीयं स्तनकालकूटं जिहान्सयापायदप्यसाध्वी।**
**लेभे गतिं धात्र्युचितां ततोऽन्यं कं वा दयालुं शरणं ब्रजेम॥**

आश्चर्य छ दुष्ट पूतनाले स्तनहरूमा विष भरेर जसलाई मार्नको इच्छाले नै दूध ख्वाइथी त्यही पूतनालाई उहाँले यस्तो गति दिनुभयो जो कुनै धाईलाई दिनुपर्थ्यो अर्थात् त्यसलाई सद्‌गति दिनुभयो। भगावान् श्रीकृष्णका सिवाय अरू को यस्तो दयालु होला जसको शरण नपरूँ? अर्थात् उनी जस्तो दयालु कोही अरू छैन जसको शरणमा पर्न जाऊँ। पूतनाले स्तनहरूमा विष लगाएर आएकी थिई। ईश्वरको धाममा आएकी छ। वासनाको विष मनमा राखेर, हृदयमा राखेर मानिस परमात्माका सामुन्ने जान्छ। त्यसलाई परमात्माको दर्शन हुँदैन। पूतनाले विष लगाएर त आएकी थिई तर मातृभावना लिएर आएकी थिई। आमाको काम गरी पूतनाले। त्यसकारण उसलाई यशोदाको जस्तो गति दिनुभयो। विष दिने पूतनालाई पनि मेरा प्रभुले सद्‌गति दिनुभएको थियो। मेरा प्रभुलाई नौनी-मिश्रीको के कुरा केही वस्तुहरूको आवश्यकतै छैन। उहाँ केवल प्रेम चाहनुहुन्छ। ''प्रेमको वश अर्जुन रथ हाँक्यो भूल गए ठकुराई'', प्रेमको वश परेर अर्जुनले महाभारतको युद्धमा आफ्नो रथ चलाउन लगाए, त्यहाँ प्रभुले म मालिक हुँ भनी ठान्नुभएन। पदार्थबाट प्रसन्न हुने जीव हो र प्रेमबाट प्रसन्न हुने ईश्वर हो। प्रेम गर्ने योग्य एक परमात्मा मात्र हुनुहुँदो रहेछ। यस्तो परम कृपालुलाई छोड़ेर म कसको शरणमा जाऊँ?

शुकदेवजीको मनमा शङ्का थियो कृष्णले माग्लान् म के दिउँला। त्यस शङ्काको निवारण भयो। शुकदेवजी यताउति हेर्न थाल्नुभयो श्लोक कसले भनिरहेछ। त्यहाँ उहाँलाई व्यासजीका शिष्यहरूको दर्शन भयो। शुकदेवजीले उनीहरूसँग सोध्नुभयो ''तपाईंहरू को हुनुहुन्छ? तपाईंहरूले जो श्लोकहरू भनिरहनु भएको थियो ती कसले रचेका हुन्?'' शिष्यहरूले भने-हामी व्यासजीका शिष्य हौं। व्यासजीले हामीलाई यी मन्त्र दिनुभएको हो। यी दुइ श्लोक उदाहरणका निमित्त हुन्। अरू श्लोक-भण्डारमा भरिएर रहेका छन्। व्यास भगवान्‌ले यस्ता श्लोकहरूले भरपूर श्रीमद्‌भागवत् पुराणको रचना गर्नुभएको छ। शुकदेवजीले सोध्नुभयो—''यस्ता कति श्लोक उहाँले बनाउनुभएको छ।'' शिष्यहरूले भने—''यस्ता अठ्ठार हजार श्लोक उहाँले बनाउनुभएको छ।'' आँखा खुला रहे पनि यी श्लोकहरूले समाधि लाग्दछ। आँखा बन्द होस् र समाधि लागोस् यो कुरा सजिलो छ। तर यी आँखा खुला हुँदा हुँदै समाधि लाग्ने भयो। यस्तो समाधि लाग्यो। साधो सहज समाधि भली। शुकदेवजीले सोच्नुभयो, व्यासजी मेरा पिताजी हुनुहुन्छ। म उहाँको उत्तराधिकारी हुँ। म पिताजीका नजीक गएर यो कथा सुन्छु।

आज शुकदेवजीलाई भागवत शास्त्र पढ्ने इच्छा भएको छ। लीलाको सुनेर उहाँको चित्त आकर्षित भएको छ। योगीहरूको धन पनि यस कृष्ण कथाले तान्दछ। निर्ग्रन्थ शुकदेवजीलाई भागवत शास्त्र सुन्ने र अध्ययन गर्ने इच्छा भयो। भागवतको श्लोक सुनरे शुकदेवजीको चित्त आकर्षित भयो। निर्गुण ब्रह्मका उपासक सगुण ब्रह्मका पछि पागल भइरहेछन्। बाह्र वर्षपछि